# दुई शब्द

थोरै र धेरै पहिले अध्ययन गरिएको विषय भएका कारण भावानुवाद गर्न सहज भएन । हजुरहरूलाई तृप्त पार्न चञ्चारूपी दिमाग लिएर सम्भव हुँदैन नै । तै पनि भोक जगाउन यस ग्रन्थले अवश्य नै मद्दत गर्नेछ । आधारभूत ज्ञान बिना ज्योतिषशास्त्रमा प्रयोग हुने शब्दको अर्थ बुझ्न सम्भव नै हुँदैन । तै पनि यस ग्रन्थमा भएका केही कुरा भने सबैले सहजै बुझ्न सक्ने खालका पनि छन् ।

यता उताका कुरा टिपेर लामो गन्थन गर्न जान्दिन, जे जाने त्यो यसै भित्र उतारेको छु । अन्य केही ग्रन्थका फरक कुरा सँगै कोष्ठभित्र राखेको छु ।

मूल श्लोक उतार्न धेरै अशुद्धि भएका कारण आफूसँग भएको पुस्तकले नपुगी अनलाइनबाट अन्य दुई प्रति पुस्तकको सहयोग लिएँ । थप स्पष्ट हुन मुहूर्तचिन्तामणि, के.यन.स्वामीको अनलाइन शब्दकोश आदिको सहयोग लिएँ । सबै कुरा विस्तारमा राख्न यसमा सम्भव हुने नदेखी राखिएन । विषयगत सङ्कलनमा सबै कुरा छर्लङ्ग पार्ने योजना छ ।



अनुवाद भइसकेका ज्योतिषशास्त्रसँग सम्बन्धित तीन वटा ग्रन्थमध्ये यो पहिलो ग्रन्थ धेरथोर मिलाइ टोपलेर पस्किएको छु । अनुवादका क्रममा अन्वय लेख्ने क्रमलाई सुचारु गर्न सकिएन, क्षमा चाहन्छु । अल्पज्ञानका कारण यस ग्रन्थमा जेजस्ता त्रुटी भएका होलान् त्यसलाई क्षम्य ठानी सच्चिन मद्दत गर्न समेत अनुरोध गर्न चाहँै ।

sapkotamps731@gmail.com

# विषयसूची

# श्रीगणेशाय नमः
# प्रथमोऽध्यायः
# शास्त्रोपनयनाध्यायः

### मङ्गलाचरण

**अणोरणुतरः साक्षादीश्वरो महतो महान् ।**
**आत्मा गुहायां निहितो जन्तोर्जयत्यतीन्द्रियः ॥१॥**

अन्वयः - ईश्वरः अणोः अणुतरः महतः साक्षात् महान् अस्ति । जन्तोः गुहायाम् निहितः अतिन्द्रियः आत्माजयति ।

भावार्थः- सूक्ष्मभन्दा पनि अति सूक्ष्म अनि महान्भन्दा पनि अति महान् साक्षात् परमात्मा जो सारा जीवको अन्तरआत्मामा छिरी आँखा आदि गरिएका इन्द्रियबाट जान्न नसकिने गरी बसिरहेका छन् ती सर्वोत्तम हुनाले वन्दनीय छन् ।

### ज्योतिषशास्त्रका प्रणेता

**ब्रह्माचार्यो वसिष्ठोऽत्रिर्मनुः पौलस्त्यलो(रो)मशौ ।**
**मरीचिरङ्गिराव्यासो नारदः शौनको भृगुः ॥२॥**
**च्यवनो यवनो गर्गः कश्यपश्च पराशरः ।**
**अष्टादशैते गम्भीरा ज्योतिःशास्त्रप्रवर्त्तकाः ॥३॥**

अन्वयः - ब्रह्मा, आचार्यः (सूर्यः), वशिष्ठः, अत्रिः, मनुः, पौलस्त्यः, लो(रो)मशः, मरीचिः, अङ्गिराः, व्यासः, नारदः, शौनकः, भृगुः, च्यवनः, यवनः, गर्गः, कश्यपः, पराशरः, एते अष्टादश गम्भीराः ज्योतिःशास्त्र प्रवर्त्तकाः ।

भावार्थः- ब्रह्मा, आचार्य (सूर्य), वसिष्ठ, अत्रि, मनु, पौलस्त्य, लो(रो)मश, मरीचि, अङ्गिरा, व्यास, नारद, शौनक, भृगु, च्यवन, यवनाचार्य, गर्ग, कश्यप र पराशर : ती (यी) अठार ज्योतिषशास्त्रका प्रमुख आविष्कारकर्ता आचार्यहरू हुन् ।

### तीन स्कन्दको ज्योतिष

**सिद्धान्तःसंहिता होरा रूपं स्कन्धत्रयात्मकम् ।**
**वेदस्य निर्मलं चक्षुर्ज्योतिःशास्त्रमनूत्तमम् ॥४॥**

अन्वयः - सिद्धान्तः, संहिता, होरारूपं, स्कन्धत्रयात्मकं ज्योतिःशास्त्रम् वेदस्य अनुत्तमं निर्मलं चक्षुः ।

भावार्थः- सिद्धान्त, संहिता र होरा रूपी तीन स्कन्ध भएको ज्योतिषशास्त्र, वेदको उत्तम एवं पवित्र आँखा हो ।

ज्योतिषशास्त्रको प्रयोजन

**अस्य शास्त्रस्य सम्बन्धो वेदाङ्गमिति कथ्यते ।**
**अभिधेयञ्च जगतः शुभाशुभनिरूपणम् ॥५॥**

अन्वयः - अस्य (ज्योतिःशास्त्रस्य) सम्बन्धः वेदाङ्गं इति कथ्यते, जगतः शुभ-अशुभ निरूपणं अभिधेयम् ।

भावार्थः- यो शास्त्रको सम्बन्ध वेदसँग भएका हुनाले यसलाई वेदाङ्ग भनिन्छ । संसारको शुभ र अशुभ फलका बारेमा निर्णय गर्नु यो शास्त्रको कार्य हो ।

**यज्ञाध्ययनसङ्क्रान्तिग्रहषोडशकर्मणाम् ।**
**प्रयोजनञ्च विज्ञेयं तत्तत्कालविनिर्णयात् ॥६॥**

अन्वयः - यज्ञ, अध्ययन, सङ्क्रान्ति, ग्रह, षोडश कर्मणां तत्तत् काल विनिर्णयात् (अस्य प्रयोजनम्) विज्ञेयम् ।

भावार्थः- यज्ञ, वेदको अध्ययन, सङ्क्रान्ति, ग्रहको अवस्था र सोह्र कर्म (संस्कार) का बारेमा समय तोक्ने काम (मुहूर्त निकाल्ने काम) गर्नु यो शास्त्रको प्रयोजन हो ।



**विनैतदखिलं श्रौतस्मार्त्तकर्म न सिद्ध्यति ।**
**तस्माज्जगद्धितायेदं ब्रह्मणा रचितं पुरा ॥७॥**

अन्वयः - एतद् (ज्योतिःशास्त्रं) विना श्रौत स्मार्त्त कर्म न सिद्ध्यति । तस्मात् (हेतोः) जगत् हिताय इदं पुरा ब्रह्मणा रचितम् ।

भावार्थः- यो (ज्योतिषशास्त्र) नभईकन वेद र स्मृतिले बताएका धर्मकर्म सफल हुँदैनन् । त्यसैले संसारको कल्याणका लागि सर्वप्रथम ब्रह्माले यसलाई रचना गर्नु भएको हो ।

**तं विलोक्याथ तत्सूनुर्नारदो मुनिसत्तमः ।**
**उक्त्वा स्कन्धद्वयं पूर्वं संहितास्कन्धमुत्तमम् ॥८॥**
**वक्ष्ये शुभाशुभफलज्ञप्तये देहधारिणाम् ।**
**होरा स्कन्धस्य शास्त्रस्य व्यवहारप्रसिद्धये ॥९॥**

अन्वयः - तम् (ब्रह्मणानिर्मितम् ज्योतिःशास्त्रम्) विलोक्य, तत्सूनुः (ब्रह्मणः सुतः) मुनिसत्तमः नारदः पूर्वं स्कन्धद्वयम् उक्त्वा उत्तमं संहितास्कन्धम् (उक्तम्) । देहधारिणाम्, शुभ-अशुभ फलज्ञप्तते होरा स्कन्धस्य शास्त्रस्य व्यवहारप्रसिद्धये (च वक्ष्ये) ।

भावार्थः- ब्रह्माका पुत्र मुनिश्रेष्ठ नारदले त्यस (ब्रह्माले रचना गरेको ज्योतिशास्त्र) लाई अवलोकन गरी सिद्धान्त र होरा गरी दुई स्कन्ध रचना गरेपछि उत्तम संहिता स्कन्ध बताउनु (रचना गर्नु) भयो । मानिसलाई जीवनका शुभ र अशुभ फलका बारेमा व्यवहारिक ज्ञान प्रदान गर्न होरास्कन्धले सहयोग प्रदान गर्दछ ।

(अध्याय सूची)

**संज्ञा ह्युक्ताः समस्ताश्च सम्यग् ज्ञात्वा पृथक् पृथक् ।**
**शास्त्रोपनयनाध्यायो ग्रहचारोऽब्दलक्षणम् ॥१०॥**
**तिथिर्वारश्च नक्षत्रं योगं तिथ्वृक्षसंज्ञकम् ।**
**मुहूर्तोपग्रहोऽर्कस्यसङ्क्रान्तिर्गोचरस्तथा ॥११॥**
**चन्द्रताराबलाध्यायः सर्वलग्नार्तवाह्वयः ।**
**आधानपुंससीमन्ता जातनामान्नभुक्तयः ॥१२॥**
**चौलाङ्कुरार्पणं मौञ्जीछुरिकाबन्धनं क्रमात् ।**
**समावर्तनवैवाहप्रतिष्टासद्मलक्षणम् ॥१३॥**
**यात्रा प्रवेशनं सद्योवृष्टिकूर्मविलक्षणम् ।**
**उत्पातलक्षणं शान्तिमिश्रकं श्राद्धलक्षणम् ॥१४॥**
**सप्तत्रिंशद्भिरध्यायैर्नारदीयाख्यसंहिता ।**
**य इमां पठते भक्त्या स दैवज्ञो हि दैववित् ॥१५॥**

अन्वयः - समस्ता सम्यक् ज्ञात्वा पृथक् पृथक् संज्ञा उक्ताः, क्रमात् (यथा)-(१) शास्त्रोपनयनाध्यायः, (२) ग्रहचाराध्यायः, (३) अब्दलक्षणाध्यायः, (४) तिथिलक्षणाध्यायः, (५) वारलक्षणाध्यायः, (६) नक्षत्राध्यायः, (७) योगाध्यायः, (८) तिथ्वृक्षाध्यायः (करणाध्याय), (९) मुहूर्त्ताध्यायः,(१०) उपग्रहाध्यायः, (११) सङ्क्रान्तिलक्षणाध्यायः, (१२) गोचराध्यायः तथा (१३) चन्द्रताराबलाध्यायः, (१४) सर्वलग्नाध्यायः, (१५) (प्रथम) आर्तवाध्यायः, (१६) आधानाध्यायः, (१७) पुंसवनाध्यायः, (१८) सीमन्तोन्नयनाध्यायः, (१९) जातकर्माध्यायः, (२०) नामकरणाध्यायः, (२१) अन्नप्राशनाध्यायः, (२२) चौलाध्यायः, (२३) अङ्कुरार्पणाध्यायः, (२४) उपनयनाध्यायः (मौञ्जी), (२५) छुरिकाबन्धनाध्यायः, (२६) समावर्तनाध्यायः, (२७) विवाहाध्यायः, २८) सुरप्रतिष्ठाध्यायः, (२९) सद्मलक्षणाध्यायः (वास्तु), (३०) यात्राध्यायः, (३१) प्रवेशाध्यायः, (३२)

सद्योवृष्टिलक्षणाध्यायः, (३३) कूर्मविलक्षणाध्यायः, (३४) उत्पातलक्षणाध्यायः, (३५) शान्तिप्रकरणाध्यायः, (३६) मिश्रप्रकरणाध्यायः, (३७) श्राद्धलक्षणाध्यायः, एतद् सप्तत्रिंशद्भिः अध्यायैः नारदीयाख्य संहिता । य इमां भक्त्या पठते स दैवज्ञो हि दैववित् (भवति) ।

भावार्थः- यस ग्रन्थमा सबै कुरा राम्ररी जानी बुझी विषयगत रूपमा बेग्लाबेग्लै ज्ञान दिइएका छन् । शास्त्रको प्रयोजन वा अभिप्राय, ग्रहका गति, सम्वत्सरका लक्षण, तिथि, बार, नक्षत्र, योग, तिथि र नक्षत्रका नाम आदि, मुहूर्त, उपग्रह, सूर्यसङ्क्रान्ति, ग्रहगोचर, चन्द्रमा र ताराको बलसम्बन्धी अध्याय, सबै खालको लग्नका कुरा, पहिलो पटक रजस्वला हुँदा कुरा, गर्धाधान, पुंसवन, सीमन्तोन्नयन, जातकर्म, न्वारान, पास्नी, चौलकर्म, जौ छर्ने विधि, कन्धनी बाँध्ने कार्य र छुरी बाँध्ने कार्य जस्ता कुरा सबै क्रमैले बताइएका छन् । यसैगरी समावर्तन, विवाह, घरका लक्षण, यात्रा, गृहप्रवेश, वर्षा लक्षण, कूर्मलक्षण, उत्पात लक्षण, शान्तिकर्म, मिश्रित अध्याय, श्राद्धका लक्षण बताइएका सैंतीस अध्याय यो नारदीय संहितामा छन् । जसले श्रद्धाभक्तिपूर्वक यो ग्रन्थ पढ्दछ उ नै वास्तविक दैवका बारेमा जान्ने दैवज्ञ (ज्योतिष) हुन्छ ।

**त्रिस्कन्धज्ञो दर्शनीयः श्रौतस्मार्त्तक्रियापरः ।**
**निर्दाम्भिकः सत्यवादी दैवज्ञ दैववित्स्थिरः ॥१६॥**

अन्वयः - श्रौतस्मार्त्तक्रियापरः त्रिस्कन्धज्ञः दर्शनीयः, निर्दाम्भिकः सत्यवादी दैवज्ञः स्थिरदैवविद् (भवति) ।

भावार्थः- वेद र स्मृति अनुसारका धर्मकर्ममा कुशल तथा सिद्धान्त, संहिता र होराको ज्ञाता ज्योतिष दर्शनीय हुन्छ । घमण्ड नगर्ने र साँचो बोल्ने ज्योतिष स्थिर (टिकाउ) ज्योतिष हुन्छ ।

इति श्रीनारदीयसंहितायां शास्त्रोपनयनाध्यायः प्रथमः

✷

नारदीय संहिता अन्तर्गत शास्त्रको प्रयोजन आदि कुरा बताइएको पहिलो अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्वितीयोऽयायः
# ग्रहचारः
# (१) सूर्यचारः

### महिना अनुसारका सङ्क्रान्ति र वर्षको राजा

**चैत्राद्येष्वपि मासेषु मेषाद्याः सङ्क्रमाः क्रमात् ।**
**चैत्रादितिथिवारेशस्तस्याब्दस्य त्वधीश्वरः ॥१॥**

अन्वयः - चैत्राद्येषु मासेषु क्रमात् मेषाद्याः सङ्क्रमा अपि भवन्ति । चैत्रादि तिथिवारेशः तस्य अब्दस्य तु अधीश्वरः (भवति) ।

भावार्थः- चैत्र आदि महिनामा क्रमैले मेष आदि राशिका सङ्क्रान्ति हुन्छन् । चैत्र शुक्ल परेवा तिथि जुन बारमा पर्दछ त्यो बारको मालिक-ग्रह त्यस वर्षको राजा हुन्छ ।

### वर्षका मन्त्री र अनाजका मालिक (सस्येश)

**मेषसङ्क्रान्तिवारेशो भवेत्सोऽपि च भूपतिः ।**
**कर्कटस्य तु वारेशो सस्येशस्तत्फलं ततः ॥२॥**

अन्वयः - (यः) मेषसङ्क्रान्ति वारेशः भवेत् च सोऽपि भूपतिः स्यात् । कर्कटस्य तु वारेशः सस्येशः ततः तत् फलम् ।

भावार्थः- मेष सङ्क्रान्तिका दिन जुन बार पर्दछ त्यो बारका मालिक-ग्रह पनि त्यो वर्षको भूपति (मन्त्री) हुन्छ । कर्कट सङ्क्रान्तिका दिन जुन बार पर्दछ त्यो बारको मालिक-ग्रह त्यो वर्षको सश्येश अर्थात् अनाजको मालिक हुन्छ ।

### वर्षका रस र निरस वस्तुका मालिक

**तुलासङ्क्रान्तिवारेशो रसानामधिपः स्मृतः ।**
**मकराधिपतिः साक्षाद्रसस्याधिपतिः क्रमात् ॥३॥**

अन्वयः - तुलासङ्क्रान्ति वारेशः रसानाम् अधिपः स्मृतः । मकराधिपतिः साक्षात् क्रमात् रसस्य अधिपतिः (भवेत्) ।

भावार्थः- तुला सङ्क्रान्तिका दिन परेको बारका मालिक त्यस वर्षको रसेश (रसको मालिक) हुन्छ । मकर सङ्क्रान्तिका दिन परेको बारका मालिक त्यस वर्षको निरसेश (सुन, वस्त्र आदि सुक्खा वस्तुको मालिक) हुन्छ ।

राजा, मन्त्री वा अनाजको मालिक सूर्य हुने वर्षको फल

**अब्देश्वरश्च भूपो वा सस्येशो वा दिवाकरः ।**
**तस्मिन्नब्दे नृपक्रोधः स्वल्पसस्यार्धवृष्टिकृत् ॥४॥**

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशः वा दिवाकरः । तस्मिने अब्दे नृपक्रोधः, स्वल्पसस्य अर्धवृष्टिकृत् च (भवति) ।

भावार्थः- राजा, मन्त्री वा अनाजको मालिक सूर्य भएको वर्षमा राजा रिसाउने हुन्छन्, अन्न कम उब्जन्छ र पानी कम (आधा) पर्दछ ।



राजा, मन्त्री वा अनाजको मालिक चन्द्रमा हुने वर्षको फल

**अब्देश्वरश्च भूपो वा सस्येशो वा निशाकरः ।**
**तस्मिन्नब्दे करोति क्ष्मां पूर्णां शालिफलेक्षुभिः ॥५॥**

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशः वा निशाकरः, तस्मिन् अब्दे क्ष्मां शालिः फलः इक्षुभिः पूर्णां करोति ।

भावार्थः- राजा, मन्त्री वा अनाजको मालिक चन्द्रमा भएको वर्षमा (चन्द्रमाले) पृथ्वीलाई धान, फल र ऊखुले भरिभराउ पारिदिन्छन् ।

राजा, मन्त्री वा अनाजको मालिक मङ्गल हुने वर्षको फल

**अब्देश्वरश्च भूपो वा सस्येशो वा महीसुतः ।**
**तस्मिन्नब्दे चौरवह्निर्वृष्टिक्षुद्भयकृत्सदा ॥६॥**

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशः वा महीसुतः, तस्मिन् अब्दे सदा चौर वह्नि वृष्टि क्षुत् भयकृत् (भवति) ।

भावार्थः- राजा, मन्त्री वा अनाजका मालिक मङ्गल भएको वर्षमा चोर, आगो, वर्षात् र भोकमरीको डर हुन्छ ।

राजा, मन्त्री वा अनाजको मालिक बुध हुने वर्षको फल

**अब्देश्वरश्च भूपो वा सस्येशो वा शशाङ्कजः ।**
**अतिवायुं स्वल्पवृष्टिं करोति नृपविग्रहम् ॥७॥**

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशो वा शशाङ्कजः (तदा) अतिवायुं स्वल्पवृष्टिं नृपविग्रहं च करोति ।

भावार्थः- राजा, मन्त्री वा अनाजको मालिक बुध भएको वर्षमा वायुको प्रकोप, कम वर्षा र राजाका बीचमा युद्ध हुन्छ ।

राजा, मन्त्री वा अनाजको मालिक बृहस्पति हुने वर्षको फल



**अब्देश्वरश्च भूपो वा सस्येशो वा सुरार्चितः ।**
**करोत्यनुत्तमां धात्रीं यज्ञधान्यार्थवृष्टिभिः ॥८॥**

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशः वा सुरार्चितः, (तदा) यज्ञधान्य अर्थवृष्टिभिः अनुत्तमां धात्रीं करोति ।

भावार्थः- राजा, मन्त्री वा अनाजको मालिक बृहस्पति भएको वर्षमा यज्ञ, अनाज एवं वर्षाले पृथ्वी परिपूर्ण हुन्छ ।

राजा, मन्त्री वा अनाजको मालिक शुक्र हुने वर्षको फल

**अब्देश्वरश्च भूपो वा सस्येशो वा भृगोः सुतः ।**
**करोति सर्वां सम्पूर्णां धात्रीं शालिफलेक्षुभिः ॥९॥**

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशः वा भृगोः सुतः, (तदा) शालि फल इक्षुभिः सम्पूर्णां सर्वां धात्रीं करोति ।

भावार्थः- राजा, मन्त्री वा अनाजको मालिक शुक्र भए त्यो वर्ष धान, फल, ऊखु आदिले पृथ्वी परिपूर्ण हुन्छ ।

राजा, मन्त्री वा अनाजको मालिक शनि हुने वर्षको फल

अब्देश्वरश्च भूपो वा सस्येशो वार्कनन्दनः ।
आतङ्कश्चौरवह्न्यम्बुधान्यभूपभयप्रदः ॥१०॥

अन्वयः - अब्देश्वरः भूपः वा सस्येशः वा (यदि) अर्कनन्दनः, (तदा) आतङ्कः चौर वह्नि अम्बु धान्य भूप भय प्रदः (भवति) ।

भावार्थः- राजा, मन्त्री वा सस्येश शनि भए त्यो वर्ष मृत्यु, आतङ्क, चोर, अग्नि, जल, अनाज र राजाको भय हुन्छ ।

सूर्यमण्डलको लक्षण र फल, सूर्याचार

ज्ञात्वा बलाबलं सम्यग्वदेत्फलनिरूपणम् ।
दण्डाकारेकबन्धे (अर्कवेधे) वा ध्वाङ्क्षाकारेऽथ कीलके ॥११॥
दृष्टेऽर्कमण्डले व्याधिर्भीतिश्चौरार्थनाशनम् ।



अन्वयः - बलाबलं सम्यक् ज्ञात्वा फलनिरूपणम्, वदेत्, अर्कमण्डले दण्डाकारे, कबन्धे वा ध्वाङ्क्षाकारे अथ कीलके दृष्टे व्याधिः भीतिः चौरार्थनाशनम् (भवति) ।

भावार्थः- (यसरी) ग्रहको बल र निर्बल हेरी राम्ररी फल बताउनू । अब सूर्यचार फल बताइन्छ । सूर्यमण्डलमा दण्ड, मुर्कट्टा, काग र कीला वा खम्बाको आकृति देखिए रोग, भय, चोरभय र धनको नाश हुन्छ ।

छत्रध्वजपताकाद्यैराकारैस्तिमिरैर्घनैः ॥१२॥
रविमण्डलगैर्धूमैः स्फुलिङ्गैर्जननाशनम् ।

अन्वयः - छत्र ध्वज पताकाद्यैः आकारै घनैः तिमिरैः रविमण्डलगैः धूमैः स्फुलिङ्गैः जननाशनम् (भवति) ।

भावार्थः- सूर्यमण्डलमा छाता, ध्वजा, पताका, कालो बादल, धुवाँ र आगाको झिल्का देखिए जनताको नाश हुन्छ । (सूर्यको वरिपरि देखिने घेरा वा छायालाई सूर्यमण्डल भनिन्छ) ।

**सूर्यको रङ र फल**

**सितरक्तैः पीतकृष्णैस्तैर्मिश्रैर्विप्रपूर्वकान् ॥१३॥**
**हन्ति द्वित्रिचतुर्भिर्वा राज्ञोऽन्यत्र जनक्षयः (अन्य जन सङ्क्षयः) ।**
**ऊर्ध्वैर्भानुकरैस्ताम्रैर्नाशं याति च भूपतिः ॥१४॥**

अन्वयः - सितरक्तैः पीतकृष्णैः तैः मिश्रैः विप्रपूर्वकान् हन्ति । द्वित्रिचतुर्भिर्वा राज्ञः अन्यत्र जनक्षयः । ऊर्ध्वैः भानुकरैः ताम्रे स भूपतिः नाशं (याति) ।

भावार्थः- सेतो-रातो पहेँलो-कालो वा यी रङ मिश्रित रङको सूर्य देखिए क्रमैले ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र र अन्त्यजलाई कष्ट हुन्छ । दुई, तीन वा चार थरी रङ एकैपटक देखिए राजाको नभए प्रजाको नाश हुन्छ । सूर्यको ऊर्ध्वगामी (माथितिर जाने) किरण ताम्रवर्णको देखिए राजाको नाश हुन्छ ।

**पीतैर्नृपसुतः श्वेतैः पुरोधाश्चित्रितैर्जनाः ।**
**धूम्रैर्नृपः पिशङ्गैश्च जलदोधो मुखैस्तथा ॥१५॥**



अन्वयः - पीतैः नृपसुतः, श्वेतैः पुरोधाः, चित्रितैः जनाः, धुम्रैः नृपः, पिशङ्गैः जलदः तथा अधोमुखैः (भानुकरैः अपि फलं वाच्यम्) ।

भावार्थः- सूर्यको ऊर्ध्वगामी किरण पहेँलो देखिए राजकुमार, सेतो देखिए पुरोहित, चित्रविचित्र देखिए जनता, धूवाँ रङको देखिए राजा तथा पहेँलो-कालो वर्णको देखिए बादलको क्षती हुन्छ । यसरी नै अधोमुख किरणको फलका बारेमा पनि जान्नू ।

**सूर्यका उदयास्तकालीन किरणको रङ्ग र त्यसको फल**

**उदयास्तमये काले स्वास्थ्यं तैः पाण्डुसन्निभैः ।**
**भास्करस्ताम्र सङ्काशःशिशिरे कपिलोऽपि वा ॥१६॥**
**कुङ्कुमाभौ वसन्तर्त्तौ कपिलो वापि शस्यते ।**

अन्वयः - भास्करः उदयास्तमये काले पाण्डुसन्निभैः तैः स्वास्थ्यं (नश्यति) । शिशिरे ताम्रसङ्काशः कपिलो अपि वा, वसन्तः ऋतौ कुङ्कुमाभः, कपिलो वापि शस्यते ।

भावार्थः- उदाउने र अस्ताउने समयमा सूर्यको किरण पहेँलो भए त्यो स्वास्थ्य नाशक हुन्छ । शिशिर ऋतुमा तामा रङको वा कैलो तथा वसन्त ऋतुमा केसर रङको वा कैलो वर्ण शुभ हुन्छ ।

**अपाण्डुरः स्वर्णवर्णो ग्रीष्मे चित्रो जलागमे ॥१७॥**
**पद्मोदराभः शरदि हेमन्ते लोहितच्छविः ।**
**हेमन्ते प्रावृषि ग्रीष्मे रोगाणां वृष्टिभीतिकृत् ॥१८॥**

अन्वयः - ग्रीष्मे अपाण्डुरः स्वर्णवर्ण (वा), जलागमे चित्रः, शरदि पद्मोदराभः, हेमन्ते लोहितः छविः, हेमन्ते प्रावृषि ग्रष्मे रोगाणां वृष्टिभीतिकृत् ।

भावार्थः- यस्तो सूर्य उदाउँदा र अस्ताउँदाको किरण ग्रिष्ममा सेतो वा सुनौलो, वर्षामा चित्रविचित्रको, शरदमा कमलको पराग जस्तो र हेमन्तमा रातो वर्णको भए रोग र अनावृष्टिको डर हुन्छ ।

सूर्यको आकृति र फल



**पीताभकृष्णवर्णोऽपि लोहितस्तु यथाक्रमात् ।**
**इन्द्रचापार्द्धमूर्तिश्चेत् भानुर्भूपविरोधकृत् ॥१९॥**

अन्वयः - पीताभः कृष्णवर्णः अपि लोहितः तु यथा क्रमात् । इन्द्रचापः अर्द्धमूर्तिः चेत् भानुः भूपविरोधकृत् (भवति) ।

भावार्थः- आकाशमा सूर्यको आकृति आधा धनुषको जस्तो र रङ पहेँलो, कालो वा रातो भए राजाहरूका बीचमा वैमनस्यता पैदा गराउँदछ ।

सूर्यबिम्ब र त्यसको फल

**मयूरपत्रसङ्काशो द्वादशाब्दं न वर्षति ।**
**शशरक्तनिभे भानौ सङ्ग्रामो ह्यचिराद् भवेत् ॥२०॥**

अन्वयः - (यदा रविः) मयूपत्रसङ्काशो (तदा) द्वादशाब्दं न वर्षति । (एवम्) भानौ शशरक्तनिभे (सति) ही अचिरात् सङ्ग्रामो भवेत् ।

भावार्थः- सूर्यको बिम्ब मुजुरको प्वाँखजस्तै रङको देखिए बाह्र वर्षसम्म पानी पर्दैन । सूर्यको बिम्ब खरायोको रगतसमान भए वा देखिए चाँडै युद्ध हुन्छ ।

**चन्द्रस्य सदृशो यत्र चान्यं राजानमादिशेत् ।**
**अर्के श्यामे कीटभयं भस्माभे शस्त्रतो भयम् ॥२१॥**

अन्वयः - यत्र चन्द्रस्य सदृशो (दृश्यते) अन्यं राजानं (च) आदिशेत् । अर्के श्यामे कीटभयम्, भस्माभे शस्त्रतो भयम् (आदिशेत्) ।

भावार्थः- चन्द्रमा जस्तै सूर्यबिम्ब देखिए राजा फेरिन्छन् । कालो सूर्य देखिए कीराको र खरानी रङको देखिए हतियारको डर हुन्छ ।

सूर्यमा देखिने अन्य लक्षण र त्यसको फल

**छिद्रेक्र्कमण्डले दृष्टे तदा राजविनाशकृत् ।**
**घटाकृतिः क्षुद्भयकृत् पुरहा तोरणाकृतिः ॥२२॥**
**छत्राकृतिर्देशहन्ता खण्डभानुर्नृपान्तकृत् ।**
**उदयास्तमये भानोर्विद्युदुल्काशनिर्यदि ॥२३॥**
**तदा नृपवधो ज्ञेयस्त्वथवा राजविग्रहः ।**

अन्वयः - अर्कमण्डले छिद्रे दृष्टे तदा राजविनाशकृत्, घटाकृति क्षुद्भयकृत्, तोरणाकृति पुरहा (भवति) । छत्राकृतिः देशहन्ता, खण्डभानुः नृपान्तकृत् (भवति) । यदि भानोः उदयास्तमये (काले) विद्युत्, उल्का, अशनिः तदा नृपवधो ज्ञेयः अथवा राजविग्रहश्च (भवति) ।

भावार्थः- सूर्यमण्डलमा : प्वाल देखिए राजाको नाश हुन्छ, गाग्रोजस्तो आकृति देखिए तिर्खाको डर हुन्छ, छाप लागेको झण्डा जस्तो देखिए गाऊँको नाश हुन्छ, छाताको आकार देखिए देशको नाश हुन्छ । बीचबीचमा टुटेको सूर्यबिम्ब देखिए राजाको नाश हुन्छ । सूर्य उदाउने र अस्ताउने बेलामा बिजुली चम्के, उल्का वा राँको खसे या चटयाङ परे राजाको हत्या वा राजविग्रह हुन्छ ।

सूर्य वा चन्द्र मण्डलको आकार, रङ र त्यसको फल

**पक्षं पक्षार्द्धमर्केन्दू परिविष्टावहर्निशम् ॥२४॥**
**राजानमन्यं कुरुतो लोहितावुदयास्तगौ ।**

**उदयास्तमये भानुराछिन्नः शस्त्रसन्निभैः ॥२५॥**
**घनैर्युद्धं खरोष्ट्राद्यैः पापरूपैर्भयप्रदः ।**

अन्वयः - अर्केन्दू पक्षं पक्षार्द्धं अहर्निशम् परिविष्टौ, उदयास्तगौ लोहितौ (वा) अन्यं राजानं कुरुतः । भानुः उदयास्तमये (काले) शस्त्रसन्निभैः घनैः आछिन्नः । खरोष्ट्राद्यैः पापरूपैः घनैः (आछिन्नस्तदा) भयप्रदः युद्धम् (भवति) ।

भावार्थः- सूर्य वा चन्द्र पन्ध्र दिन वा त्यसको आधा (सात) दिनसम्म लगातार परिवेशमा रहेमा वा उदाउँदा र अस्ताउँदा रातो वर्णको भएमा राजा बदलिन्छन् । सूर्य उदाउँदा वा अस्ताउँदा शस्त्र आकारको देखिए, बादलले काटिएको देखिए वा आकाशमा सूर्य गधा-ऊँट जस्तो पापी आकारको बादलले घेरिएको देखिए भीषण युद्ध हुन्छ । (परिवेश : सूर्यचन्द्र आदिमा देखिने बाटुलो घेरा) ।

शुभ सूर्य

**ऋतुकाला(ऋतुकाल)नुरूपोऽर्कः सौम्यमूर्तिः शुभावहः ॥२६॥**
**रविचारमिदं सम्यक् ज्ञातव्यं तत्त्ववेदिभिः ।**

अन्वयः - ऋतुकालानुरूपः सौम्यमूर्ति अर्कः शुभावहः इदं रविचारं सम्यग् तत्त्ववेदिभिः ज्ञातव्यम् ।

भावार्थः- ऋतुकाल (यज्ञकाल) अनुसारका र सौम्यमूर्ति भएका सूर्य शुभ र फलदायी हुन्छन् । तत्व जान्नेहरूमा यो रविचार सम्बन्धी कुराको सबै ज्ञान हुनु पर्दछ ।

इति नारदीयसंहितायां द्वितीयाध्याये सूर्यचारः

✷

नारदीय संहिता अन्तर्गत सूर्यसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको सूर्यचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷



## (२) चन्द्रचारः

चन्द्रमाको उठेको भाग अनुसारको फल

**याम्यश्रृङ्गोन्नतश्चन्द्रोशुभदो मीनमेषयोः ।**
**सौम्यश्रृङ्गोन्नतः श्रेष्ठोनृयुग्मकरयोस्तथा ॥१॥**

अन्वयः - मीनमेषयोः याम्यशृङ्गोन्नतः चन्द्रः अशुभदः तथा नृयुग्मकरयोः सौम्यश्रृङ्गोन्नतः (चन्द्रः) श्रेष्ठः (वाच्यः) ।

भावार्थः- मीन र मेष राशिमा गएका चन्द्रमाको याम्यश्रृङ्ग (दक्षिणी कुनु) उच्च हुनु अशुभ तथा मिथुन र मकर राशिमा गएका चन्द्रमाको सौम्यश्रृङ्ग (उत्तरी कुनु) उच्च हुनु श्रेष्ठ हुन्छ ।

द्रष्टव्यः- द्वितीयाका चन्द्रमाको उत्तरी वा दक्षिणी छेउलाई चन्द्रश्रृङ्ग भनिन्छ ।

राशि अनुसार चन्द्रमाको आकार



**समोऽक्षघटयोः कर्कसिंहयोः शरसन्निभः ।**
**चापकीटभयोः स्थूलः शूलवत्तौलिकन्ययोः ॥२॥**

अन्वयः - समोऽक्षघटयोः कर्कसिंहयोः शरसन्निभः चापकीटभयोः स्थूलः तौलकन्ययोः (चन्द्रः) शूलवत् (भवति) ।

भावार्थः- चन्द्रमा वृष र कुम्भ राशिमा हुँदा दुवै कान समान, कर्कट र सिंह राशिमा हुँदा वाणको आकारका, धनु र वृश्चिक राशिमा हुँदा मोटा तथा तुला र कन्यामा शूल समानका हुन्छन् ।

चन्द्रमाको उदय अनुसारको फल

**विपरीतोदितश्चन्द्रोदुर्भिक्षकलहप्रदः ।**
**यथोक्तोभ्युदितश्चेन्दुः प्रतिमासं सुभिक्षकृत् ॥३॥**

अन्वयः - प्रतिमासं यथोक्तः अभ्युदितः इन्दुः सुभिक्षकृत् (भवति) । (तथा च) विपरीतः (उदितः) चन्द्रः दुर्भिक्षकलशप्रदः (भवति) ।

भावार्थः- हरेक महिना यथोक्त प्रकारले (सामान्य किसिमले) उदाएका चन्द्रमा सहकाल प्रदायक र उल्टो उदाएका चन्द्रमा अनिकाल र कलह प्रदायक हुन्छन् ।

नक्षत्र अनुसार चन्द्रमाको उठेको भागको फल

**आषाढाद्वयमूलेन्द्रधिष्ण्यानां याम्यगः शशिः ।**
**अग्निप्रदस्तोयचरवनसर्पविनाशकृत् ॥४॥**

अन्वयः - आषाढाद्वयः (पूर्वाषाढा, उत्तराषाढा), मूलः, इन्द्रः धिष्ण्यानां याम्यगः शशिः अग्निप्रदः तोयचरः वन सर्प विनाशकृत् (भवति) ।

भावार्थः- दुवै आषाढा, मूल र ज्येष्ठा नक्षत्रमा यदि चन्द्रमाको दक्षिणी भाग उच्च भए त्यो चन्द्रमा अग्निप्रद तथा जलचर जीव, वन  र सर्पको विनाश गर्ने खालको हुन्छ ।

**विशाखामैत्रयोर्याम्यपार्श्वगः पापकृत्सदा ।**
**मध्यगः पितृदैवत्ये द्विदैवत्ये शुभोत्तरे ॥५॥**



अन्वयः - सदा विशाखामैत्रयोर्याम्यपार्श्वगः पापकृत् । पितृदैवत्यै मध्यगः (तथा) द्विदैवत्ये उत्तरे शुभः ।

भावार्थः- विशाखा र अनुराधा नक्षत्रमा यदि चन्द्रमाको दक्षिणी भाग उच्च हुन्छ भने त्यो सधैं पापकारक हुन्छ । यसैगरी मघामा दक्षिणी भाग उच्च भए मध्यम हुन्छ भने विशाखामा उत्तरी भाग उच्च भए शुभ हुन्छ ।

नक्षत्रमा हुने बसाई अनुसार चन्द्रमाको फल

**सम्प्राप्य पौष्णभात् रौद्रात्षट् ऋक्षाणि शशी शुभः ।**
**मध्यगो द्वादशर्क्षाणि अतीत्य नव वासवात् ॥६॥**

अन्वयः - पौष्णभात् रौद्रात् षट् ऋक्षाणि सम्प्राप्य, (तदनन्तरं) द्वादशर्क्षाणि मध्यमः (तथा) वासवात् नव ( नक्षत्राणि) अतीत्य शशी शुभः (भवति) ।

भावार्थः- चन्द्रमा रेवती देखिका छ नक्षत्रसम्म हुँदा शुभ फल दायक, आर्द्राबाट बाह्र नक्षत्रसम्म हुँदा मध्यम फल दायक तथा ज्येष्ठाबाट नौ नक्षत्रसम्म हुँदा पुनः शुभफल दायक हुन्छ ।

### अर्धसंज्ञक नक्षत्र

**यमेन्द्राहिभतोयेशा मरुतश्चार्द्धतारकाः ।**
**ध्रुवादिति द्विदैवा स्युरध्यर्द्धाश्च पराः समाः ॥७॥**

अन्वयः - यम, इन्द्र, अहिभ तोयेशा मरुतश्च (एते) अर्द्धतारकाः । ध्रुवा, अदिति, द्विदैव (एते) अध्यर्द्धाश्च । पराः समाः (स्युः) ।

भावार्थः- भरणी, ज्येष्ठा, अश्लेषा, पूर्वाषाढा र स्वाती यी अर्द्धसंज्ञक नक्षत्र हुन् । तीनै उत्तरा, रोहिणी, पुनर्वसु र विशाखा यिनलाई पनि अर्द्धसंज्ञक नक्षत्र भनिन्छ । बाँकी नक्षत्र सम हुन् ।

### चन्द्रमाका विविध आकृति र फल

**याम्यश्रृङ्गोन्नतः नेष्टः सौम्यश्रृङ्गोन्नतः शुभः ।**

**शुक्ले पिपीलिकाकारे हानिर्वृद्धिर्यथाक्रमात् ॥८॥**

अन्वयः - याम्यशृङ्गोन्नतः नेष्टः सौम्यश्रृङ्गोन्नतः शुभः । शुक्ले (चन्द्रबिम्बे) पिपीलिकाकारे, यता क्रमात् हानिः वृद्धिश्च (भवति) ।

भावार्थः- चन्द्रमाको दक्षिणी श्रृङ्ग उच्च हुनु अशुभ तथा उत्तरी श्रृङ्ग उच्च हुनु शुभ हुन्छ । चन्द्रमाको आकृति (बिम्ब) मा यदि कमिला जस्तो चिह्न देखिए कृष्णपक्ष भए हानी र शुक्लपक्ष भए वृद्धि हुन्छ ।

**सुभिक्षकृद्विशालेन्दुरविशालोर्घनाशनः ।**
**अधोमुखे शस्त्रभयं कलहो दण्डसन्निभेः ॥९॥**

अन्वयः - विशालेन्दुः सुभिक्षकृत्, अविशालः अर्घनाशनः । अधोमुखे (चन्द्रे) शस्त्रभयम्, (तथा) दण्डसन्निभे कलहः ।

भावार्थः- चन्द्रमा विशाल देखिए सहकाल हुन्छ, सानो आकारको देखिए अनिकाल हुन्छ । चन्द्रमा अधोमुखी देखिए शस्त्रभय र लौरोजस्तो देखिए झगडा हुन्छ ।

**चन्द्रमण्डलको असर**

**कुजाद्यैर्निहते श्रृङ्गे मण्डले वा यथाक्रमात् ।**
**क्षेमार्घवृष्टिनृपतिजनानां नाशकृच्छशी ॥१०॥**

अन्वयः - शशिश्रृङ्गे मण्डले वा कुजाद्यैः (ग्रहैः) निहते, यथा क्रमात् क्षेम, अर्घ, वृष्टिः, नृपतिः जनानां नाशकृत् (भवति) ।

भावार्थः- यदि चन्द्रश्रृङ्ग या चन्द्रमण्डल मङ्गल-बुध-बृहस्पति-शुक्र वा शनिले आहत छ भने क्रमैले कुशलता, सकाल, वृष्टि, राजखलक र जनतालाई नाश गर्ने हुन्छ ।

इति नारदीयसंहितायां द्वितीयाध्याये चन्द्रचारः

नारदीय संहिता अन्तर्गत चन्द्रमासम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको चन्द्रचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो





## (३) भौमचारः

उष्ण-वक्री मङ्गलको फल

सप्ताष्टनवमर्क्षेषु स्वोदयाद्वक्रिते कुजे ।
तद्वक्रमुष्णं तस्मिन्स्यात् प्रजापीडाग्निसम्भवः ॥१॥

अन्वयः - कुजे स्वोदयात् सप्त, अष्ट, नवम ऋक्षेषु विक्रिते तद् वक्रम् उष्णम् (उष्णसंज्ञकम्) तस्किने प्रजापीडा अग्निसम्भवः (भवति) ।

भावार्थः- आफ्नो उदयकालीन नक्षत्रबाट सातौँ, आठौँ वा नवौँ नक्षत्रमा मङ्गल वक्री भए त्यसलाई उष्ण-वक्री भनिन्छ । यस अवस्थामा आगोको डर तथा प्रजापीडा हुन्छ ।

द्रष्टव्यः- ग्रहको बाङ्गो वा उल्टो हिँडाइलाई वक्री तथा सिधा हिँडाइलाई मार्गी भनिन्छ ।

दशौँ, एघारौँ वा बाह्रौँ नक्षत्रमा मङ्गल वक्री भएको फल



दशमैकादशे ऋक्षे द्वादशे वा प्रतीपगे ।
वक्रमल्पसुखं तस्मिन् तस्य वृष्टिविनाशनम् ॥२॥

अन्वयः -दशमे, एकादशे द्वादशे वा ऋक्षे प्रतीपगे वक्रं (तदा) तस्मिन् (योगे) अल्पसुखं वृष्टिनाशनं (च भवेत्) ।

भावार्थः- दशौँ, एघारौँ वा बाह्रौँ नक्षत्रमा मङ्गल वक्री हुँदा थोरै सुख हुन्छ र खडेरी पर्दछ ।

व्याल-वक्री मङ्गल र त्यसको फल

कुजे त्रयोदशे ऋक्षे वक्रिते वा चतुर्दशे ।
व्यालाख्यवक्रं तत्तस्मिन् सस्यवृद्धिरहेर्भयम् ॥३॥

अन्वयः - कुजे त्रयोदशे चतुर्दशे वा ऋक्षे वक्रिते तत् व्यालाख्य वक्रम्, तस्मिन् सस्य वृद्धिः अहेर्भयम् (च भवेत्) ।

भावार्थः- उदय नक्षत्रबाट तेह्रौँ वा चौधौँ नक्षत्रमा मङ्गल बक्री भएको व्याल नामको वक्रीमा अनाजमा वृद्धि र सर्पभय हुन्छ ।

रुधिरानन-वक्री मङ्गल र त्यसको फल

**पञ्चदशे षोडशर्क्षे तद्वक्रं रुधिराननम् ।**
**सुभिक्षकृद्भयं रोगान् करोति यदि भूमिजः ॥४॥**

अन्वयः - (यदि भूमिजः) पञ्चदशे षोडशर्क्षे (वा वक्रं करोति) तद् वक्रं रुधिराननं (नाम) तत्र सुभिक्षकृत् भयम्, रोगान् (च) करोति ।

भावार्थः- उदय नक्षत्रबाट पन्ध्रौं वा सोह्रौं नक्षत्रमा मङ्गल वक्री भएको रुधिरानन नामको वक्रीमा सहकाल, भय र रोग हुन्छ ।

असिमुसल-वक्री मङ्गल र त्यसको फल

**अष्टादशे सप्तदशे तदासिमुसलं स्मृतम् ।**

**दस्युभिर्धनहान्यादि तस्मिन्भौमे प्रतीपगे ॥५॥**

अन्वयः - अष्टादशे सप्तदशे भौमे प्रतीपगे तथा असिमुसलं स्मृतम्, तस्मिन् दस्युभिः धनहान्यादि (भवेत्) ।

भावार्थः- उदय नक्षत्रबाट अठारौँ वा सत्रौँ नक्षत्रमा मङ्गल वक्री भएको असिमुसल नामको वक्रीमा चोरडाँकाबाट धन हानी हुने डर हुन्छ ।

त्रिलोक नाशक मङ्गल

**फाल्गुन्योरुदितो भौमो वैश्वदेवे प्रतीपगः ।**
**अस्तगश्चतुरास्यर्क्षे लोकत्रयविनाशकृत् ॥६॥**

अन्वयः - फाल्गुन्योरुदितो भौमः वैश्वदेवे प्रतीपगः चतुरास्येर्क्षे अस्तगश्च (तदा) लोकत्रयविनाशकृत् (भवेत्) ।

भावार्थः- मङ्गल पूर्वफाल्गुनी वा उत्तराफाल्गुनी नक्षत्रमा उदाई, उत्तराषाढा नक्षत्रमा वक्री भई रोहिणी नक्षत्रमा अस्ताए तीन वटै लोकलाई नाश गर्दछ ।

### राजाका लागि हानिकारक मङ्गल

**उदितः श्रवणे पुष्ये वक्रतो नृपहानिदः ।**
**यद्दिग्भ्योऽभ्युदितो भौमस्तद्दिग्भूपभयप्रदः ॥७॥**

अन्वयः - श्रवणे उदितः, पुष्ये वक्रतो नृपहानिदः । भौमः यद्दिग्भ्योऽभ्युदितो तद् दिग्भूपभयप्रदः ।

भावार्थः- मङ्गल श्रवण नक्षत्रमा उदाई पुष्य नक्षत्रमा वक्री भए राजालाई हानी गर्दछ । यस्तो मङ्गल जुन दिशामा उदाउँदछ त्यस देशका राजाका लागि डर पैदा गराउने खालको हुन्छ ।

### मघाको मङ्गल

**मघा मध्यगतो भौमस्तत्रैवश्च प्रतीपगः ।**
**अवृष्टिशस्त्रभयदः पाण्डुदेशाधिपान्तकृत् ॥८॥**

अन्वयः - मघामध्यगतः भौमः (यदि) तत्रैव च प्रतीपगः (तदा) अवृष्टिशस्त्रभयदः पाण्डुदेशाधिपान्तकृत् ।



भावार्थः- मङ्गल मघ नक्षत्रको मध्यमा उदाई मघा नक्षत्रमै वक्री भए खडेरी, हतियारको डर र पाण्डु देशका राजाको मरण हुन्छ ।

### कुनै नक्षत्रको मूल तारालाई बाधा पुग्दाको फल

**पितृद्विदैवधातॄणां भिद्यन्ते योगतारकाः ।**
**दुर्भिक्षं मरणं रोगं करोति यदि भूमिजः ॥९॥**

अन्वयः - यदि भूमिजः पितृद्विदैव धातृणां योगतारकाः भिद्यन्ते (तदा) दुर्भिक्षं मरणं रोगं (च) करोति ।

भावार्थः- मङ्गल मघा, विशाखा र रोहिणी नक्षत्रबाट योगतारा (कुनै नक्षत्रको मुख्य तारा) विद्ध भए अनिकाल, मरण तथा रोग हुन्छ ।

### रोहिणी र मङ्गल

**त्रिषूत्तरासु रोहिण्यां नैरृत्ये श्रवणेन्दुभे ।**

**अवृष्टिदश्चरन् भौमे रोहिणी दक्षिणे स्थितः ॥१०॥**

अन्वयः - त्रिषूत्तरासु रोहिण्यां नैरृते श्रवणे इन्दुभे चरन् भौमो रोहिणी दक्षिणे स्थितः अवृष्टिदः (भवेत्) ।

भावार्थः- तीनै उत्तरा, रोहिणी, मूल, श्रवण र मृगशिरामा रहँदा यदि मङ्गल रोहिणीको दक्षिणी भागमा छ भने त्यसबेला खँडेरी पर्दछ ।

### मङ्गलको नक्षत्रमा हुने गति

**भूमिजः सर्वधिष्ण्यानामुदग्गामी शुभप्रदः ।**
**याम्यगोनिष्टफलदो भेदे भेदकरो नृणाम् ॥११॥**

अन्वयः - सर्वधिष्ण्यानाम् उदग्गामी भूमिजः शुभप्रदः, याम्यगः अनिष्टफलदः, भेदे नृणां भेदकरो (भवेत्) ।

भावार्थः- मङ्गल कुनै पनि नक्षत्रमा उत्तरतिरबाट गए शुभ र दक्षिण तिरबाट गए अनिष्ट हुन्छ । भेद हुँदा (छेडिंदा) राजाका बीचमा विभेद पैदा गराउँदछ ।



इति श्रीनारदीयसंहितायां द्वितीयाध्याये भौमचारः

✷

नारदीय संहिता अन्तर्गत मङ्गलसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको भौमचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷



# (४) बुधचारः

### बुध उदाउँदाका लक्षण

**विनोत्पातेन शशिजः कदाचिन्नोदयं व्रजेत् ।**
**अनावृष्ट्यग्निभयकृदनर्थं नृपविग्रहम् ॥१॥**

अन्वयः - शशिजः विनोत्पादेन कदाचिद् उदयं न व्रजेत् । अनावृष्टि, अग्निभयकृत् अनर्थं नृपविग्रहम् (च करोति) ।

भावार्थः- उत्पात नमच्चाईकन बुध कहिल्यै उदाउँदैन । यो उदाउँदा अनावृष्टि, अग्निभय, अनर्थ तथा राजाका बीचमा विग्रह (सन्धिभङ्ग) हुन्छ ।

### बुधको नक्षत्रहरूमा हुने भ्रमण र फल

**वसु श्रवण विश्वेन्दु धातृभेषु चरन् बुधः ।**
**भिनत्ति यदि तत्तारामवृष्टि व्याधिभीतिकृत् ॥२॥**



अन्वयः - बुधः, वसु, श्रवण, विश्व, इन्दु, धातृ भेषु चरन् यदि तत्तारां भिनत्ति (तदा) अवृष्टि व्याधि भीतिकृत् ।

भावार्थः- धनिष्ठा, श्रवण, उत्तराषाढा, मृगशिरा र रोहिणी नक्षत्रमा गमन गर्दै रहँदा यिनलाई वेध पनि गरे अनावृष्टि, व्याधि, र भयकारक हुन्छ ।

द्रष्टव्यः समयको त्यो मान जसमा एक तिथि वा नक्षत्र वा ग्रहलाई अर्को तिथि वा नक्षत्र वा ग्रहको घडी र पलाले छुने क्रियालाई वेध भनिन्छ ।

**आर्द्रादि पितृभान्तेषु दृश्यते यदि चन्द्रजः ।**
**तदा दुर्भिक्षकलहो रोगाणां वृद्धिभीतिकृत् ॥३॥**

अन्वयः - चन्द्रजः यदि आर्द्रादि पितृभान्तेषु दृश्यते तदा दुर्भिक्षकलहो रोगाणां वृद्धिभीतिकृत् (भवेत्) ।

भावार्थः- आर्द्रादेखि मघा नक्षत्रसम्म बुध देखिए त्यसले अनिकाल, कलह, रोगवृद्धि र भय पैदा गराउँदछ ।

हस्तादि रसतारासु विचरन् इन्दुनन्दनः ।
क्षेमं सुभिक्षमारोग्यं कुरुते पशुनाशनम् ॥४॥

अन्वयः - इन्दुनन्दनः हस्तादि रसतारासु विचरन् क्षेमं सुभिक्षं आरोग्यं (विदधाति तथा) पशुनाशनम् (च) कुरुते ।

भावार्थः- हस्ता नक्षत्रदेखि ज्येष्ठानक्षत्रसम्म रहँदा बुधले सुखशान्ति, सहकाल र निरोगिता दिन्छ तर पशुको विनाश गर्दछ ।

अहिर्बुध्न्यार्यमाग्नेययमभेषु चरन् यदि ।
धातुक्षयञ्च जन्तूनां करोति शशिनन्दनः ॥५॥

अन्वयः - शशिनन्दनः अहिर्बुध्न्य अर्यमा आग्नेय-यमभेषु चरन् यदि जन्तूना धातुक्षयं (च) करोति ।

भावार्थः- उत्तर भाद्रपदा, उत्तराफाल्गुनी, कृत्तिका र भरणी नक्षत्रमा बुध रहँदा जन्तुको धातुक्षय गर्दछ अर्थात् धातुक्षय हुने सुकेनाश, प्रमेह आदि जस्ता रोग निकाल्दछ ।



दास्रवारुणनैर्ऋत्यरेवतीषु चरन् बुधः ।
भिषक्तुरगवाणिज्यवृत्तीनां नाशदस्तदा ॥६॥

अन्वयः - बुधः दास्रवारुणनैर्ऋत्यरेवतीषु (यदा) चरन् (भवेत्) तदा भिषक् तुरग वाणिज्यवृत्तीनां नाशदः (स्यात्) ।

भावार्थः- अश्विनी, शतभिषा, मूल र रेवतीमा बुध जाँदा त्यसले वैद्य, घोडा-व्यवशायी र व्यापारीको नाश गर्दछ ।

पूर्वात्रये चरन् सौम्यो योगतारां भिनत्ति चेत् ।
क्षुच्छस्त्रामय चौरेभ्यो भयदः प्राणिनस्तदा ॥७॥

अन्वयः सौम्यो पूर्वात्रये चरन् चेत् योगतारां भिनत्ति तदा प्राणिनः क्षुत्, शस्त्र, आमय चौरेभ्यः भयदः (भवेत्) ।

भावार्थः- तीनै पूर्वामा बुध गई तिनलाई वेध पनि गरे भोक-हतियार-रोग र चोरबाट प्राणीलाई डर पैदा गराउँदछ ।

बुधका विभिन्न किसिमका गति र त्यसको फल

याम्याग्निधातृवायव्यधिष्ण्येषु प्राकृता गतिः ।
ईशेन्दुसार्पपित्र्येषु ज्ञेया मिश्राह्वया गतिः ॥८॥

अन्वयः - (बुधस्य) याम्य, अग्नि, धातृ, वायव्य, धिष्ण्येषु प्राकृता गतिः । (तथा) ईश, इन्दु, सार्प, पित्र्येषु मिश्राह्वया गतिः ज्ञेया ।

भावार्थः- बुधको भरणी, कृत्तिका, रोहिणी र स्वातीमा प्राकृता-गति तथा आर्द्रा, मृगशिरा, अश्लेषा र मघामा मिश्रा-गति हुन्छ ।

संक्षिप्तादितिभाग्यार्यमेज्यधिष्णेषु या गतिः ।
गतिस्तीक्ष्णाजचरणेऽहिर्बुध्न्येन्द्राश्विभेषु च ॥९॥
(गतिस्तीक्ष्णाऽज चरणेऽहिर्बुध्न्येन्द्राश्वि पूषसु)

अन्वयः - अदिति, भाग्य, अर्यमा, इज्यधिष्ण्येषु या गतिः (सा) संक्षिप्ता (नाम) अजचरण, अहिर्बुध्न्य, इन्द्र, अश्विभेषु च गतिः तीक्ष्णा (स्यात्) ।

भावार्थः- बुधको पुनर्वसु, दुवै फाल्गुनी र पुष्यमा संक्षिप्ता र दुवै भाद्रपदा, ज्येष्ठा र अश्विनीमा तीक्ष्णा-गति हुन्छ ।

योगान्तिकाम्बु विश्वाख्यमूलगस्येन्दुजस्य च ।
(योगान्तिकान्त्य विश्वेन्दुमूलगस्येन्दुजस्य च)
घोरागतिर्हरित्वाष्ट्रवसुवारुणभेषु च ॥१०॥

अन्वयः - अम्बु, विश्वाख्य, मूलगस्येन्दुजस्य च योगान्तिका (तथा) हरित्वाष्ट्रवसुवारुणभेषु च घोरा गतिः (भवेत्) ।

भावार्थः- बुध दुवै आषाढा र मूलमा हुँदा योगान्तिका र श्रवण, चित्रा, धनिष्ठा र शतभिषामा हुँदा त्यसलाई घोरा-गति भनिन्छ ।

**इन्द्राग्निमित्रमार्त्तण्डभेषु पापाह्वया गतिः ।**
**प्राकृताद्यासु गतिषुह्युदितोस्तमितोऽपि वा ॥११॥**
**एतावन्ति दिनान्येव दृश्यस्तावन्न दृश्यगः ।**
**चत्वारिंशत् क्रमात्त्रिंशद्द्वाविंशद्विंशतिर्नव ॥१२॥**
**पञ्चदशैर्द्वादशभिर्दिवसैः शशिनन्दनः ।**
**प्राकृतायां गतौ सस्यक्षेमारोग्यसुवृष्टिकृत् ॥१३॥**

अन्वयः - इन्द्राग्नि-मित्र-मार्त्तण्डेषु पापाह्वया गतिः । उदितोस्तमितोऽपि वा प्राकृताद्यासु गतिषु क्रमात् चत्वारिंशत्, त्रिंशत्, द्वाविंशतिविंशति, नव, पञ्चदश, एकादशभिर्दिवसैः एतावन्ति दिन्यानेव दृश्यः तावन्न दृश्यगः । शशिनन्दनः प्राकृतायां गतौ सस्य क्षेम-आरोग्य-सुवृष्टिकृत् (भवेत्) ।

भावार्थः- विशाखा, अनुराधा र हस्तामा हुने बुधको गतिलाई पापा भनिन्छ । प्राकृत आदि सात किसिमका गतिमध्येमा नै बुध उदाउने र अस्ताउने गर्दछ, जसमा क्रमैले चालीस, तीस, बाइस, बीस, नौ, पन्ध्र र एघार दिनसम्म बुध रहन्छ, धेरै होइन । प्राकृत गति पाउँदा बुध धान्यवृद्धि, आरोग्यता र सुवृष्टि कारक हुन्छ ।



बुध उदाउँदाका फल

**मिश्रसंक्षिप्तयोर्मध्ये फलदोऽन्यास्वनिष्टदः ।**
**वैशाखे श्रावणे पौषे-आषाढेप्युदितो बुधः ॥१४॥**
**जनानां पापफलदस्त्वितरेसु शुभप्रदः ।**
**इषोर्जमासयोः शस्त्रदुर्भिक्षाग्निभयप्रदः ॥**
**उदितश्चन्द्रजः श्रेष्ठो रजतस्फटिकोपमः ॥१५॥**

अन्वयः - मिश्रसंक्षिप्तयोः मध्ये फलदः, अन्यासु अनिष्टदः । बुध वैशाखे, श्रावणे, पौषे आषाढेषु उदितः सन् जनानां पापफलदः, इषोर्जमासयोः शस्त्रदुर्भिक्षाग्निभयप्रदः, (तथा) इतरेषु मासेषु शुभप्रदः (भवेत्) । रजतस्फटिकोपमः उदितश्चन्द्रजः श्रेष्ठो (भवेत्) ।

भावार्थः- मिश्र र संक्षिप्त गति हुँदा बुध शुभ फलदायक हुन्छ तथा अरु गतिमा अनिष्टकारक हुन्छ । वैशाख, साउन, पुष र असारमा बुध उदाए प्रजाजनका लागि अशुभ हुन्छ । असोज र कार्तिकमा उदाए हतियारको र आगोको डर अनि अकाल हुन्छ । बाँकी महिनामा शुभ हुन्छ । यदि बुध चाँदी वा स्फटिक मणिसमान स्वच्छ भई उदाए त्यो शुभ फलदायक हुन्छ ।

❧ इति श्रीनारदीयसंहितायां द्वितीयाध्याये बुधचारः ☙

❧✷☙

❧ नारदीय संहिता अन्तर्गत बुधसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको बुधचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ☙

❧✷☙



## (५) गुरुचारः

**महिनामा पर्ने नक्षत्र सङ्ख्या र सम्वत्सर (महिना)को नाम**

**द्विभा ऊर्जादिमासाः स्युः पञ्चान्त्यैकादशस्त्रिभाः ।**
**यद्धिष्ण्याभ्युदितो जीवस्तन्नक्षत्राह्ववत्सरः ॥१॥**

अन्वयः - ऊर्जादिमासाः द्विभास्युः तथा पञ्च अन्त्य एकादश मासा स्त्रिभास्युः । जीवः यद्धिष्ण्याभ्युदितो तन्नक्षत्राह्वयः वत्सरः (भवेत्) ।

भावार्थः- कात्तिक आदि महिनामा दुई-दुई नक्षत्र हुन्छन् तर फागुन, असोज र भदौ महिनामा तीन-तीन नक्षत्र हुन्छन् । बृहस्पति उदाउने नक्षत्रको नामबाट महिना र वर्ष अर्थात् सम्वत्सरको नाम हुन्छ ।

**कात्तिक महिनाको फल**

**पीडास्यात्कार्तिकेवर्षे रथगोऽग्न्युपजीविनाम् ।**

**क्षुच्छस्त्राग्निभयंवृद्धिः पुष्पकौसुम्भजीविनाम् ॥२॥**

अन्वयः कार्तिके वर्षे रथगोऽग्न्युपजीविनाम् पीडा, क्षुत्, शस्त्राग्निभयं तथा पुष्पकौसुम्भजीविनां वृद्धिः (स्यात्) ।

भावार्थः- कार्तिक (कृत्रिका र रोहिणी नक्षत्र हुने) नामको वर्षमा रथ, गाई तथा अग्निबाट जीविका चलाउनेलाई दुःख हुन्छ । जनमानसमा भोक, हतियार र आगोको डर हुन्छ । राता र पहैँला फूलहरू धेरै फुल्दछन् । फूलबाट जीविका चलाउने मानिस सुखी हुन्छन् ।

**मंसिर महिनाको फल**

**अनावृष्टिः सौम्यवर्षे मृगाखुशलभाण्डजैः ।**
**सर्वसस्यवधो व्याधिर्वैरं राज्ञां परस्परम् ॥३॥**

अन्वयः - सौम्यवर्षे अनावृष्टिः, मृगाखुशलभाण्डजैः सर्वसस्यवधः, व्याधिः, राज्ञां परस्परं वैरं (च सञ्जायते) ।

भावार्थः- मार्गशीर्ष (मृगशिरा, आर्द्रा) नामको वर्षमा पानी पर्दैन । मृग, मुसा, सलह तथा अण्डज अर्थात् चरा आदि जीवबाट खेतीको नोक्सान हुन्छ । रोग र शत्रुताले जनतालाई कष्ट हुन्छ । राजाहरूका बीचमा शत्रुता हुन्छ ।

### पुस महिनाको फल

**निवृत्तवैराः क्षितिपाः जगदानन्दकारकाः ।**
**पुष्टिकर्मरताः सर्वे पौषेब्देऽध्वरतत्पराः ॥४॥**

अन्वयः - पौषेब्दे क्षितिपाः निवृत्तवैराः, जगदानन्दकारकाः, सर्वे पुष्टिकर्मरताः, अध्वरतत्परा(श्च भवेयुः) ।

भावार्थः- पौष (पुनर्वसु, पुष्य) वर्षमा राजा वैरीले रहित हुन्छन् । संसारमा आनन्द हुन्छ । सबै मानिस निर्माण कार्यमा र यज्ञ गर्नमा तत्पर हुन्छन् ।

### माघ महिनाको फल

**माघेऽब्दे सततं सर्वे पितृपूजनतत्पराः ।**
**सुभिक्षं क्षेममारोग्यं वृष्टिः कर्षकसम्मता ॥५॥**

अन्वयः - माघेऽब्दे सर्वे सततं पितृपूजनतत्पराः सुभिक्ष) क्षेमं आरोग्यं कर्षकसम्मता वृष्टिः (भवेत्) ।

भावार्थः- माघ (अश्लेषा, मघा) वर्षमा सबै पितृपूजामा संलग्न हुन्छन् । सबै मातापिताको आज्ञापालक हुन्छन् । सकाल हुन्छ । सबैको कल्याण हुन्छ । सबै निरोगी हुन्छन् । कृषकले चाहेजति वर्षा हुन्छ ।

### फागुन महिनाको फल

**चौराश्च प्रबलाः स्त्रीणां दौर्भाग्यं स्वजनाः खलाः ।**
**क्वचिद्वृष्टिः क्वचित्सस्यं क्वचिद्वृद्धिश्च फाल्गुने ॥६॥**

अन्वयः - फाल्गुने चौराश्च प्रबला, स्त्रीणां दौर्भाग्यं, स्वजनाः खलाः तथा क्वचिद् वृष्टिः क्वचित् सस्यं क्वचिद् वृद्धिश्च (जायते) ।

भावार्थः- फागुन (दुवै फाल्गुनी र हस्ता) नामको वर्षमा चोरको बिगबिगी हुन्छ । स्त्रीजातलाई कष्ट हुन्छ । स्वजनमा विरोध हुन्छ । खण्डवृष्टि हुन्छ । कतैकतै उब्जनी राम्रो देखिन्छ ।

### चैत महिनाको फल

**चैत्रेऽब्दे मध्यमा वृष्टिरुत्तमान्नं सुदुर्लभम् ।**
**सस्यार्घवृष्टयः स्वल्पा राजानः क्षेमकारिणः ॥७॥**

अन्वयः - चैत्रे अब्दे वृष्टिः मध्यमा, उत्तमान्नं सुदुर्लभं, सस्यार्घः वृष्टयः स्वल्पा (एवं) राजानः क्षेमकारिणः (भवेयुः) ।

भावार्थः- चैत्र (चित्रा, स्वाती) नामको वर्षमा सामान्य खालको वर्षा हुन्छ । उत्तम खालका अनाज पाउन कठिन हुन्छ । अन्न महँगो हुन्छ । थोरै पानी पर्दछ । जनता अनुकूलका कार्य गर्ने राजा हुन्छन् ।

### वैशाख महिनाको फल



**वैशाखे धर्मनिरता राजानः सप्रजा भृशम् ।**
**निष्पत्तिः सर्वसस्यानामभयोद्युक्तचेतसः ॥८॥**

अन्वयः - वैशाखे सप्रजा राजानः भृशं धर्मनिरता, सर्वसस्यानां निष्पत्तिः, अभयोद्युक्तचेतसः ।

भावार्थः- वैशाख (विशाखा, अनुराधा) नामको वर्षमा प्रजासहित राजा धर्मकर्ममा लागिरहन्छन् । सबै थरी अनाज उब्जन्छ र प्रजा निर्भयमा रहन्छन् ।

### जेठ महिनाको फल

**वृक्षगुल्मलतादीनां क्षेमंसस्यविनाशनम् ।**
**ज्येष्ठेऽब्दे धर्मतत्त्वज्ञाः सन्नृपाः पीडिताः परैः ॥९॥**

अन्वयः - ज्येष्ठे अब्दे वृक्षगुल्मलतादीनां क्षेमं, सस्यविनाशनम्, सन्नृपाः धर्मतत्त्वज्ञाः परैः पीडिताः ।

भावार्थः- जेठ (ज्येष्ठा, मूल) नामको वर्षमा रुख, विरुवा र लहरामा वृद्धि हुन्छ । अनाजको नाश हुन्छ । धर्मतत्व जान्ने राजाहरू शत्रुहरूबाट पीडित हुन्छन् ।

असार महिनाको फल

क्वचिद्वृष्टिः क्वचित्सस्यं न तु सस्यं क्वचित् क्वचित् ।
आषाढेऽब्दे क्षितीशाः स्युरन्योऽन्यं जयकाङ्क्षिणः ॥१०॥

अन्वयः - आषाढे अब्दे क्वचिद् वृष्टिः, क्वचित् सस्यं, न तु सस्यं क्वचित् क्वचित् क्षितीशाः अन्योन्यं जयकाङ्क्षिणः स्युः ।

भावार्थः- आषाढ (दुवै आषाढा) नामको वर्षमा पानीका कारण धान कतै हुने र कतै नहुने हुन्छ । राजाहरु परस्परमा जितको चाहना गर्ने हुन्छन् ।

साउन महिनाको फल

अनेकसस्यसम्पूर्णा सुरार्चनसमाकुला ।

पापपाखण्डहन्त्रीभूः श्रावणेऽब्दे विराजते ॥११॥

अन्वयः - श्रावणे अब्दे अनेकसस्यसम्पूर्णा सुरार्चनसमाकुला पापपाखण्डहन्त्रीभूः विराजते ।

भावार्थः- श्रावण (श्रवण, धनिष्ठा) नामको वर्षमा अनेक थरी अनाजले भरिपूर्ण जमिनमा देवताको पूजा हुन्छ । पाप र पाखण्ड नाश भई भूमि सुशोभित (शोभायमान) हुन्छ ।

भदौ महिनाको फल

पूर्वं तु सस्य सम्पूर्तिर्नाशं यात्यपरं तु यत् ।
मध्यवृष्टिर्महत्सस्यं नृपाणां समरं महत् ॥१२॥
अब्देभाद्रपदे लोके क्षेमाक्षेमं क्वचित् क्वचित् ।
धनधान्यसमृद्धिश्च सुभिक्षामतिवृष्टयः ॥१३॥

अन्वयः - भाद्रपदे अब्दे पूर्वं तु सस्य सम्पूर्तिः अपरं तु यत् नाशं याति । मध्यवृष्टिः महत्सस्यं नृपाणां समरं महत् । क्वचित् क्षेमं क्वचित् अक्षेमं, धनधान्यसमृद्धिः, सुभिक्षम्, अतिवृष्टयश्च ।

भावार्थः- भाद्रपद (शतभिषा, दुवै भाद्रपदा) नामक वर्षको पूर्वार्द्ध अनाजले सम्पन्न भएपनि उत्तरार्द्धमा अनाज नाश हुन्छ । मध्यम वर्षा हुन्छ । राजामा युद्ध हुन्छ । कतै मङ्गल र कतै अमङ्गल हुन्छ । कतै समृद्धि र सकाल तथा कतै अतिवृष्टि हुन्छ ।

### असोज महिनाको फल

**सुवृष्टिः सर्वसस्यानि फलितानि भवन्ति च ।**
**भवन्त्याश्वयुजे वर्षे सन्तुष्टाः सर्वजन्तवः ॥१४॥**

अन्वयः - आश्वयुजे वर्षे सर्वजन्तवः सन्तुष्टाः भवन्ति । सुवृष्टिः सर्वसस्यानि च फलितानि भवन्ति ।

भावार्थः- आश्विन (रेवती, अश्विनी, भरणी) नामको वर्षमा राम्रो वर्षा र राम्रो अनाज हुन्छ । सबै जीव प्रसन्न हुन्छन् ।

### बृहस्पतिको नक्षत्रमा हुने गति र फल

**सौम्यभागे चरन् भानां क्षेमारोग्यसुभिक्षाकृत् ।**

**विपरीतं गुरोर्याम्ये मध्ये च प्रतिमध्यमम् ॥१५॥**

अन्वयः - गुरुः भानां सौम्यभागे चरन् क्षेमः, आरोग्यः, सुभिक्षः कृत् । याम्ये विपरीतम् । मध्ये च प्रतिमध्यमम् (भवेत्) ।

भावार्थः- बृहस्पति कुनै नक्षत्रमा उत्तरतिरबाट जान्छन् भने कुशल, आरोग्य र सहकाल हुन्छ । दक्षिणतिरबाट जान्छन् भने उल्टो फल मिल्दछ । बीचबाट गए मध्यम फल हुन्छ ।

### बृहस्पतिको रङ र फल

**पीताग्निश्यामहरितरक्तवर्णोऽङ्गिराः क्रमात् ।**
**व्याध्यग्निरणचौरास्त्रभयकृत् प्राणिनां तदा ॥१६॥**

अन्वयः - अङ्गिराः पीतः अग्निः श्यामः हरितः रक्तवर्णः तदा क्रमात् प्राणिनां व्यधिः अग्निः रणः चौरः अस्त्रः भयकृत् (भवेत्) ।

भावार्थः- बृहस्पति पहेँलो, आगाको रङ्को, कालो, हरियो र रातो देखिए क्रमैले व्याधिको डर, आगोको डर, युद्धको डर, चोरको डर तथा हतियारको डर रहन्छ ।

**अनावृष्टिंधूम्रनिभः करोति सुरपूजितः ।**
**दिवादृष्टो नृपवधन्त्वथवा राजनाशनम् ॥१७॥**

अन्वयः - धूम्रनिभः सुरपूजितः अनावृष्टिं, दिवादृष्टः तु नृपवधः अथवा राजनाशनं करोति ।

भावार्थः- बृहस्पति धूम्रवर्णको देखिए अनावृष्टि हुन्छ । दिनमा देखिए भने त राजाको हत्या वा राज्यको नाश हुन्छ ।

सम्वत्सर (महिना) का नक्षत्ररुपी शरीरका अङ्ग र त्यस अनुसारको फल

**सम्वत्सरशरीरः स्यात् कृत्तिका रोहिणी उभे ।**
**नाभिस्त्वाषाढद्वितयमार्द्राहृद् कुसुमं मघा ॥१८॥**



अन्वयः - कृत्तिका रोहिणी उभे सम्वत्सरः शरीरः स्यात् । आषाढद्वितयं नाभिः, आर्द्राहृद्, मघा च कुसुमं ( स्यात्) ।

भावार्थः- कृत्तिका र रोहिणी नक्षत्र सम्वत्सरका शरीर हुन् । दुवै आषाढा नाइटो, आर्द्रा हृदय तथा मघा रज हुन् ।

**दुर्भिक्षाऽग्निमहद्भीतिः शरीरे क्रूरपीडिते ।**
**नाभ्यान्तु क्षुद्भयं पुष्पे सम्यक् मूलफलक्षयम् ॥१९॥**
**हृदये सस्यनिधनं शुभं स्यात् पीडितः शुभैः ।**

अन्वयः - शरीरे क्रूरपीडिते दुर्भिक्षः महद् भीतिः । नाभ्यां तु क्षुद् भयम् । पुष्पे सम्यक् मूल-फल क्षयम् । शुभैः पीडिते (च) शुभं स्यात् ।

भावार्थः- (सम्वत्सरको) शरीरमा कुग्रहको योगले अनिकाल, आगोको डर आदि हुन्छ । नाभिमा भए भोकको डर, रजमा भए कन्दमूल-फलको नास तथा हृदयमा भए धान्यको नाश हुन्छ । शुभग्रहको योग वा दृष्टि भए शुभ फल दिन्छ ।

### मेष राशिको बृहस्पतिले दिने फल

## मेषराशिगते जीवेत्वीतिर्मेषविनाशनम् ॥२०॥

अन्वयः - जीवे मेषराशि गते तु ईतिः मेष विनाशनं (च भवेत्) ।

भावार्थः- मेष राशिमा बृहस्पति भए इति भय (अतिवृष्टि, अनावृष्टि, मुसो-सलह-सुँगा-राजाबाट डर) तथा भेडाबाख्राको नाश हुन्छ ।

### वृष राशिको बृहस्पतिले दिने फल

## सस्यवृद्धिः प्रजारोग्यं वृष्टिः कर्षकसम्मता ।
## वृषराशिगते जीवे शिशुस्त्रीपशुनाशनम् ॥२१॥

अन्वयः - जीवे वृषराशि गते (सति) सस्यवृद्धिः, प्रजा आरोग्यं, कर्षकसम्मता वृष्टिः, शिशु-स्त्री-पशुनाशनं (च भवेत्) ।



भावार्थः- वृष राशिमा बृहस्पति भए अनाजको उत्पादन राम्रो हुन्छ । प्रजा निरोगी हुन्छन् । कृषक अनुकूलको वर्षा हुन्छ । तर बालक, स्त्री र पशुलाई भने हानी हुन्छ ।

### मिथुन राशिको बृहस्पतिले दिने फल

## मध्या वृष्टिः सस्यहानिर्नृपाणां समरं महत् ।
## जनानां भीतिरीतिश्च नृपाणां दारुणं रणम् ॥
## विप्रपीडा मध्यवृष्टिः सस्यवृद्धिस्तृतीयभे ॥२२॥

अन्वयः - (जीवे) तृतीयभे मध्या वृष्टिः, सस्यहानिः, नृपाणां महत् समरं, जनानां भीतिः ईतिश्च, नृपाणां दारुणं रणम्, विप्रपीडा, मध्यवृष्टिः, सस्यवृद्धिश्च (भवेत्) ।

भावार्थः- मिथुन राशिमा बृहस्पति भए मध्यम वर्षा हुन्छ । (पूर्वार्द्धमा) धान्य हानी, राजामा युद्ध, जनतामा डर र इति भय हुन्छ । (उत्तरार्द्धमा) धान्य वृद्धि हुन्छ ।

कर्कट राशिको बृहस्पतिले दिने फल

**प्रभूतपयसो गावः सुजनाः सुखिनः स्त्रियः ।**
**मदोद्धताः कर्किणीज्ये सस्यवृद्धियुता धरा ॥२३॥**

अन्वयः - कर्किणीज्ये गावः प्रभूतपयसः, सुजनाः सुखिनः, स्त्रियः मदोद्धताः, धरा सस्यवृद्धियुता (च भवेत्) ।

भावार्थः- कर्कट राशिमा बृहस्पति भए गाई धेरै दूध दिने हुन्छन्, सज्जनहरू सुखी हुन्छन्, स्त्री मदोन्मत्त हुन्छन् र पृथ्वी अनाजले भरिपूर्ण हुन्छिन् ।

सिंह राशिको बृहस्पतिले दिने फल

**सिंहराशिगते जीवे निःस्वा भूसुरसत्तमाः (स्युरसज्जनाः) ।**
**अतिवृष्टिर्व्यालभयं नृपा युद्धे लयं ययुः ॥२४॥**

अन्वयः - जीवे सिंहराशिगते भूसुरसत्तमा निःस्वा, अतिवृष्टिः, व्यालभयं, युद्धे नृपा लयं ययुः ।



भावार्थः- सिंह राशिमा बृहस्पति भए ब्राह्मणहरू धनहीन हुन्छन् । अतिवृष्टि हुन्छ । सर्पको डर रहन्छ । युद्धमा राजाहरुको नाश हुन्छ ।

कन्या राशिको बृहस्पतिले दिने फल

**जीवे कन्यागते वृष्टिः हृष्टाः स्वस्थाः क्षितीश्वराः ।**
**महोत्सुकाः क्षितिसुराः स्वस्थाः स्युर्निखिला जनाः ॥२५॥**

अन्वयः - जीवे कन्यागते (सति) वृष्टिः (भवेत्), क्षितीश्वराः हृष्टाः स्वस्थाः (च भवेयु), क्षितिसुराः महोत्सुकाः, निखिला जनाः स्वस्थाः स्युः ।

भावार्थः- कन्या राशिमा बृहस्पति भए सुन्दर वृष्टि हुन्छ । राजा स्वस्थ्य र खुशी हुन्छन् । ब्राह्मणहरू धर्ममा रहन्छन् । सबै प्रजा स्वस्थ हुन्छन् ।

### तुला राशिको बृहस्पतिले दिने फल

**जीवे तुलागते सर्वं धातुमूलातुलञ्जगत् ।**
**तथापि धात्री सम्पूर्णा धनधान्यसुवृष्टिभिः ॥२६॥**

अन्वयः - जीवे तुलागते जगत् सर्वं धातुमूला अतुलं, तथा सुवृष्टिभिः धात्री अपि धनधान्य सम्पूर्णा (स्युः) ।

भावार्थः- तुला राशिमा बृहस्पति भए सबै थरी धातु तथा कन्दमूल धेरै हुन्छ । राम्रोसँग पानी पर्नाले पृथ्वी धनधान्यले पूर्ण हुन्छ ।

### वृश्चिक राशिको बृहस्पतिले दिने फल

**मदोद्धतानां भूपानां युद्धे जनपदक्षयः ।**
**अतुष्टा वृष्टिरत्युग्रं डामरं कीटगे गुरौ ॥२७॥**

अन्वयः - कीटगे गुरौ युद्धे मदोद्धतानां भूपानां जनपदक्षयः, वृष्टिः अतुष्टा डामरं च अत्युग्रं (भवति) ।



भावार्थः- वृश्चिक राशिमा बृहस्पति भए मदोन्मत्त राजाहरूका बीचमा युद्ध भई जनताहरूको विनाश हुन्छ । अल्प वा अती वृष्टि हुनाले गर्दा सबैतिर कोलाहल हुन्छ ।

### धनु राशिको बृहस्पतिले दिने फल

**जीवे चापगते भीतिरीतिर्भूपभयं महत् ।**
**अतुष्टावृष्टिरत्युग्रा पीडा निःस्वाः क्षितीश्वराः ॥२८॥**

अन्वयः - चापगते जीवे (सति) इतिः भीतिः, महत् भूपभयं, वृष्टिः अतुष्टा, अत्युग्रा पीडा क्षितीश्वराः निःस्वाः (स्युः) ।

भावार्थः- धनु राशिमा बृहस्पति भए इति भय, राजभय, अल्पवृष्टि र उग्र राजपीडा हुन्छ । राजा धनहीन हुन्छन् ।

### मकर राशिको बृहस्पतिले दिने फल

**अशत्रवो जना धात्री पूर्णा सस्यार्थवृष्टिभिः ।**
**वीतरोगभयाः सर्वे मकरस्थे सुरार्चिते ॥२९॥**

अन्वयः - सुरार्चिते मकरस्थे (सति) जनाः अशत्रवः, वृष्टिभिः धात्री सस्य अर्थ पूर्णा, सर्वे (जनाः) वीतरोगभयाः (च) ।

भावार्थः- मकर राशिमा बृहस्पति भए जनता शत्रुरहित हुन्छन् । अनाज, वर्षा र धनले पृथ्वी भरिपूर्ण हुन्छ । जनताहरू रोगको डरबाट मुक्त हुन्छन् ।

### कुम्भ राशिको बृहस्पतिले दिने फल

**सुरस्पर्द्धिजनाः धात्री फलपुष्पार्घवृष्टिभिः ।**
**सम्पूर्णा कुम्भगे जीवे वीत(वीति)रोगयुता धरा ॥३०॥**

अन्वयः जीवे कुम्भगे (सति) जनाः सुरस्पर्द्धि, धात्री फलपुष्पार्घवृष्टिभिः सम्पूर्णा, धरा वीतरोगयुता (भवति) ।

भावार्थः- कुम्भ राशिमा बृहस्पति हुँदा जनता देवताका प्रतिस्पधी हुन्छन् । फल-फूल-पूजा (मह) -वृष्टिले पृथ्वी भरिपूर्ण हुन्छिन् । पृथ्वी रोगको डरबाट मुक्त हुन्छ ।



### मीन राशिको बृहस्पतिले दिने फल

**धान्यार्घवृष्टि सम्पूर्णा क्वचिद्रोगः क्वचिद् भयम् ।**
**न्यायमार्गरता भूपाः सर्वे मीनस्थिते गुरौ ॥३१॥**

अन्वयः - गुरौ मीनस्थिते सर्वे भूपाः न्यायमार्गरता, धान्यार्घवृष्टि सम्पूर्णा (जनाः), क्वचित् रोगः, क्वचित् भयम् ।

भावार्थः- मीन राशिमा बृहस्पति भए धान्य, पूजाआजा (वा मह) र वर्षाले भूमि पूर्ण हुन्छ । कतै रोग र कतै डर हुन्छ । राजा न्याय गर्ने हुन्छन् ।

इति श्रीनारदीयसंहितायां द्वितीयाध्याये बृहस्पतिचारः

✷

नारदीय संहिता अन्तर्गत बृहस्पतिसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको बृहस्पतिचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# (६) शुक्रचारः

### शुक्रका भ्रमणपथका नामहरु

**सौम्यमध्यमयाम्येषु मार्गेषु त्रित्रिवीथयः ।**
**शुक्रस्यदस्रभाद्यैश्च पर्यायैश्च त्रिभिस्त्रिभिः ॥१॥**
**नागेभैरावताश्चैव वृषभो गोजरद्गवाः ।**
**मृगाजदहनाख्याः स्युयाम्यान्ता वीथयो नव ॥२॥**

अन्वयः - शुक्रस्य दस्रभाद्यैश्च त्रिभिः त्रिभिः पर्यायैश्च सौमध्यमयाम्येषु मार्गेषु त्रित्रिवीतथः (भवन्ति) । (यथा)- नागः, इभः, ऐरावतः, वृषभः, गो, जरद्गवः, मृगः, अजः, दहनाख्याः नव वीथयः याम्यान्ता स्युः ।

भावार्थः- उत्तर, मध्य तथा दक्षिणातिर शुक्रका क्रमशः तीन-तीन बाटाहरु अश्विनादि क्रमले हुन्छन् । ती नागविथि, गजविथि, ऐरावत, वृषभ, गो, जरद्गव, मृग, अज तथा दहन हुन् र याम्यान्त (दक्षिण) क्रमले हुन्छन् ।



### शुक्रका भ्रमणपथ अनुसारका फल

**सौम्यमार्गेषु तिसृषु चरन् वीथिषु भार्गवः ।**
**धान्यार्घवृष्टिसस्यानां परिपूर्तिं करोति सः ॥३॥**

अन्वयः - सः भार्गवः सौम्यमार्गेषु तिसृषु वीथिषु चरन् धान्यार्घवृष्टि, सस्यानां परिपूर्तिं करोति ।

भावार्थः- उत्तरतिरको नाग, गज तथा ऐरावत नामका बाटाहरुबाट जब शुक्र हिँड्दछ तब अनाजलाई उपयुक्त हुने वृष्टि भई उब्जनी वृद्धि गर्दछ ।

**मध्यमार्गेषु तिसृषु करोत्येषान्तु मध्यमः ।**
**याम्यमार्गेषु तिसृषु तेषामेवाधमं फलम् ॥४॥**

अन्वयः - तिसृषु मध्यमार्गेषु तु एषां मध्यमः करोति । तिसृषु याम्यमार्गेषु (सः भार्गवः चरन्) तेषां एक अधमं फलं (करोति) ।

भावार्थः- मध्यमार्गका वृषभ, गो र जरद्गव नामका बाटामा शुक्र जाँदा मध्यम फल दिन्छ । दक्षिणीमार्गका मृग, अज र दहन नामका बाटामा शुक्र जाँदा अधम फल दिन्छ ।

## शुक्रको उदय, अस्त र भ्रमणको फल

पूर्वस्यां दिशि जलदः शुभकृत् पितृपञ्चके ।
स्वातित्रये पश्चिमायां सम्यक् शुक्रस्तथाविधः ॥५॥
विपरीतेत्वनावृष्टिर्वृष्टिकृद् बुधसंयुतः ।
कृष्णाष्टम्यां चतुर्दश्याममावस्यां यदा सितः ॥६॥
उदयास्तमयं याति तदा जलमयी क्षितिः ।
मिथः सप्तमराशिस्थौ पश्चात् प्राग्वीथिसंस्थितौ ॥७॥
गुरुशुक्रावनावृष्टिर्दुर्भिक्षमरणप्रदौ ।
कुजज्ञजीवरविजाः शुक्रस्याग्रेसरा यदा ॥८॥
युद्धातिवायुदुर्भिक्ष जलनाशकरास्तदा ।
कृष्णरक्तस्तनुः शुक्रोपवनानां विनाशकृत् ॥९॥

अन्वयः - शुक्रः पितृपञ्चके (स्थिते) पूर्वस्यां दिशि जलदः शुभकृत्, तथाविधः स्वातित्रये पश्चिमायां सम्यक्, विपरीते तु अनावृष्टि कृद्, बुधसंयुतः (चेद्) वृष्टि (कृद्), यदा सितः कृष्णाष्टम्यां चतुर्दश्यां अमावस्यां उदयास्तमयं याति तदा क्षितिः जलमयं (भवति), मिथः सप्तमराशिस्थौ गुरुशुक्रौ पश्चात् प्राग्वीथिसंस्थितौ अनावृष्टि-दुर्भिक्ष-मरणप्रदौ, यदा कुज-ज्ञ-जीव-रविजाः शुक्रस्य अग्रेसराः तदा युद्ध-अतिवायु-दुर्भिक्ष-जलनाशकराः, कृष्णः-रक्तः तनुः शुक्रः उपवनानां विनाशकृत् (भवति) ।

भावार्थः- मघाबाट पाँच नक्षत्रमा शुक्र रहँदा पूर्वतिर बादल हुनु शुभदायक हुन्छ । स्वाती, विशाखा र अनुराधामा शुक्र भए पश्चिममा बादल शुभद हुन्छ । यसको उल्टोमा खडेरी हुन्छ । तर बुधका साथ भए सुवृष्टि हुन्छ । कृष्णपक्षको अष्टमी, चतुर्दशी र औंसीमा यदि शुक्र उदय वा अस्त भए सुवृष्टिले भूमिलाई जलमय गराउँदछ । बृहस्पति र शुक्र परस्पर सातौं राशिमा बसेर पूर्व वा पश्चिम बाटोमा भए अनावृष्टि, अकाल र मरण दायक हुन्छ । मङ्गल, बुध, बृहस्पति र शनि शुक्रका अग्रसर हुन्छन् भने क्रमैले युद्ध, वाताधिक्य, दुर्भिक्ष र जलको नाश गर्ने हुन्छ । कालो र रातो वर्णको शुक्र उपवन नाश गर्ने हुन्छ ।

इति श्रीनारदीयसंहितायां द्वितीयाध्याये शुक्रचारः

नारदीय संहिता अन्तर्गत शुक्र ग्रहसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको शुक्रचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## (७) शनिचारः

### शनिको गति र फल

**श्रवणानिलहस्तार्द्रा भरणी भाग्यभेषु च ।**
**चरन् शनैश्चरो नृणां सुभिक्षारोग्यसस्यकृत् ॥१॥**

अन्वयः - शनैश्चरो श्रवण-अनिल-हस्त-आर्द्रा-भरणी-भाग्यभेषु च चरन् नृणां सुभिक्ष-आरोग्य-सस्यकृत् ( भवेत्) ।

भावार्थः- श्रवण, स्वाती, हस्ता, आर्द्रा, भरणी र पूर्वाफाल्गुणी नक्षत्रमा यदि शनि गए सुभिक्ष, आरोग्य तथा धान्यकारक हुन्छ ।

**जलेशसार्पमाहेन्द्र नक्षत्रेषु सुभिक्षकृत् ।**
**क्षुत् शस्त्रावृष्टिदोर्मूलेऽहिर्वुधन्यान्त्यभयोर्भयम् ॥२॥**

अन्वयः - जलेश-सार्प-माहेन्द्रनक्षत्रेषु (चरन् शनिः) सुभिक्षकृत् । मूले क्षुत्, शस्त्र अवृष्टिदः । अहिर्बुधन्यान्तभयोः भयम् (भयकृत् भवेत्) ।



भावार्थः- शनि- शतभिषा, अश्लेषा र ज्येष्ठा नक्षत्रमा सुभिक्ष गर्ने, मूल नक्षत्रमा भोक-हतियार भय र अवृष्टिकारक तथा उत्तरभाद्रपदा र रेवतीमा भयप्रद हुन्छ ।

**मूर्ध्नि चैकं मुखे त्रीणि गुह्ये द्वे नयने द्वयम् ।**
**हृदये पञ्च ऋक्षाणि वामहस्ते चतुष्टयम् ॥३॥**
**वामपादे तथा त्रीणि देया त्रीणि च दक्षिणे ।**
**दक्षहस्ते च चत्वारि जन्मभाद्रविजस्थितः ॥४॥**
**रोगोलाभस्तथा हानिर्लाभसौख्यञ्च बन्धनम् ।**
**आयासं चेष्टयात्रा च अर्थलाभः क्रमात्फलम् ॥५॥**
**वक्रकृद्रविजस्येह तद्वक्रफलमीदृशम् ।**
**करोत्येवं समःसाम्यं शीघ्रगो व्युत्क्रमात्फलम् ॥६॥**

अन्वयः - जन्मभात् रविजस्थितः मूर्ध्नि च एकं, मुखे त्रीणि, द्वे गुह्ये, नयने द्वयम्, हृदये पञ्च, वामहस्ते चतुष्टयम् तथा त्रीणि वामपादे, त्रीणि दक्षिणे च, दक्षहस्ते च चत्वारि ऋक्षाणि देया । (अस्य) क्रमात् रोगः,

अलाभः, हानिः, लाभः, सौख्यञ्च, बन्धनं, आयासं च इष्टयात्रा च तथा अर्थलाभः फलं भवति । वक्रकृद् रविजस्य इह वक्रफलं तद् ईदृशम्-एवं समः साम्यं करोति, शीघ्रगः व्युत्क्रमात् फलम् ( करोति) ।

भावार्थः- पुरुषाकार शनिको शिरमा एक, मुखमा तीन, गुह्यभागमा दुई, नेत्रमा दुई, हृदयमा पाँच, देब्रे हातमा चार, देब्रे गोडामा तीन, दाहिने गोडामा तीन र दाहिने हातमा चार नक्षत्रको स्थापना जन्म नक्षत्रबाट क्रमैले गर्नुपर्दछ । यसरी क्रमैले रोग, अलाभ, हानि, लाभ, सुख, बन्धन, दुःख, इष्ट यात्रा तथा अर्थलाभ फल समझिनु पर्दछ । यदि शनि वक्री भए विपरित फल दिन्छ तथा सममा सम फल दिन्छ भने शीघ्रगामी भए विपरित फल दिन्छ ।

इति श्रीनारदीयसंहितायां द्वितीयाध्याये शनिचारः

✷

नारदीय संहिता अन्तर्गत शनि ग्रहसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको शनिचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷





## (८) राहुचारः

**अमृतास्वादनाद्राहुः शिरच्छिन्नोऽपि सोऽमृतः ।**
**विष्णुना तेन चक्रेण तथापि ग्रहतां गतः ॥१॥**

अन्वयः - अमृत अस्वादनात् विष्णुना चक्रेण शिरच्छिन्नोऽपि सः राहुः अमृतः । तेन तथापि ग्रहतां गतः ।

भावार्थः- अमृत चाख्नाले गर्दा भगवान् विष्णुले राहुको शिर काटिदिनु भएको थियो । तर पनि अमृत पिएका कारण उ अमर भई ग्रह भयो ।

### ग्रहणको कारण

**वरेण धातुरर्केन्दू ग्रसते सर्वपर्वणि ।**
**विक्षेपावनतेर्वश्याद्राहुर्दूरङ्गतस्तयोः ॥२॥**

अन्वयः - धातुः वरेण सर्वपर्वणि अर्केन्दूः ग्रसते । विक्षेपावनतेर्वशात् राहुः तयोः दूरं गतः ।



भावार्थः- राहुले ब्रह्माबाट वर पाई औंसी र पूर्णिमामा क्रमैले सूर्य र चन्द्रमालाई ग्रस्दछ । विक्षेप (शत्रुमाथि प्रहार) र अवनती (असुर भएका) कारण राहु, सूर्य र चन्द्रमाबाट टाढा गयो ।

### ग्रहणकालका मालिक

**षण्मासवृद्ध्या ग्रहणं शोधयेद्रविचन्द्रयोः ।**
**पर्वेशाःस्युस्तथा सप्त देवाः कल्पादितः क्रमात् ॥३॥**

अन्वयः - रविचन्द्रयोः ग्रहणं षण्मासवृद्ध्या शोधयेत् तथा कल्पादितः क्रमात् सप्तदेवाः पर्वेशाः स्युः ।

भावार्थः- सूर्य र चन्द्रग्रहण छ-छ महिनाको वृद्धिका कारणले (अन्तरालमा) हुन्छ । यी ग्रहणकालीन पर्वका मालिक कल्पादि क्रमले सात देवता हुन्छन् ।

**ब्रह्मेन्द्विन्द्रधनाधीशवरुणाग्नियमाह्वयाः ।**
**पशुसस्यद्विजातीनां वृद्धिब्राह्मे च पर्वणि ॥४॥**

अन्वयः - ब्रह्म इन्दु इन्द्र धनाधीश वरुण अग्नि यमाह्वयाः (एते पर्वेशाः स्युः) । ब्राह्मे पर्वणि च पशु सस्य द्विजातीनां वृद्धिः (भवेत्) ।

भावार्थः- यी पर्वका ब्रह्मा, इन्दु, इन्द्र, कुबेर, वरुण, अग्नि र यम नामका मालिक हुन्छन् । ब्रह्म नामको (ब्रह्मा अधिपति हुने) पर्वमा ग्रहण परे पशु, अन्न, ब्राह्मण, क्षत्रिय र वैश्यको वृद्धि हुन्छ ।

**तद्वदेव फलं सौम्ये बुधपीडा च पर्वणि ।**
**विरोधो भूभुजां दुःखमैन्द्रे सस्यविनाशनम् ॥५॥**

अन्वयः - तद् वत् (ब्रह्म पर्वसदृशं) फलं सौम्ये (ज्ञातव्यम्) । पर्वणि बुधपीडा च । इन्द्रे भूभुजां विरोधः, दुःखम्, सस्यविनाशनम् (च भवेत्) ।

भावार्थः- ब्रह्म पर्वको जस्तै सबै फल चन्द्र पर्वमा पनि जान्नू । तर यसले बुद्धिजीविलाई कठिनाई हुन्छ । इन्द्र पर्वमा राजाका बीचमा विरोध तथा दुःख एवं धनहानी हुन्छ ।

**अर्थेशानामर्थहानिः कौबेरे धान्यवर्धनम् ।**
**नृपाणामशिवं क्षेममितरेषां तु वारुणे ॥६॥**



अन्वयः - कौबेरे अर्थेशानामर्थहानिः धान्यवर्धनम् । वारुणे तु नृपाणां अशिवं इतरेषां क्षेमम् ।

भावार्थः- कुबेर पर्वमा ग्रहण परे धनीको धननाश तर अन्न उत्पादन राम्रो हुन्छ । वरुण पर्वमा परे राजाका लागि अशुभ र जनताका लागि कल्याणदायक हुन्छ ।

**प्रवर्षणं सस्यवृद्धिः क्षेमं हौताशपर्वणि ।**
**अनावृष्टिः सस्यहानिर्दुर्भिक्षं याम्यपर्वणि ॥७॥**

अन्वयः - हौताशपर्वणि सस्यवृद्धिः प्रवर्षणम्, याम्य पर्वणि अनावृष्टिः सस्य हानिः दुर्भिक्षं च (भवेत्) ।

भावार्थः- हुताशन पर्वमा परे धान्यको वृद्धि, उत्तम वर्षा र प्रजाको कल्याण हुन्छ । यम पर्वमा परे अनावृष्टि, धान्यहानी, तथा अकालले जनता पीडित हुन्छन् । (यी पर्वका बारेमा थप जानकारी पाउन सकिएन) ।

### समयभन्दा अघिपछि लाग्ने र ग्रहणको फल

**वेलाहीनेसस्यहानिर्नृपाणां दारुणं रणम् ।**
**अतिवेले पुष्पहानिर्भयंसस्य विनाशनम् ॥८॥**
**एकस्मिन्नेवमासेतु चन्द्रार्कग्रहणं यदा ।**
**विरोधं धरणीशानामर्थवृष्टिविनाशनम् ॥९॥**
**ग्रस्तोदितावस्तमितौ नृपधान्यविनाशदौ ।**
**सर्वग्रस्ताविनेन्दूभौ क्षुद्वाय्वग्नि भयप्रदौ ॥१०॥**

अन्वयः - यदा बेलाहीने चन्द्रार्कग्रहणं (तदा) सस्यहानिः नृपाणां दारुणं रणम्, अतिवेले पुष्पहानिः भयं सस्य विनाशनम्, एकस्मिन् एव मासे तु धरणीशानां विरोधं अर्थवृष्टिविनाशनम्, ग्रस्तः उदितः अस्तमितौ नृपधान्यविनाशदौ, सर्वग्रस्तः अविनेन्दूभौ क्षुद् वायु अग्नि भयप्रदौ (भवतः) ।

भावार्थः- कुसमयमा (समय भन्दा अघि) ग्रहण परे धान्यहानी तथा राजामा घोर युद्ध हुन्छ । समयभन्दा पछि परे पुष्पहानी, भय, तथा अनाज कम उत्पादन हुने हुन्छ । एकै महिनामा चन्द्र र सूर्य ग्रहण परे राजाका बीचमा तीब्र मतभेद, धनहानी र खडेरी हुन्छ । ग्रहण लागेर उदाएमा राजाको नाश, ग्रहण लागेर अस्ताएमा धान्यको नाश तथा सर्वग्रास ग्रहणमा भोकमरीको, वायुको र अग्निको डर हुन्छ ।

### ग्रहणको ग्रास र मोक्षको भेद

**द्विजादींश्च क्रमाद्धन्ति राहुर्दुष्टो दिगादितः ।**
**दशैव ग्रासभेदाः स्युर्मोक्षभेदास्तथा दश ॥११॥**
**न शक्या लक्षितुं देवैः किं पुनः प्राकृतैर्जनैः ।**
**आनीय खेटान् सिद्धान्तात्तेषां चारं विचिन्तयेत् ॥१२॥**
**शुभाशुभाप्तेः कालस्य ग्रहचारो हि कारणम् ।**
**तस्मादन्वेषणीयं तत्कालज्ञानाय धीमता ॥१३॥**

अन्वयः - सुस्पष्टम् ।

भावार्थः- पूर्वा आदि दिशाको क्रम अनुसार गएको राहुले क्रमशः ब्राह्मणदि वर्णलाई कष्ट हुन्छ । ग्रासको दश (सव्य, अपसव्य, लेह्य, ग्रसन, निरोध, अवमर्द, आरोह, अघ्रात, मध्यतम र तमोन्त्य) तथा मोक्षका दश भेद (हनुभेद दुई, कुक्षिभेद दुई, वायुभेद दुई, संछर्दन, जरण,

मध्यविदारण र अन्त विदारण-वाराहीसंहिता) हुन्छन् । देवताले पनि यि ग्रास र मोक्षका दश भेद देख्दैनन् भने साधारण व्यक्तिको के कुरा । अतः सिद्धान्त गणितबाट ग्रह आनयन गरी त्यसको चिन्तन गर्नु पर्दछ । समयको शुभ अशुभ ज्ञानका लागि ग्रहको गति नै कारण हो अतः बुद्धिमानले गति-वशको अन्वेषण गर्नु पर्दछ ।

इति श्रीनारदीयसंहितायां राहुचारः

✷

नारदीय संहिता अन्तर्गत राहुसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको राहुचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷



# (९) केतुचारः

### केतुको उदयास्तको फल र केतुका किसिम

**उत्पातरूपा केतूनां उदयास्तमया नृणाम् ।**
**दिव्यान्तरिक्षा भौमास्तेशुभाशुभफलप्रदाः ॥१॥**

अन्वयः - केतूनां उदयास्तमया नृणां उत्पातरूपा, ते दिव्यान्तरिक्षा भौमाः शुभाशुभ फलप्रदाः (स्युः) ।

भावार्थः- केतु उदाउनु वा अस्ताउनु उत्पातरुप (कुलक्षण) हो । दिव्य, अन्तरिक्ष र भौम गरी तीन थरीका हुने केतुले मानिसलाई शुभ र अशुभ फल दिन्छ ।

### अन्तरिक्ष-केतु

**यज्ञध्वजास्त्रभवनरथवृक्षगजोपमाः ।**
**स्तम्भशूलगदाकारा अन्तरिक्षाः प्रकिर्तिताः ॥२॥**



अन्वयः - यज्ञध्वज-अस्त्र-भवन-रथ-वृक्ष-गजोपमाः, शूलः स्तम्भः गदाकारा (च) अन्तरिक्षाः .उत्पाताः) प्रकीर्तिताः ।

भावार्थः- यज्ञध्वज, अस्त्र, भवन, रथ, वृक्ष, गज, स्तम्भ, शुल र गदाका आकारको केतुलाई "अन्तरिक्ष केतु" भनिन्छ ।

### दिव्य र भौम केतु

**नक्षत्रसंस्थिता दिव्याः भौमा ये भूमिसंस्थिताः ।**
**एकोप्यभिन्नरूपः स्याज्जन्तूनामशुभाय वै ॥३॥**

अन्वयः - (ये) नक्षत्रसंस्थिताः (ते) दिव्याः, ये भूमिसंस्थिताः (ते) भौमाः, एकः अपि अभिन्नरूपः (केतुः) जन्तूनां अशुभाय (भवेत्) ।

भावार्थः- नक्षत्रमा रहेको केतुलाई दिव्य केतु भनिन्छ । जुन जमिनमा रहेको छ त्यो केतुलाई भौम केतु भनिन्छ । अखण्डित एउटै केतु पनि जीवको अमङ्गलको कारण बन्दछ ।

### केतुको असर रहने समय

**यावन्तो दिवसाः केतुर्दृश्यतेविविधात्मकः ।**
**तावन्मासैः फलं वाच्यं मासैश्चैव तु वासराः ॥४॥**

अन्वयः - विविधात्मकः केतुः यावन्तः दिवसाः दृश्यते तावन् मासैः फलं वाच्यम्, मासैः चैव तस वत्सराः ।

भावार्थः- विभिन्न किसिमका केतु जति दिन देखिन्छन् तिनले त्यति नै महिना फल दिन्छन् । केतु जति महिना देखिन्छन् त्यति नै वर्ष शुभ र अशुभ फल दिन्छन् ।

### अन्तरिक्ष, दिव्य र भौम केतुको फल

**ये दिव्याः केतवस्तेऽपि शश्वत्तीव्रफलप्रदाः ।**
**अन्तरिक्षा मध्यफला भौमा मन्दफलप्रदाः ॥५॥**

अन्वयः - ये दिव्याः केतवः ते अपि तीव्रफलप्रदाः, अन्तरिक्षा मध्यफला, भौमा मन्दफलप्रदा (भवेत्) ।



भावार्थः- जुन् दिव्यकेतुहरू हुन्छन् ती पनि तीव्र फलदायक हुन्छन् । अन्तरिक्ष केतुहरू मध्यम फलदायक हुन्छन् । भौमकेतुहरू मन्द फलदायक हुन्छन् ।

### श्वेतकेतु र दीर्घकेतु

**ह्रस्वः स्निग्धः सुप्रसन्नः श्वेतकेतुः सुभिक्षकृत् ।**
**क्षिप्राग्र(द)स्तमयं याति दीर्घकेतुः सुवृष्टिकृत् ॥६॥**

अन्वयः - ह्रस्वः स्निग्धः सुप्रसन्नः श्वेतकेतुः सुभिक्षकृत् (भवेत्), (चेत्) दीर्घकेतुः क्षिप्रागस्तमयं याति (तदा ( सः अपि) सुवृष्टिकृत् (भवेत्) ।

भावार्थः- श्वेतकेतु थोरै चिल्लो र स्वच्छ हुन्छ । यो सहकालको सूचक हुन्छ । दीर्घकेतु पूर्वतिर अस्ताएमा सुवृष्टिकारक हुन्छ ।

## आकार अनुसार केतुका फल

**अनिष्टदो धूमकेतुः शक्रचापस्य सन्निभः ।**
**द्वित्रिचतुः शूलरूपः स च राज्यान्तकृत्तदा ॥७॥**

अन्वयः -शक्रचापस्य सन्निभः धूमकेतुः अनिष्टदः । द्वित्रिचतुः शूलरूपः तदा (स केतुः) राज्यान्तकृत् (भवेत्) ।

भावार्थः- इन्द्रधनुष जस्तो आकारको धूमकेतु अनिष्टकारक हुन्छ । दुई, तीन वा चार वटा शूल (भ्रिर) जस्तो देखिने केतु राजाको अन्त गर्ने गुणको हुन्छ ।

## सूर्यपुत्र केतु

**मणिहार सुवर्णभा दीप्तिमन्तोऽर्कसूनवः ।**
**केतवोभ्युदिताः पूर्वापरयोर्नृपघातकाः ॥८॥**

अन्वयः - मणि-हार-सुवर्णाभा दीप्तिमन्तः केतवः अर्कसूनवः (कथिता) अध्युदिता पूर्वपरयोः नृपघातकाः ( भवन्ति) ।



भावार्थः- मणि, हार तथा सुनझैं चम्किने केतुलाई सूर्यपुत्र केतु भनिन्छ । यो केतु उदाए पूर्व तथा पश्चिमका राजाको नाश हुन्छ ।

## अग्निपुत्र केतु

**बन्धूकबिम्बक्षतजशुकतुण्डाग्निसन्निभाः ।**
**हुताशनप्रदास्तेपि केतवश्चाग्निसूनवः ॥९॥**

अन्वयः -बन्धूक-बिम्ब-क्षतज-शुकतुण्ड-अग्नि सन्निभाः च केतवः अग्निसूनवः (प्रोक्ता), ते अपि हुताशनप्रदाः ।

भावार्थः- बाह्रमासे फूल, ग्रहमण्डल, रगत, सुँगाको चुच्चो र आगोको वर्णका केतुले अग्निभय गराउँदछन् । यस्ता केतुलाई अग्निपुत्र केतु भनिन्छ ।

### मृत्युपुत्र र भूमिपुत्र केतु

**व्याधिप्रदा मृत्युसुता वक्रास्ते कृष्णकेतवः ।**
**भूसुता जलतैलाभा वर्तुलाः क्षुद्भयप्रदाः ॥१०॥**

अन्वयः - वक्राः कृष्णकेतवः मृत्युसुता, ते व्याधिप्रदाः । जलतैलाभा वर्तला भूसुता, (ते) क्षुद्भयप्रदाः ।

भावार्थः- वक्र र कालो केतु रोगदायक हुन्छ । यस्तो केतुलाई मृत्युसुता भनिन्छ । जल तथा तेलका प्रभावले गोलाकार भएका केतु भोक तथा भयप्रद हुन्छन् । यिनलाई भूमिपुत्र केतु भनिन्छ ।

### सोमपुत्र र पितामहपुत्र केतु

**क्षेमः सुभिक्षदाः श्वेताः केतवः सोमसूनवः ।**
**पितामहात्मजः केतुः त्रिवर्णास्त्रिशिखान्विताः ॥११॥**

अन्वयः - श्वेताः केतवः सोमसूनवः (ते) क्षेमः सुभिक्षदाः । त्रिवर्णा त्रिशिखान्विताः केतुः पितामहात्मजः ।



भावार्थः- श्वेत केतु (चन्द्रपुत्र) क्षेमदायक तथा सुभिक्षकारक हुन्छ । पितामहबाट उत्पन्न केतु तीन वर्ण भएका तथा शीखावाल (ज्वाला सहितका) हुन्छन् ।

### ब्रह्मदण्ड र शुक्रपुत्र केतु

**ब्रह्मदण्डाह्वयः केतुः प्रजानामन्तकृत्सदा ।**
**ऐ(ई)शान्यां भार्गवसुताः श्वेतरूपास्त्वनिष्टदाः ॥१२॥**

अन्वयः - ब्रह्मदण्डाह्वयः केतुः सदा प्रजानां अन्तकृत् (भवति), श्वेतरूपाः भार्गवसुताः ऐशान्यां तु अनिष्टदाः ( भवन्ति) ।

भावार्थः- ब्रह्मदण्डनामक केतु सधैं प्रजानाशक हुन्छ । ईशानकोणमा शुक्रपुत्र श्वेत केतु अनिष्टकारक हुन्छ ।

### शनिपुत्र र गुरुपुत्र केतु

**अनिष्टदाः पङ्गुसुताः द्विशिखाकनकाह्वयाः ।**

**विकचाख्या गुरुसुतानेष्टा याम्यस्थिता अपि ॥१३॥**

अन्वयः - द्विशिखाकनकाह्वयाः पङ्गुसुताः अनिष्टदाः (भवन्ति), विकचाख्या गुरुसुता याम्यस्थिा अपि न इष्टा ।

भावार्थः- दुई पुच्छर भएका र सुनौला शनिपुत्र केतु अनिष्टकारक हुन्छन् । विकच नामका दक्षिणमा देखिने गुरुपुत्र केतुहरू पनि अशुभ फल दिने हुन्छन् ।

बुधपुत्र र मङ्गलपुत्र केतु

**सूक्ष्माः शुक्लाः बुधसुता घोराश्चौरभयप्रदाः ।**
**कुजात्मजाः कुङ्कुमाख्या रक्ताःशूलास्त्वनिष्टदाः ॥१४॥**

अन्वयः - सूक्ष्माः शुक्लाः बुधसुता घोराः चौरभयप्रदाः, कुङ्कुमाख्या रक्ताः शूलाः कुजात्मजाः तु अनिष्टदाः ।

भावार्थः- बुधपुत्र केतु सूक्ष्म र सेतो हुन्छ । यो घोर र चोर भयकारक हुन्छ । मङ्गलपुत्र केतु कुङ्कुम नामका राता र झिरजस्ता हुन्छन् । यसले अनिष्ट गर्दछ ।



अग्निपुत्र र पापपुत्र केतु

**अग्निजा विश्वरूपाख्या अग्निवर्णा शुभप्रदाः ।**
**अरुणाः श्यामलाकाराः पापपुत्राश्च पापदाः ॥१५॥**

अन्वयः - अग्निजा अग्निवर्णा विश्वरूपाख्या (केतवः) शुभप्रदाः, अरुणाः श्यामल आकाराः पापपुत्राः (केतवः) पापदाः (भवन्ति) ।

भावार्थः- अग्निबाट उत्पन्न केतु विश्वरुपले प्रसिद्ध हुन्छन् । यी अग्निवर्णका र शुभदायक हुन्छन् । पापपुत्र केतु पापदायक हुन्छन् ।

शुक्रजन्य र ब्रह्मजन्य केतु

**शुक्रजा ऋक्षसदृशाः केतवः शुभदायकाः ।**
**कङ्काख्या ब्राह्मजाः श्वेताः कष्टा वंशलतोपमाः ॥१६॥**

अन्वयः - ऋक्षसदृशाः शुक्रजा केतवः शुभदायकाः (भवन्ति), ब्राह्मजाः श्वेताः वंशलतोपमाः कङ्काख्या (केतवः) कष्ठा (भवन्ति) ।

भावार्थः- शुक्रबाट उत्पन्न केतु नक्षत्र समानका हुन्छन् र शुभ फल दिने गर्दछन् । कङ्क नामक ब्रह्मका सन्तानरुपी केतु सेता, कष्टदायक तथा वंश वा लहराका समान हुन्छन् ।

कालपुत्रकेतु र विधिपुत्र केतु

**कबन्धाख्याः कालसुताः भस्मरूपास्त्वनिष्टदाः ।**
**विधिपुत्राह्वयाः शुक्लाः केतवोऽनिष्टदायकाः ॥१७॥**

अन्वयः - कालसुताः भस्मरूपाः कबन्धाख्याः (केतवः) तु अनिष्टदाः (भवन्ति), विधिपुत्राह्वयाः शुक्लाः केतवः अनिष्टदायकाः (भवन्ति) ।

भावार्थः- कबन्ध नामका र भष्म आकृतिका कालपुत्रकेतुहरू अनिष्टकारक हुन्छन् । सेतो रङ्का विधिपुत्र केतुहरू पनि अनिष्टकारक हुन्छन् ।



धूमकेतु

**कृत्तिकासुसमूद्भूतो धूमकेतुः प्रजान्तकृत् ।**
**प्रासादशैलवृक्षेषु जातो राज्ञां विनाशकृत् ॥१८॥**

अन्वयः - कृत्तिकासु समुद्भूतः धूमकेतुः प्रजान्तकृत् (भवति), प्रसाद-शैल-वृक्षेषु जातः (धूमकेतुः) राज्ञां विनाशकृत् (भवति) ।

भावार्थः- कृत्तिका नक्षात्रबाट उत्पन्न केतुलाई धूमकेतू भनिन्छ र यसले प्रजावर्गको नाश गर्दछ । दरवार, पर्वत र रुखमा देखिने केतुले राजालाई नाश गर्दछ ।

कुमुदकेतु र आवर्तकेतु

**सुभिक्षकृत् कुमुदाख्यः केतुः कुमुदसन्निभः ।**
**आवर्त्तकेतुः शुभदः रवेश्चावर्तसन्निभः ॥१९॥**

अन्वयः - कुमुसन्निभः कुमुदाख्यः केतुः सुभिक्षकृत् (भवति), रवेः आवर्तसन्निभः आवर्त्तकेतुः शुभदः (भवति) ।

भावार्थः- कुमुद फूलका समानको केतु कुमुदकेतु हुन्छ र यो सुभिक्षकारक हुन्छ । आवर्त्त नामक केतु सूर्यावर्त जस्तै देखिन्छ र शुभ हुन्छ ।

### सम्वर्त केतु

**सम्वर्त्तकेतुः सन्ध्यायां त्रिशिरा नेष्टदाऽरुणः ॥२०॥**

अन्वयः - अरुणः त्रिशिरा सम्वर्त्तकेतुः सन्ध्यायां इष्टदा न (भवति) ।

भावार्थः- सम्वर्त्त केतु तीन टाउके र रातो हुन्छ । यो अनिष्टकारक हुन्छ र साँझमा देखिन्छ ।

इति श्रीनारदीयसंहितायां द्वितीयाध्याये केतुचारः

✷

नारदीय संहिता अन्तर्गत केतुसम्बन्धी विविध कुरा बताइएको दोश्रो अध्यायको केतुचार खण्डको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो



✷

इति श्रीनारदीयसंहितायां ग्रहचाराध्यायो द्वितीयः

✷

नारदीय संहिता अन्तर्गत ग्रह-गतिका बारेमा बताइएको दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷



# तृतीयोऽध्यायः
# सम्वत्सराध्यायः

### विभिन्न नामका वर्षहरु

**ब्राह्मं दैवं मानुषञ्च पित्र्यं सौरञ्च सावनम् ।**
**चान्द्रमार्क्षं गुरोर्मानमिति मानानि वै नव ॥१॥**
**एषां तु नवमानानां व्यववहारोऽत्र पञ्चभिः ।**
**तेषां पृथक् पृथक् कार्यं वक्ष्यते व्यवहारतः ॥२॥**

अन्वयः - ब्राह्मं दैवं मानुषं च पित्र्यं सौरं च सावनं चान्द्रं आर्क्षं गुरोर्मानं इति मानानि वै नव । एषां नवमानानां तु पञ्चभिः अत्र व्यवहारः । तेषां व्यवहारतः पृथक् पृथक् कार्यं वक्ष्यते ।

भावार्थः- ब्राह्म, दैव, मानुष, पैत्र्य, सौर, सावन, चान्द्र, नाक्षत्र र बार्हस्पत्य : यी नौ थरी वर्ष हुन्छन् । यिनमा पाँचवटा व्यवहारमै देखिएका छन् । व्यवहार अनुसार यिनको कार्य पनि बेग्लाबेग्लै बताइन्छ ।



### कुन काम कुन वर्षमानका आधारमा गर्ने ?

**ग्रहणं निखिलं कार्यं गृह्यते सौरमानतः ।**
**विधेर्विधानं स्त्रीगर्भं साजनेनैव गृह्यते ॥३॥**
**प्रवर्षणं मेघगर्भो नाक्षत्रेण प्रगृह्यते ।**
**यात्रोद्वाहव्रतक्षौरतिथिवर्षादिनिर्णयः ॥४॥**
**पर्ववास्तूपवासादि कृत्स्नं चान्द्रेण गृह्यते ।**
**गृह्यते गुरुमानेन प्रभवाद्यब्दलक्षणम् ॥५॥**

अन्वयः - ग्रहणं निखिलं कार्यं सौरमातः गृह्यते । स्त्रीगर्भं विधेर्विधानं साजनेन एव गृह्यते । प्रवर्षणं मेघगर्भः नाक्षत्रेण प्रगृह्यते । यात्राः-उद्वाह-व्रत-क्षौरतिथि वर्षादि निर्णयः (नाक्षत्रेण गृह्यते) । पर्व-वास्तु-उपवास आदि कृत्स्नं चान्द्रेण गृह्यते । प्रभव आदि अब्दलक्षणं गुरुमानेन गृह्यते ।

भावार्थः- ग्रहण र ग्रहणसँग सम्बन्धित कार्य सौरमानबाट, स्त्रीगर्भाधान आदि सावनमानबाट, वर्षा-मेघगर्भ (बादलमा जल आदि सञ्चयन)-यात्रा-विवाह-व्रतबन्ध आदिका लागि तिथिवर्ष

आदिको निर्णय नाक्षत्रमानबाट, पर्वनिर्णय-गृहनिर्माण-व्रत-उपवास आदि निर्णय चान्द्रमानबाट तथा षष्टि सम्बत्सरको लक्षण गुरुमानबाट जानिन्छ ।

**नाक्षत्रमान, सावनमासमान र चान्द्रमानको परिभाषा**

**भचक्रगतिरार्क्षं स्यात्सावनं त्रिंशता दिनैः ।**
**सौरं सङ्क्रमणं प्रोक्तं चान्द्रं प्रतिपदादिकम् ॥६॥**

अन्वयः - भचक्रगतिरार्क्षं त्रिंशता दिनैः सावनं स्यात्, सङ्क्रमणं सौरं, प्रतिपदादिकम् चान्द्रं (च) प्रोक्तम् ।

भावार्थः- नक्षत्र उदाएदेखि अस्ताएसम्मको समयमानलाई नाक्षत्रमान, तीस दिनको सावनमास मान, सूर्य रहेको राशिको सङ्क्रान्तिदेखि सौरमान तथा चैत्रशुक्ल परेवादेखि औंसीसम्मका परेवा आदि तिथिलाई चान्द्रमान भनिन्छ ।

**वर्ष र सम्वत्सर**

**तत्तन्मासैर्द्वादशभिस्तत्तदब्दो भवेत्ततः ।**

**गुरुचारेण सम्भूताः षष्ट्याब्दाः प्रभवादयः ॥७॥**

अन्वयः - ततः तत् तत् द्वादशभिः मासैः तत् तत् अब्दः भवेत् । गुरुचारेण सम्भूताः प्रभवादयः षष्टि अब्दाः (भवन्ति) ।

भावार्थः- आआफ्नो मान अनुसार बाह्र महिनाको एक वर्ष हुन्छ । गुरुमान बाट प्रभव आदि गरिएका साठी वटा सम्वत्सर हुन्छन् ।

**सम्वत्सरका नाम**

**प्रभवो विभवः शुक्लः प्रमोदोऽथ प्रजापतिः ।**
**अङ्गिराः श्रीमुखो भावो युवाधाता तथेश्वरः ॥८॥**
**बहुधान्यः प्रमाथी च विक्रमोवृषसंज्ञकः ।**
**चित्रभानुः स्वर्भानुश्च तारणः पार्थिवो व्ययः ॥९॥**
**सर्वजित् सर्वधारी च विरोधी विकृतः खरः ।**
**नन्दनो विजयश्चैव जयो मन्मथदुर्मुखौ ॥१०॥**

हेमलम्बो विलम्बश्च विकारी शार्वरी प्लवः ।
शुभकृच्छोभनः (भकृत्) क्रोधी विश्वावसुपराभवौ ॥११॥
प्लवङ्गः कीलकः सौम्यः साधारणविरोधिकृत् ।
परीधावी प्रमादी च आनन्दो राक्षसो नलः ॥१२॥
पिङ्गलः कालयुक्तिश्च सिद्धार्थी रौद्र दुर्मतीः ।
दुन्दुभी रुधिरोद्गारी रक्ताक्षी क्रोधनः क्षयः ॥१३॥

अन्वयः - प्रभवः, विभवः, शुक्लः, प्रमोदः, प्रजापतिः, अङ्गिराः, श्रीमुखः, भावः, युवा, धाता, ईश्वरः, बहुधान्य, प्रमाथी, विक्रमः, वृषः, चित्रभानुः, स्वर्भानुः, तारणः, पार्थिवः, व्ययः, सर्वजित्, सर्वधारी, विरोधी, विकृतः, खरः, नन्दनः, विजयः, जयः, मन्मथ, दुर्मुखः, हेमलम्ब, विलम्ब, विकारी, शार्वरी, प्लवः, शुभकृत्, शोभनः, क्रोधी, विश्वावसु, पराभवः, प्लवङ्गः, कीलकः, सौम्यः, साधारण, विरोधिकृत्, परीधावी, प्रमादी, आनन्दः, राक्षसः, नलः, पिङ्गलः कालयुक्तिः, सिद्धार्थी, रौद्र, दुर्मतीः, दुन्दुभी, रुदिरोद्गारी, रक्ताक्षी, क्रोधनः (तथा) क्षयः -(एतानि षष्टिसम्वत्सरनामानि) ।

भावार्थः- सम्वत्सरहरु यस प्रकारका छन्-प्रभव, विभव, शुक्ल, प्रमोद, प्रजापति, अङ्गिरा, श्रीमुख, भावी, युवा, धाता, ईश्वर, बहुधान्य, प्रमाथी, विक्रम, वृष, चित्रभानु, स्वर्भानु, तारण, पार्थिव, व्यय, सर्वजित्, सर्वधारी, विरोधी, विकृत, खर, नन्दन, विजय, जय, मन्मथ, दुर्मुख, हेमलम्ब, विलम्ब, विकारी, शार्वरी, प्लव, शुभकृत्, शोभन, क्रोधी, विश्वावसु, पराभव, प्लवङ्ग, कीलक, सौम्य, साधारण, विरोधिकृत्, परिधावी, प्रमादी, आनन्द, राक्षस, नल, पिङ्गल, कालयुक्ति, सिद्धार्थी, रौद्र, दुर्मति, दुन्दुभी, रुधिरोद्गारी, रक्ताक्ष, क्रोधन र क्षय ।

सम्वत्सर अन्तर्गतका युग र तिनका स्वामी

युगं स्यात्पञ्चभिर्वर्षैर्युगानि द्वादशैव ते ।
तेषामीशाः क्रमाज्ज्ञेया विष्णुर्देवपुरोहितः ॥१४॥
पुरन्दरो लोहितश्च त्वष्टाहिर्बुध्नसंज्ञकः ।
पितरश्च ततो विश्वे शशीन्द्राग्नीभगोश्विनौ ॥१५॥
युगस्य पञ्चवर्षेशा वह्नीनेन्द्रब्जजेश्वराः ।
तेषां फलानि प्रोच्यन्ते वत्सराणां पृथक् पृथक् ॥१६॥

अन्वयः - पञ्चभिः वर्षैः युगं स्यात्, ते युगानि द्वादशः इव, तेषां (द्वादश युगानां) इशाः क्रमात् विष्णुः देवपुरोहितः पुरन्दरः लोहितः त्वष्टा अहिर्बुध्न्यसंज्ञक पितर विश्वे शशी इन्द्राग्नि भगः अश्विनौ

ज्ञेयाः, पञ्चवर्षेशा वह्नि इन्द्रः अब्जजः ईश्वरः(शिवः) (ज्ञेयाः), तेषां (षष्टि सम्वत्सराणां) पृथक् पृथक् फलानि प्रोच्यन्ते ।

भावार्थः- पाँच वर्षको एक युग हुन्छ । यसरी साठी सम्वत्सरमा कुल बाह्र युग हुन्छ । ती बाह्र युगका क्रमशः विष्णु, गुरु, इन्द्र, मङ्गल, त्वष्टा, अहिर्बुध्न्य, पितर, विश्वेदेवा, चन्द्रमा इन्द्राग्नि, भग र अश्विनीकुमार अधिपति हुन्छन् । एक युगमा जुन पाँच वर्ष हुन्छ, त्यसका अधिपति क्रमैले अग्नि, सूर्य, चन्द्रमा, वरुण (ब्रह्मा) र ईश्वर (शिव) हुन्छन् । उपरोक्त प्रभव आदि साठी सम्वत्सरको फल बेग्लाबेग्लै बताइन्छ ।

प्रभव नामक सम्वत्सरको फल

**क्वचिद्वृद्धिः क्वचिद्धानिः क्वचिद्भीतिः क्वचिद्गदः ।**
**तथापि मोदते लोकः प्रभवाब्दे विमत्सरः ॥१७॥**

अन्वयः - प्रभवाब्दे क्वचिद् वृद्धिः क्वचिद् हानिः क्वचिद् भीतिः क्वचिद् गदः (भवति) । तथा अपि विमत्सरः लोकः मोदते ।

भावार्थः- प्रभव सम्वत्सरमा कतै लाभ, कतै नोक्सान, कतै भय र कतै रोग हुने गर्दछ । तैपनि प्रजाहरूका बीचमा आपसी शत्रुता नहुनाले गर्दा ती सुखी हुन्छन् ।

विभव नामक सम्वत्सरको फल

**आन्वीक्षिकीसु निरताः सप्रजाः स्युः क्षितीश्वराः ।**
**कर्षकाभिमता वृष्टिर्विभवाब्दे विवैरिणः ॥१८॥**

अन्वयः - विभवः अब्दे क्षितीश्वराः सप्रजाः आन्वीक्षिकीसु निरताः, वृष्टिः कर्षकाभिमता, विवैरिण स्युः ।

भावार्थः- विभव सम्वत्सरमा राजा र प्रजा तर्क र अध्यात्ममा लागि रहन्छन् । कृषकको अनुकूल वर्षा हुन्छ र प्रजामा आपसी शत्रुता हुँदैन ।

शुक्ल सम्वत्सरको फल

**सकलत्रात्मजाञ्छश्वल्लालयन्त्यबला जनाः ।**
**अमरस्पर्द्धिनः शुक्ले वत्सरे विगतारयः ॥१९॥**

अन्वयः - शुक्ले वत्सरे जनाः विगतारयः अमरस्पर्द्धिनः सकलत्र आत्माजान् शाश्वत् अबला लालयन्ति ।

भावार्थः- शुक्ल सम्वत्सरमा मानिसहरु स्त्री, पुत्र, महिला आदि सहित सुखमा रहन्छन् । प्रजा देवतालेझैं शत्रुबिनाको आनन्द भोग गर्दछन् ।

प्रमोद सम्वत्सरको फल

अतिव्याध्यर्दिता लोकाः क्षितीशाः कलहोत्सुकाः ।
प्रमोदाब्दे प्रमोदन्ते तथाऽपि निखिला जनाः ॥२०॥

अन्वयः - प्रमोद अब्दे लोकाः अतिव्याधि अर्दिता, क्षितीशाः कलहः उत्सुकाः (भवन्ति) । तथा अपि निखिला जनाः प्रमोदन्ते ।

भावार्थः- प्रमोद सम्वत्सरमा जनता धेरै नै रोगले पिडीत हुन्छन् । राजाका बीचमा झगडा भएपनि प्रजा चाहिँ सुखी नै रहन्छन् ।



प्रजापति सम्वत्सरको फल

क्लेशः (क्लैशान्) क्वचिन्न प्रेक्ष्यन्ते (मेक्ष्यन्ते) स्वजनानामनामयः ।
एवं वै मोदते लोका (लोकः) प्रजापति शरद्युतः (शरद्यतः) ॥२१॥

अन्वयः - प्रजापति शरदिः क्वचिद् क्लेशः न प्रेक्ष्यन्ते, स्वजनानां अनामयः, एवं लोका वै मोदते ।

भावार्थः- प्रजापति सम्वत्सरमा कतै कष्ट देखिन्न । आफन्त जनसँग मित्रता बढ्दछ । जनता रोगले रहित भई आनन्दले रहन्छन् ।

अङ्गिरा सम्वत्सरको फल

अतिथिस्वजनैस्सार्द्धमन्नं वोभुज्यते मधु ।
पेपीयन्ते कामिनीभिरङ्गिराऽब्दे निरन्तरम् ॥२२॥

अन्वयः - अङ्गिराः अब्दे (जनाः) अतिथि-स्वजनैः सार्द्धं अन्नं भुज्यते, कामिनीभिः (सहः) मधु पेपीयन्ते ।

भावार्थः- अङ्गिरा सम्वत्सरमा जनता अतिथि र आफन्तका साथ मीठो भोजन गर्दछन् तथा कामिनीका साथ मधुपान गर्दछन् ।

श्रीमुख सम्वत्सरको फल

**श्रीमुखेऽब्दे दुग्धपूर्णा गो कर्णवलयेव भूः ।**
**सस्यपीतावरावारि गावस्तुङ्ग पयोधराः ॥२३॥**

अन्वयः - श्रीमुखे अब्दे गो दुग्धपूर्णा, भूः कर्णवलय एव, सस्यपीतावरावारि, तुङ्ग पयोधराः गावः (भवन्ति) ।

भावार्थः- श्रीमुख सम्वत्सरमा दूधले परिपूर्ण गाई तथा कानका कुण्डल जस्तो पृथ्वी हुन्छ । नाज फल्न श्रेष्ठ जल हुन्छ तथा गाईहरुका कल्चौंडा दूधले भरिएका हुन्छन् ।

भाव वा भावी सम्वत्सरको फल

**स्युर्भूभुजो प्रभाभाजः प्रभञ्जनभुजः परे ।**
**भावाब्दे भूसुरग्राम (भूगणाग्राम) भ्रमणं लोभतः सदा ॥२४॥**



अन्वयः - भाव अब्दे भूभुजः प्रभाभाजः स्युः,  परे (जनाः) प्रभञ्जनभुजः, भूसुरग्राम सदा लोभतः भ्रमणं (कुर्वन्ति) ।

भावार्थः- भाव (भावी) सम्वत्सरमा राजा प्रभावशाली भए पनि जनता वायु पान गर्ने (अकाल पीडित) हुन्छन् र ब्राह्मणहरु सधैं लोभले गर्दा घुमिरहन्छन् ।

युवा सम्वत्सरको फल

**नात्यजस्रं रमयति युवाब्दे युवतीजनः ।**
**युवानो निखिला लोकाःक्षितिश्चापि फलोत्कटा ॥२५॥**

अन्वयः - युवा अब्दे युवतीजनः न अति अजस्रं रमयति, निखिला लोकाः अपि युवानः (भवन्ति), क्षितिः च फलः उत्कटा (भवति) ।

भावार्थः- युवा सम्वत्सरमा युवतीहरु निरन्तर शिष्टाचारले सहित भई भ्रमण गर्दछन् । सबै जनता हृष्टपुष्ट हुन्छन् । पृथ्वी प्रशस्त फलले परिपूर्ण रहन्छ ।

धाता सम्वत्सरको फल

**धात्री धात्रीव लोकानामभया च फलप्रदा ।**
**धात्र्यब्दे (धात्राब्दे) धरणीनाथाः परस्परजयोत्सुकाः ॥२६॥**

अन्वयः - धात्री अब्दे धात्री धात्रीव लोकानां अभया फलप्रदा च (भवति) । धरणीनाथाः परस्पर जयः उत्सुकाः (भवन्ति) ।

भावार्थः- धाता सम्वत्सरमा राजाहरु परस्परमा जय चाहने हुन्छन् भने धर्तीले आमासरह बनी संसारलाई अभय दिने हुन्छिन् ।

ईश्वर सम्वत्सरको फल

**ईश्वराब्दे स्थिराः क्ष्मेशाः जगदानन्दिनी मही ।**
**अध्वरे निरता विप्राः स्वस्वमार्गे रताः परे ॥२७॥**

अन्वयः - ईश्वर अब्दे क्ष्मेशाः स्थिराः (भवन्ति), मही जगत् आनन्दिनी (भवति), विप्राः अध्वरे निरता (भवन्ति), परे स्वस्वमार्गे रताः (भवन्ति) ।

भावार्थः- ईश्वर सम्वत्सरमा सबै राजा शान्त र सुखी हुन्छन् । भूमि संसारका लागि आनन्ददायिनी, ब्राह्मण यज्ञकर्ममा रागिरहने तथा अन्यजन आफ्नो धर्म अनुकूल कर्म गर्दछन् ।

बहुधान्य सम्वत्सरको फल

**बहुधान्ये च बहुभिर्धान्यैः पूर्णाखिला धरा ।**
**प्रभूत पयसो गावो राजानः स्युर्विवैरिणः ॥२८॥**

अन्वयः - बहुधान्ये (अब्दे) अखिला धरा बहुभिः धान्यैः पूर्णा (भवति) । गावः प्रभूत पयसः (भवन्ति) । राजानः विवैरिणः स्युः ।

भावार्थः- बहुधान्य सम्वत्सरमा भूमि अनाजले परिपूर्ण हुन्छ, गाई प्रशस्त दूध दिने र राजाहरु शत्रु रहित हुन्छन् ।

प्रमाथी सम्वत्सरको फल

**बलाहका न मुञ्चन्ति कुत्रचित्प्रचुरं पयः ।**
**प्रमाथ्यब्दे वीतरागास्तथाऽपि निखिला जनाः ॥२९॥**

अन्वयः - प्रमाथी अब्दे बलाहका कुत्रचित् प्रचुरं पयः न मुञ्चन्ति । तथा अपि निखिला जनाः वीतरागाः (भवन्ति) ।

भावार्थः- प्रमाथी सम्वत्सरमा बादलले कतैपनि प्रशस्त पानी पार्दैन । तर पनि जनमानस इन्द्रियजित् हुने वा वैराग्यमा रमाउने हुन्छन् ।

विक्रम सम्वत्सरको फल

**प्रवहन्ति जलं स्वच्छं स्रवन्ति प्रचुरं पयः ।**

**विक्रमाब्देऽखिलाः क्ष्मेशाः विक्रमाक्रान्तभूमयः ॥३०॥**

अन्वयः - विक्रम अब्दे अखिलाः क्ष्मेशाः विक्रमाक्रान्तभूमयः (भवन्ति) , जलं स्वच्छं प्रवहन्ति, प्रचुरं पयः स्रवन्ति ।

भावार्थः- विक्रम सम्वत्सरमा स्वच्छ जल बहन्छ, उत्तम वर्षाले सुन्दर जलधारा बहन्छ तथा राजा आफ्नू पराक्रमले परिपूर्ण हुन्छन् ।

वृष सम्वत्सरको फल

**विविधैरन्नपानाद्यैर्हृष्टपुष्टाङ्गचेतसः ।**
**मदोन्मत्ताखिला लोका वृषाब्दे वृषसन्निभाः ॥३१॥**

अन्वयः- वृष अब्दे विविध अन्नपानाद्यैः हृष्टपुष्टाङ्गचेतसः अखिला लोका वृषसन्निभाः मदोन्मत्ता (भवन्ति) ।

भावार्थः- वृष सम्वत्सरमा अनेक थरी अन्न खाई सबै जना हृष्टपुष्ट, प्रसन्न र मदोन्मत्त भई साँढे जस्तै हुन्छन् ।

### चित्रभानु सम्वत्सरको फल

विचित्रा वसुधा चित्रपुष्पवृष्टिफलादिभिः ।
चित्रभानुशरद्येषा भाति चित्राङ्गना यथा ॥३२॥

अन्वयः चित्रभानु शरदी चित्रपुष्प-वृष्टि-फलादिभिः एषा वसुधा यथा चित्राङ्गना भाति (तथा) विचित्रा (भाति) ।

भावार्थः- चित्रभानु सम्वत्सरमा चित्रविचित्रका फलफूलका प्रभावले यो भूमि कुनै सुन्दर युवतीझैं विचित्र शोभाले युक्त हुन्छ ।

### सुभानु सम्वत्सरको फल

नन्दतीह जनाः (भजन्ते भेषजं मुक्ता) सर्वे भूमिभूरि फलान्विता ।
सुभानु(स्वर्भानु)वत्सरे भूमिर्भीम भूपाल विग्रहा ॥३३॥

अन्वयः - सुभानु वत्सरे इह सर्वे जनाः नन्दति, भूमि भूरि फलान्विता (भवति), भूमिः भीम भूपाल विग्रहा (च भवति) ।

भावार्थः- सुभानु (स्वर्भानु) सम्वत्सरमा सबै आनन्दित हुन्छन् । भूमि अनेक थरीका फलले युक्त हुन्छ र राजामा युद्धको स्थिति रहन्छ ।

### तारण सम्वत्सरको फल

प्रतरन्त्युडुपोपायैः सरितोर्थाय सन्ततम् ।
तारणाब्दे त्वतुलिता अर्थवन्तो हि जन्तवः ॥३४॥

अन्वयः तारण अब्दे तु जन्तवः अतुलिता अर्थवन्तः (भवन्ति), (ते) सन्ततं अर्थाय उडुपायैः सरितः प्रतरन्ति ।

भावार्थः- तारण सम्वत्सरमा अतुलनीय धनका लागि मानिसहरु निरन्तर डुङ्गाबाट नदीहरु तर्दछन् ।

### पार्थिव सम्वत्सरको फल

**पतन्ति करकोपेताः पयोधारा निरन्तरम् ।**
**पापादपेतमनसः पार्थिवाब्दे तु पार्थिवाः ॥३५॥**

अन्वयः - पार्थिव अब्दे निरन्तरं करकोपेताः पयोधारा पतन्ति । पार्थिवाः तु पापाद् अपेतमनसः (भवन्ति) ।

भावार्थः- पार्थिव सम्वत्सरमा आगो सहितको वर्षा हुन्छ र राजाहरु आफ्नो मनले पाप चिताउने गर्दैनन् ।

### व्यय सम्वत्सरको फल

**दीप्यते वसुधा वीरभटवारणवाजिभिः ।**
**व्यपेतव्याधयः सर्वे व्ययाब्दे तु व्ययान्विताः ॥३६॥**

अन्वयः - व्यय अब्दे वसुधा वीर-भट-वारण-वाजिभिः दीप्यते । सर्वे तु व्यपेतव्यायः व्ययान्विताः (भवन्ति) ।



भावार्थः- व्यय सम्वत्सरमा पृथ्वी शूरवीर-हाती-घोडा आदिले सुशोभित हुन्छ । सबै जनता निरोगी र खर्चालु हुन्छन् ।

### सर्वजित् सम्वत्सरको फल

**गीर्वाणपूर्णगीर्वाणाः (गीर्वाणान्) गर्वनिर्भरचेतसः ।**
**सर्वजिद्वत्सरे सर्व उर्वीशान् हन्ति भूमिपान् ॥३७॥**

अन्वयः - सर्वजित् वत्सरे गीर्वाणाः गर्वनिर्भरचेतसः गीर्वाणपूर्ण (भवन्ति) । भूमिपान् सर्व उर्वीशान् हन्ति ।

भावार्थः- सर्वजित् सम्वत्सरमा विद्वत्वर्ग अभिमानी हुन्छन् भने ठूला राजाले साना राजालाई नष्ट पार्दछन् ।

### सर्वधारी सम्वत्सरको फल

**सर्वधारीवत्सरेऽस्मिन् जगदानन्दिनी धरा ।**
**प्रशान्तवैरा राजानः प्रजापालन तत्पराः ॥३८॥**

अन्वयः - सर्वधारी वत्सरे अस्मिन् धरा जगत् आनन्दिनी (भवति) । राजानः प्रशान्तवैरा प्रजापालन तत्पराः (भवन्ति) ।

भावार्थः- सर्वधारी सम्वत्सरमा पृथ्वी सबै जीवका लागि आनन्ददायक हुन्छिन् । प्रजापालनामा तत्पर सबै राजा शत्रुता रहित हुन्छन् ।

### विरोधी सम्वत्सरको फल

**विरोधं (विरोधे) सततं कुर्वन्त्यन्योन्यं क्षितिपाः प्रजाः ।**
**विरोधिवत्सरे भूमिभूरिवारिधरैर्वृता ॥३९॥**

अन्वयः - विरोधि वत्सरे क्षितिपाः प्रजाः अन्य अन्यं सततं विरोधं कुर्वन्ति । भूमि भूरिवारिधरैर्वृता (भवति) ।

भावार्थः- विरोधी सम्वत्सरमा राजा र प्रजामा वैरभाव हुन्छ र जमिनमा अत्यधिक वर्षा हुन्छ ।

### विकृत सम्वत्सरको फल

**विकृतिः प्रकृतिं याति प्रकृतिर्विकृतिं तथा ।**
**तथाऽपि मोदते लोकस्तस्मिन् विकृतवत्सरे ॥४०॥**

अन्वयः विकृत वत्सरे विकृतिः प्रकृतिं तथा प्रकृतिः विकृतिं याति । तथा अपि तस्मिन् (वत्सरे) लोकः मोदते ।

भावार्थः- विकृत सम्वत्सरमा सबै कार्य उल्टो हुन्छ अर्थात तलका माथि जान्छन् र राम्रा मानिस पछारिन्छन् । तै पनि जनता आनन्दित नै हुन्छन् ।

### खर सम्वत्सरको फल

**खराब्दे सततं सम्यग्बध्यन्ते पशवः प्रजाः ।**
**राजानो विलयं यान्ति परस्परविरोधतः ॥४१॥**

अन्वयः - खर अब्दे पशवः प्रजाः सम्यग् सततं बध्यन्ते । परस्परविरोधतः राजानः विलयं यान्ति ।

भावार्थः- खर सम्वत्सरमा पशु र मानिस एकआपसमा मारिन्छन् । एकआपसमा विरोधका कारण राजाहरूको नाश हुन्छ ।

### नन्दन सम्वत्सरको फल

**आनन्ददा धराजस्रं प्रजाभ्यः फलसञ्चयैः ।**
**नन्दनाब्दे स्वहानिः स्यात्कोशधान्यविनाशकृत् ॥४२॥**

अन्वयः - नन्दन अब्दे धरा अजस्रं फलसञ्चयैः आनन्ददा (भवति) । स्वहानिः कोशधान्य विनाशकृत् स्यात् ।



भावार्थः- नन्दन सम्वत्सरको पूर्वार्द्धमा फलसञ्चयले गर्दा भूमि सदा जनताका लागि आनन्ददायिनी हुन्छिन् । उत्तरार्द्धमा सञ्चित धनधान्यको हानी हुन्छ ।

### विजय सम्वत्सरको फल

**नश्यते वारिधाराभिः पूर्वकृष्यखिलं फलम् ।**
**राजभिश्चापरं सर्वं विजयाब्दे जयेच्छुभिः ॥४३॥**

अन्वयः - विजय अब्दे वारिधाराभिः पूर्वकृष्यखिलं फलं नश्यते । जयेच्छुभिः राजभिः अपरं सर्वं (नश्यते) ।

भावार्थः- विजय सम्वत्सरमा अतिवृष्टिले गर्दा पहिलो खेतीको र विजय चाहने राजाले गर्दा पछिल्लो खेती नाश हुन्छ ।

जय सम्वत्सरको फल

**शैलोद्यानवनाराम फलैरतुलिता मही ।**
**जेगीयते वेणुनादैर्जयाब्दे च महाजलम् ॥४४॥**

अन्वयः जय अब्दे मही शैल-उद्यान-वन-आराम फलैः अतुलिता (भवति) । महाजलं च, वेणुनादैः जेगीयदे ।

भावार्थः- जय सम्वत्सरमा सबै जमिन-पर्वत-बगैँचा-वन-उपवन फलले भरिन्छ, धेरै वर्षा हुन्छ तथा बाँसुरीको जयध्वनी जस्तो सुमधुर सङ्गीत सुनिन्छ ।

मन्मथ सम्वत्सरको फल

**मन्मथाब्देऽखिला लोकास्तत्केलिपरलोलुपाः ।**
**शालीक्षुयवगोधूमैर्नयनाभिनवा धरा ॥४५॥**

अन्वयः- मन्मथ अब्दे अखिला लोकाः तत् केलपरलोलुपा (भवन्ति) । शालि-इक्षु-यव-गोधूमैः धरा नयन-अभिनवा (दृश्यन्ति) ।



भावार्थः- मन्मथ सम्वत्सरमा सबै जना रमणीहरुका साथमा रमण गर्न तत्पर भइरहन्छन् । धान-ऊखु-जौ-गहुँ आदि अन्नले जमिन मनोरम देखिन्छ ।

दुर्मुख सम्वत्सरको फल

**दुर्मुखाब्देऽग्निरोगाः स्युः प्रचुरान्नं तथा पयः ।**
**राजानः स प्रजास्तुष्टा निःस्वाश्च द्विज सत्तमा ॥४६॥**

अन्वयः- दुर्मुख अब्दे अग्निः रोगाः, अन्नं तथा पयः प्रचूर स्यु, राजानः स प्रजाः तुष्टाः, सत्तमा द्विज निःश्वाः (स्युः) ।

भावार्थः- दुर्मुख सम्वत्सरमा प्रचूरमात्रामा अन्न तथा दूध हुनेछ । अग्निको भय र रोग हुनेछ । राजा र प्रजा प्रसन्न रहेपनि श्रेष्ठ ब्राह्मण गरिब हुनेछन् ।

हेमलम्ब सम्वत्सरको फल

**हेमलम्बे नृपाः सर्वे परस्पर विरोधिनः ।**
**प्रजा पीडात्वनर्घत्वं तथाऽपि सुखिनो जनाः ॥४७॥**

अन्वयः - हेमलम्बे अब्दे सर्वे नृपाः परस्पर विरोधिनः (भवन्ति), प्रजा पीडा तु अनर्घत्वं, तथा अपि जनाः सुखिनः (भवन्ति) ।

भावार्थः- हेमलम्ब सम्वत्सरमा सबै राजा परस्पर विरोधी हुने छन् । प्रजा पीडित हुने छन् । वस्तुको मूल्य महँगो भए पनि जनवर्ग सुखी हुनेछन् ।

विलम्बि सम्वत्सरको फल

**विलम्बिवत्सरे राजविग्रहो भूरिवृष्टयः ।**
**आतङ्क पीडिता लोकाः प्रभूतश्चापरं फलम् ॥४८॥**



अन्वयः - विलम्बि वत्सरे राजविग्रहः, भूरिवृष्टयः, लोकाः आतङ्क पीडिता, अपरं फलं प्रभूतम् (भवति) ।

भावार्थः- विलम्बि सम्वत्सरमा राजाहरूका बीचमा युद्ध हुन्छ । अत्यधिक बर्षा हुन्छ । जनता आतङ्कित तथा रोगी भएपनि अन्य फल भने राम्रो हुन्छ ।

विकारी सम्वत्सरको फल

**विकारिणो विकार्यब्दे पित्तरोगादिभिर्नराः ।**
**मेघो वर्षति सम्पूर्ण समुद्र वसन क्षितौ ॥४९॥**

अन्वयः - विकारी अब्दे नराः पित्तरोगादिभिः विकारिणः (भवन्ति) । सम्पूर्ण क्षितौ समुद्र वसन मेघो वर्सति ।

भावार्थः- विकारी सम्वत्सरमा मानिस पित्त आदिका रोगले पीडित हुन्छन् तथा वर्षाले गर्दा पृथ्वीको सबैतिर पानी नै पानी भई समुद्र जस्तै देखिन्छ ।

### शार्वरी सम्वत्सरको फल

शार्वरी वत्सरे सर्वसस्य वृद्धिरनुत्तमा ।
चलिताचल सङ्काशैः पयोदैरावृतं नमः ॥५०॥

अन्वयः - शार्वरी वत्सरे सर्वसस्य अनुत्तमा वृद्धिः (भवति) । चलित अचल सङ्काशैः पयोदैः ऐरावृतं नमः (भवति) ।

भावार्थः- शार्वरी सम्वत्सरमा सबै खाले धानको उत्पादन राम्रो हुन्छ । हिँड्ने पर्वतका समान सुन्दर बादलले आकाश ढाकिरहन्छ ।

### शुभकृत् सम्वत्सरको फल

शुभकृद्वत्सरे सर्व सस्यानामति वृद्धयः ।
नृपाणां स्नेहमन्योऽन्यं प्रजानाञ्च परस्परम् ॥५२॥



अन्वयः - शुभकृत् वत्सरे सर्वसस्यानां अति वृद्धयः (भवति) । नृपाणां प्रजानाञ्च परस्परं अन्यः अन्यं स्नेहम् (भवति) ।

भावार्थः- शुभकृत् सम्वत्सरमा अनेक थरी अनाजको उत्पादन धेरै हुन्छ । राजाहरू र प्रजाहरूका बीचमा आपसी माया बढ्दछ ।

### शोभन सम्वत्सरको फल

शोभनाख्येहायनेतु शोभनं भूरिवर्त्तते ।
नृपाश्चैवात्र निर्वैराः सर्वसम्पद्युता धरा ॥५३॥

अन्वयः - शोभनाख्ये हायने तु भूरि शोभनं वर्त्तते । अत्र नृपाश्चैव निर्वैराः (भवन्ति) । धरा सर्वसम्पद् युता (भवति) ।

भावार्थः- शोभन सम्वत्सरमा राजाहरू वैरी नभएका हुनेछन् तथा भूमि सर्वधान्य सम्पन्न भई शोभित हुन्छ ।

### प्लव सम्वत्सरको फल

**दीप्यन्ते सततं भूपाः प्लवाब्दे प्लवगा जनाः ।**
**राजते पृथिवी सर्वा सततं विविधोत्सवैः ॥५१॥**

अन्वयः - प्लव अब्दे भूपाः सततं दीप्यन्ते, जनाः प्लवगा (भवन्ति), विविधः उत्सवैः सर्वा पृथिवी सततं राजते ।

भावार्थः- प्लव सम्वत्सरमा राजाहरू निरन्तर सुशोभित हुन्छन् । प्रजाहरू डुङ्गा चढेर घुम्दछन् । अनेक प्रकारका उत्सवले सारा पृथ्वी निरन्तर सुशोभित हुने गर्दछ ।

### क्रोधी सम्वत्सरको फल

**क्रोध्यब्दे सततं रोगाः सर्वसस्य समृद्धयः ।**
**दम्पत्योर्वैरमन्योन्यं प्रजानाञ्च परस्परम् ॥५४॥**



अन्वयः - क्रोधी अब्दे सततं रोगाः, सर्वसस्य समृद्धयः, दम्पत्योः प्रजानाञ्च अन्योन्यं परस्परं वैरम् ।

भावार्थः- क्रोधी सम्वत्सरमा जनता सधैं रोगी हुन्छन् । सबै खालका अनाजको उत्पादन राम्रो हुन्छ । दाम्पत्य जीवन कलहपूर्ण रहन्छ । मानिस एक आपसमा झगडा गर्दछन् ।

### विश्वावसु सम्वत्सरको फल

**शश्वद्विश्वावसावब्दे मध्य सस्यार्धवृष्टः ।**
**प्रचुराश्चौर रोगाश्च नृपा लोभाभिभूतयः ॥५५॥**

अन्वयः - विश्वावसु अब्दे शश्वत् अर्धवृष्टः सस्य मध्या, चौर रोगाश्च प्रचुराः, नृपा लोभाभिभूतयः (भवन्ति) ।

भावार्थः- विश्वावसु सम्वत्सरमा मध्यम वर्षा भई मध्यम अनाज उत्पादन हुन्छ । अनाजको भाउ महँगो हुन्छ । रोग र चोर बढ्दछन् । राजा लोभी हुन्छन् ।

पराभव सम्वत्सरको फल

**पराभवाब्दे राजानः प्राप्नुवन्ति पराभवम् ।**
**आमयः क्षुद्रधान्यानि प्रभूतानि सुवृष्टयः ॥५६॥**

अन्वयः - पराभव अब्दे राजानः पराभवम् प्राप्नुवन्ति, आमयः, सुवृष्टयः क्षुद्रधान्यानि प्रभूतानि ।

भावार्थः- पराभव सम्वत्सरमा राजाहरू तिरस्कृत हुन्छन्, रोग लाग्दछ, पानी धेरै पर्दछ र कागुनु, कोदो आदिजस्ता अनाजको उत्पादन धेरै हुन्छ ।

प्लवङ्ग सम्वत्सरको फल

**प्लवङ्गाब्दे सस्यहानिश्चौररोगार्दिता जनाः ।**
**मध्यवृष्टिः क्षितीशानां विरोधश्च परस्परम् ॥५७॥**

अन्वयः - प्लवङ्ग अब्दे सस्यहानिः, जनाः चौर-रोगार्दिता, मध्यवृष्टिः, क्षितीशानां परस्परं विरोधश्च (भवति) ।



भावार्थः- प्लवङ्ग सम्वत्सरमा अनाजको हानी हुन्छ । जनता चोर र रोगले त्रसित हुन्छन् । सामान्य खालको वर्षा हुन्छ । राजाहरूका बीचमा विवाद हुन्छ ।

कीलक सम्वत्सरको फल

**प्रचुराः पित्तरोगाः स्युर्मध्या वृष्टिरहेर्भयम् ।**
**कीलकाब्दे त्वीतिभयं प्रजाक्षोभः परस्परम् ॥५८॥**

अन्वयः - कीलक अब्दे पित्तरोगाः प्रचुराः, वृष्टिः मध्या, अहेर्भयम्, ईति भयम्, प्रजा परस्परं क्षोभः स्युः ।

भावार्थः- कीलक सम्वत्सरमा पित्तरोगमा वृद्धि हुन्छ । सामान्य खालको वर्षा हुन्छ । सर्पको र ईतिको भय हुन्छ । जनता परस्पर भयग्रस्त हुन्छन् ।

### सौम्य सम्वत्सरको फल

**प्रचुराः शैत्यरोगाः स्युर्मध्या वृष्टिरहेर्भयम् ।**
**सौम्याब्दे चैव सततं शान्तवैरा क्षितीश्वराः ॥५९॥**

अन्वयः सौम्य अब्दे शैत्यरोगाः प्रचुराः, वृष्टिः मध्या, अहेर्भयं स्युः । क्षितीश्वराः सततं शान्तवैरा (भवन्ति) ।

भावार्थः- सौम्य सम्वत्सरमा चिसोले हुने रोगमा वृद्धि हुन्छ । सामान्य खालको वर्षा हुन्छ । सर्पको डर रहन्छ । राजाहरु खुशी हुन्छन् ।

### साधारण सम्वत्सरको फल

**साधारणेब्दे राजानः सुखिनो गतमत्सराः ।**
**प्रजाश्च पशवः सर्वे वृष्टिः कर्षकसम्मता ॥६०॥**

अन्वयः - साधारण अब्दे राजानः गतमत्सराः सुखिनः, सर्वे पशवः प्रजाश्च, कर्षकसम्मता वृष्टिः (भवति) ।



भावार्थः- साधारण सम्वत्सरमा एकआपसको शत्रुता छाडी राजाहरु सुखी रहन्छन् । प्रजा र पशुमा आपसमा प्रेम रहन्छ । खेती अनुकूलको पानी पर्दछ ।

### विरोधकृत् सम्वत्सरको फल

**विरोधकृद्वत्सरे तु परस्पर विरोधिनः ।**
**राजानो मध्यमा वृष्टिः प्रजा स्वस्था निरन्तरम् ॥६१॥**

अन्वयः - विरोधकृत् वत्सरे तु राजानः परस्पर विरोधिनः, वृष्टिः मध्यमा, प्रजा निरन्तरं स्वस्था ।

भावार्थः- विरोधकृत् सम्वत्सरमा सबै राजा एकआपसमा वैरी हुनेछन् । वर्षा मध्यमखालको हुन्छ । जनता स्वस्थ चित्तका हुन्छन् ।

### परिधावी सम्वत्सरको फल

**अनर्घ्यामयरोगेभ्यो भीतिरीतिनिरन्तरम् ।**
**परिधावीवत्सरे तु नृणां वृष्टिस्तु मध्यमा ॥६२॥**

अन्वयः - परिधावी वत्सरे तु नृणां निरन्तरम् अनर्घ्य, आमय, रोगेभ्यो ईति भीति । वृष्टिस्तु मध्यमा ।

भावार्थः- परिधावी सम्वत्सरमा अनाज महँगो हुन्छ । मानिसमा रोग, इति आदि उपद्रवको सधैं डर हुन्छ । वर्षा सामान्य हुन्छ ।

### प्रमादी सम्वत्सरको फल

**नृपसंक्षेभमत्युग्रं प्रजापीडा त्वनर्घता ।**
**तथापि (तथा च) दुःखमाप्नोति प्रमादीवत्सरे जनः ॥६३॥**

अन्वयः - प्रमादी वत्सरे नृप अत्युग्रं संक्षेभम्, प्रजापीडा, अनर्घता, जनः दुःखमाप्नोति ।



भावार्थः- प्रमादी सम्वत्सरमा राजाहरूमा शत्रुता हुन्छ । प्रजालाई कष्ट हुन्छ । भाउवेसा महँगो हुन्छ । जनता दुःखी हुन्छन् ।

### आनन्द सम्वत्सरको फल

**आनन्दवत्सरे सर्वजन्तवः पशवः सदा ।**
**आनन्दयन्ति चान्योन्यमन्यथा तु क्वचित् क्वचित् ॥६४॥**

अन्वयः आनन्द वत्सरे सर्वजन्तवः पशवः सदा चान्योन्यं आनन्दयति, क्वचित् क्वचित् तु अन्यथा (भवति) ।

भावार्थः- आनन्द सम्वत्सरमा सबै प्राणी आनन्द र प्रेमले रहन्छन् । अन्यत्र कतैकतै मात्र कष्ट देखिन्छ ।

राक्षस सम्वत्सरको फल

**प्रजायां मध्यमसुखं (आनता मध्य फलदा) तदधीशाहवोन्वहम् ।**
**निष्क्रिया राक्षसाब्दे तु राक्षसा इव जन्तवः ॥६५॥**

अन्वयः - राक्षस अब्दे प्रजायां मध्यमसुखं, तदधीशाहवोन्वहम्, जन्तवः तु राक्षासा इव निष्क्रिया भवन्ति ।

भावार्थः- राक्षस सम्वत्सरमा प्रजा अलिअलि सुखी हुन्छन् । राजामा दिनहुँ युद्धको स्थिति हुन्छ । सबै प्राणि राक्षसी आचरण गर्दछन् ।

नल वा अनल सम्वत्सरको फल

**अनलाब्देऽनलभयं मध्यवृष्टिरनर्घता ।**
**नृपाः संक्षेभसम्भूता भूरिभीकरभूमिपाः ॥६६॥**

अन्वयः - अनल अब्दे अनल भयं, मध्यवृष्टिः, अनर्घता, संक्षेभसम्भूता नृपाः, भूरिभीकर भूमिपाः ।



भावार्थः- अनल सम्वत्सरमा आगोको डर हुन्छ । मध्यम खालको वर्षा हुन्छ । अनाज महँगो हुन्छ । राजाहरुमा असन्तोषले गर्दा युद्धको स्थिति बनि रहन्छ ।

पिङ्गल सम्वत्सरको फल

**पिङ्गलाब्दे तु सततं दिक्पूरितघनस्वनम् ।**
**राजानः स्वभुजाक्रान्ता भुञ्जते क्ष्मामनुत्तमाम् ॥६७॥**

अन्वयः - पिङ्गल अब्दे तु सततं दिक्पूरित घनस्वनम् (भवति), राजानः स्वभुजाक्रान्ता अनुत्तमां क्ष्मां भुञ्जते ।

भावार्थः- पिङ्गल सम्वत्सरमा सबै दिशा वर्षा र बादलको गर्जनाले भरिपूर्ण हुन्छ । राजा आफूले जितेको उत्तम जमिनको सुख लिन्छन् ।

### कालयुक्त सम्वत्सरको फल

**अतिवृष्टिः कालयुक्ते वत्सरे सुखिनो जनाः ।**
**सततं सर्वसस्यानि सम्पूर्णाश्च तथा द्रुमाः ॥६८॥**

भावार्थः- कालयुक्त सम्वत्सरमा उत्तम खालको वर्षा हुन्छ । जनता सुखी हुन्छन् । सबै जमिन धनधान्यले पूर्ण हुन्५न् । वृक्ष सफल (फलफूल र हरियालीले पूर्ण) हुन्छन् ।

### सिद्धार्थ सम्वत्सरको फल

**सिद्धार्थीवत्सरे भूपाश्चान्योन्यं स्नेहकाङ्क्षिणः ।**
**सम्पूर्णसस्यां वसुधां दुदुहुर्गां यथा तथा ॥६९॥**

अन्वयः - सिद्धार्थी वत्सरे भूपाः अन्योन्यं स्नेहकाङ्क्षिणः (भवन्ति), यथा गां तथा वसुधां सम्पूर्णसस्यां दुदुहुः ।

भावार्थः- सिद्धार्थ सम्वत्सरमा राजाहरुमा आपसी प्रेम हुन्छ । जमिन अनाजले पूर्ण हुन्छ । उत्तम दूध दिने गाईको दूध जस्तै उत्तम अनाज उत्पादन गर्ने कृषक हुन्छन् ।



### रौद्र सम्वत्सरको फल

**अन्योन्यं नृपसंक्षेभं चौरव्याघ्रादिभिर्भयम् (भरम्) ।**
**मध्यवृष्टिरनर्घत्वं रौद्राब्दे नैव गुर्जरे ॥७०॥**

अन्वयः - रौद्र अब्दे नृप अन्यान्यं संक्षेभं, चौरव्याघ्रादिर्भयम्, मध्यवृष्टिः, अनर्घत्वं (च भवति), नैव गुर्जरे ।

भावार्थः- रौद्र सम्वत्सरमा राजाहरुमा भय, चोर-बाघ आदिको डर, मध्यम वर्षा, महँगी भए पनि गुजरातमा यस्तो हुँदैन ।

### दुर्मति सम्वत्सरको फल

**दुर्मत्यब्दे दुर्मलयो भवन्त्यखिल भूमिपाः ।**
**तथापि सुखिनो लोकाः सङ्ग्रामे निर्जितारयः ॥७१॥**

अन्वयः - दुर्मति अब्दे अखिल भूमिपाः दुर्मलयः भवन्ति, तथा अपि सङ्ग्रामे निर्जितारयः लोकाः सुखिन ( भवन्ति) ।

भावार्थः- दुर्मति सम्वत्सरमा सबै राजा अधम बुद्धिका हुन्छन् । तै पनि प्रजा सुखी रही शत्रुमाथि जित हासिल गर्दछन् ।

दुन्दुभि सम्वत्सरको फल

**सर्वसस्यैश्च (सस्येषु) सम्पूर्णा धात्री दुन्दुभिवत्सरे ।**
**राजाभिर्पाल्यते पूर्व देशेश्वर विनाशनम् ॥७२॥**

अन्वयः - दुन्दुभि वत्सरे सर्वसस्यैश्च धात्री सम्पूर्णा (भवति), राजाभिः (जनाः) पाल्यते, पूर्व देशेश्वर विनाशनम् (च भवति) ।

भावार्थः- दुन्दुभि सम्वत्सरमा अनेक थरीका अनाजले भूमि भरिपूर्ण हुन्छ । राजाले जनताको पालन गर्दछन् तर पूर्वीय देशका राजाको नाश हुन्छ ।



रुधिरोद्गारि सम्वत्सरको फल

**आहवे निहताः सर्वे भूपा रोगैस्तथा जनाः ।**
**तथापि तत्रजीवन्ति रुधिरोद्गारि वत्सरे ॥७३॥**

अन्वयः - रुधिरोद्गारि वत्सरे सर्वे भूपा आहवे तथा जनाः रोगैः निहताः, तथापि तत्र जीवन्ति ।

भावार्थः- रुधिरोद्गारि सम्वत्सरमा युद्धरत राजाहरु मारिन्छन् । जनता रोगग्रस्त भई मरेर पनि केही बाँकी रहन्छन् ।

रक्ताक्ष सम्वत्सरको फल

**रक्ताक्ष(क्षि) वत्सरे सस्यवृद्धिर्वृष्टिरनुत्तमा ।**
**प्रेक्षन्ते सर्वदान्योन्यं राजानो रक्तलोचनाः ॥७४॥**

अन्वयः - रक्ताक्ष वत्सरे सस्यवृद्धिः, अनुत्तमा वृष्टिः, राजानः सर्वदा अन्योन्यं रक्तलोचनाः प्रेक्षन्ते ।

भावार्थः- रक्ताक्ष सम्वत्सरमा धान्यको वृद्धि हुन्छ । उत्तम वृष्टि हुन्छ । राजाहरु द्वेष राखी एकअर्कालाई क्रूर दृष्टिले हेर्दछन् ।

क्रोधन सम्वत्सरको फल

क्रोधनाब्दे मध्यवृष्टिः पूर्वसस्यं न तु क्वचित् ।
सम्पूर्णमितरं सस्यं सर्वे क्रोधपरा जनाः ॥७५॥

अन्वयः - क्रोधन अब्दे मध्यवृष्टिः, पूर्वसस्यं तु न क्वचित्, इतरं सस्यं सम्पूर्णम्, सर्वे जनाः क्रोधपरा ।

भावार्थः- क्रोधन सम्वत्सरमा मध्यम खालको वर्षा हुन्छ । पहिलो उब्जनीको नाश हुन्छ तर पछिको उब्जनी उत्तम हुन्छ । जनता रिसाहा हुनेछन् ।

क्षय सम्वत्सरको फल



कार्पास गुडतैलेक्षु मधुसस्य विनाशनम् ।
क्षीयमाणाश्चापि नराः जीवन्ति क्षयवत्सरे ॥७६॥

अन्वयः - क्षय वत्सरे  कार्पास-गुड-तैल-इक्षु-मधु-सस्य विनाशनम्, नराः क्षीयमाणाश्चापि जीवन्ति ।

भावार्थः- क्षय सम्वत्सरमा कपास, सखर, तेल, ऊखु, मह र धानको नोक्सान हुन्छ । जनता दुब्लाएर बाँच्दछन् ।

राजा मन्त्री र सस्येश बिचारी फल बताउनू

आद्यब्देश चमूनाथ सस्यपानां बलाबलम् ।
तत्कालग्रहचारञ्च सम्यग् ज्ञात्वा फलं वदेत् ॥७७॥

अन्वयः - आद्य अब्देश-चमूनाथ-सस्यपानां बलाबलम्-तत्कालग्रहचारञ्च सम्यग् ज्ञात्वा फलं वदेत् ।

भावार्थः- पहिले राजा, सेनापति, मन्त्री र सस्येशको बल थाहा पाएर तत्कालिन गोचर ग्रहको स्थिति बुझी फल बताउनू ।

### दक्षिणायण र उत्तरायण

**सौम्यायनं मासषट्कं मृगाद्यं भानुभुक्तितः ।**
**अहः सुराणां तद्रात्रिः कर्काद्यं दक्षिणायनम् ॥७८॥**

अन्वयः - मृगाद्यं भानुभुक्तितः मासषट्कं सौम्यायनं सुराणां अहः, कर्काद्यं दक्षिणायनं तद् रात्रिः ।

भावार्थः- सूर्यले भोग्ने राशि अनुसार मकरदेखि मिथुनसम्म छ राशिको उत्तरायण देवताको दिन र कर्कटदेखि धनुसम्मका छ राशि दक्षिणायण देवताको रात हुन्छ ।

### दक्षिणायण र उत्तरायणमा गर्न हुने नहुने काम

**गृहप्रवेशवैवाह प्रतिष्ठा मौञ्जिबन्धनम् ।**
**यज्ञादिमङ्गलं कर्म कर्त्तव्यं चोत्तरायणे॥**
**याम्यायनेऽशुभं कर्म मासप्राधान्यमेव च ॥७९॥**

अन्वयः - उत्तरायणे गृहप्रवेश, वैवाह, प्रतिष्ठा, मौञ्जिबन्धनम्, यज्ञादि मङ्गलं कर्म च कर्त्तव्यम् । याम्यायने मासप्रधान्यम् अशुभं कर्म एव (कर्त्तव्यम्) ।

भावार्थः- गृह प्रवेश, विवाह, प्रतिष्ठा, मौञ्जीबन्धन, यज्ञ आदि मङ्गल कार्य उत्तरायणमा नै गर्नुपर्दछ । दक्षिणायणमा अशुभकर्म तथा मास प्रधान कर्म गर्नु पर्दछ ।

### अयण अनुसार पर्ने ऋतुहरु

**क्रमाच्छिशिरवासन्तग्रीष्माः स्युश्चोत्तरायणे ।**
**वर्षा शरच्च हेमन्त ऋतवो दक्षिणायने ॥८०॥**

अन्वयः - उत्तरायणे क्रमात् शिशिर-वासन्त-ग्रीष्माः स्युः । दक्षिणायने वर्षा शरद् हेमन्त ऋतवः ।

भावार्थः- उत्तरायणमा क्रमैले शिशिर, वसन्त र ग्रीष्म तथा दक्षिणायणमा वर्षा, शरद् र हेमन्त ऋतुहरु हुन्छन् ।

**ऋतु , चान्द्रमास र सौरमास**

**माघादिमासौ द्वौद्वौच ऋतवः शिशिरादयः ।**
**चान्द्रो दर्शावधिः सौरः सङ्क्रान्त्या सावनो दिनैः ॥८१॥**

अन्वयः - माघादि द्वौ द्वौ मासौ शिशिरादयः ऋतवः (भवन्ति), दर्शावधिः चान्द्रः, सङ्क्रान्त्या सौरः, सावनो दिनैः...।

भावार्थः- माघबाट शुरु गरी दुई-दुई महिनाको शिशिरादि ऋतु हुन्छ । शुक्ल परेवादेखि औंसी सम्मको चान्द्रमास हुन्छ । एउटा सङ्क्रान्तिदेखि अर्को सङ्क्रान्तिसम्म सौरमास हुन्छ ।

**सावनमास र नाक्षत्रमास**



**त्रिंशद्भिश्चन्द्रभगणो मासो नाक्षत्र संज्ञकः ।**

अन्वयः - त्रिंशद्भिः, चन्द्रभगणः नाक्षत्र संज्ञकः मासः ।

भावार्थः- तीस दिनको एक सावनमास हुन्छ । चन्द्रमाको नक्षत्रगण घुम्ने समयलाई नाक्षत्र मास भनिन्छ ।

**महिनाका नाम**

**मधुश्च माधवः शुक्रः शुचिश्चापि नभाह्वयः ॥८२॥**
**नभस्य इष ऊर्जश्च सहाख्यश्च सहस्यकः ।**
**तपस्तपस्यः क्रमशश्चैत्रादीनान्तु संज्ञकाः ॥८३॥**

अन्वयः - मधुः, माधवः, शुक्रः, शुचिः, नभः, नभस्य, इष, ऊर्जः, सह, सहस्य, तपः, तपस्यः (एते) क्रमशः चैत्रादीनां (मासः) संज्ञकाः ।

भावार्थः- चैत्रादि बाह्र महिनाको नाम क्रमैले मधु, माधव, शुक्र, शुचि, नभ, नभस्य, इष, ऊर्ज, सह, सहस्य, तप र तपस्य भनी बताइएको छ ।

**महिनाका नाम रहने तरिका**

**यस्मिन्मासे पौर्णमासी येन धिष्ण्येन संयुता ।**
**तन्नक्षत्राह्वयो मासः पौर्णमासी तथा ह्वया ॥८४॥**

अन्वयः - यस्मिन् मासे येन धिष्ण्येन पौर्णमासी संयुता तन्नक्षत्राह्वयो पौर्णमासी मासः तथा ह्व

भावार्थः- जुन महिनाको पूर्णिमामा जुन नक्षत्र रहन्छ त्यही नक्षत्रको नाम अनुसार त्यस महिनाको नाम हुन्छ ।

**पक्ष र त्यस अनुसार गर्ने कार्य**

**तत्पक्षौ दैवपित्र्याख्यौ शुक्लकृष्णौ च तावुभौ ।**

**शुभाशुभे कर्मणि च प्रशस्तौ भवतः सदा ॥८५॥**

अन्वयः - तत् शुक्लकृष्णौ पक्षौ दैवपित्र्याख्यौ तावुभौ शुभशुभे कर्मणि च सदा प्रशस्तौ भवतः ।

भावार्थः- एक महिनामा पन्ध्र, पन्ध्र दिनका शुक्लपक्ष र कृष्णपक्ष गरी दुई पक्ष हुन्छन् । शुक्लपक्ष देवकार्यमा र कृष्णपक्ष पितृ कार्यमा तथा क्रमैले शुभ-अशुभ कार्यमा शुभ हुन्छन् भनी बताइएको छ ।

इति श्रीनारदीयसंहितायां सम्वत्सराध्यायः तृतीयः

✷

नारदीय संहिता अन्तर्गत सम्वत्सरका बारेमा बताइएको तेश्रो अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# चतुर्थोऽध्यायः
# तिथिलक्षणाध्यायः

### तिथिका स्वामी

**वह्निर्विरञ्चिर्गिरिजा गणेशः फणी विशाखो दिनकृन्महेशः ।**
**दुर्गान्तको विष्णुहरी स्मरश्च शर्वः शशी चेति पुराणदृष्टः ॥१॥**
**अमायाः पितरः प्रोक्तास्तिथीनामधिपाः क्रमात् ॥२॥**

अन्वयः - वह्निः, विरञ्चिः, गिरिजा, गणेशः, फणी, विशाखा, दिनकृत्, महेशः, दुर्गा, अन्तकः, विष्णु, हरी, स्मरः, शर्वः, शशी, अमायाः पितरः इति क्रमात् पुराणदृष्टः तिथिनां अधिपा प्रोक्ताः ।

भावार्थः- परेवा आदि तिथिका स्वामी क्रमशः अग्नि, ब्रह्मा, गिरिजा (गौरी), गणेश, सर्प, स्कन्द, सूर्य, शिव, दुर्गा, यम, विश्वेदेवा, हरि, कामदेव, शर्व, चन्द्रमा र पितृ हुन् भनी बताइएको छ ।

### तिथिका विभिन्न नाम र फल



**तिथीनामपराः संज्ञाः कथ्यन्ते ता यथा क्रमात् ।**
**नन्दाभद्राजयारिक्ता पूर्णास्युस्तिथयः पुनः ॥३॥**

अन्वयः - तिथिनां अपरा संज्ञाः कथ्यन्ते ता यथा नन्दा भद्रा जया रिक्ता पूर्णा क्रमात् तिथयः स्युः ।

भावार्थः- तिथिका नन्दा, भद्रा, जया, रिक्ता र पूर्णा संज्ञा (नाम) क्रमैले हुन्छन् भनी बताइएको छ ।

**पर्यायत्वेन विज्ञेया नेष्टमध्येष्टदाः सिते ।**
**कृष्णपक्षेऽपीष्टमध्यनेष्टदाः क्रमशः सदा ॥४॥**

अन्वयः - पर्यायत्वेन सिते क्रमशः नेष्ट मध्य इष्टदा तथा कृष्णपक्षे इष्ट मध्य नेष्टदाः सदा विज्ञेया ।

भावार्थः- पन्ध्र तिथिलाई तीन भागमा बाँडेर पञ्चमीसम्म, दशमीसम्म र पूर्णिमासम्म गरी तीन खण्ड क्रमैले शुक्लपक्षमा अशुभ, मध्यम र शुभ तथा कृष्णपक्षमा शुभ, मध्यम र अशुभ हुन्छन् भनी सम्झिनु पर्दछ ।

तेश्रो र चौथो श्लोकसँग सम्बन्धित तालिका

| तिथिको नाम | तिथिहरु | | | वार | योग |
|---|---|---|---|---|---|
| | पहिलो लहर | दोश्रो लहर | तेश्रो लहर | | |
| नन्दा | परेवा | षष्ठी | एकादशी | शुक्र | सिद्धियोग |
| भद्रा | द्वितीया | सप्तमी | द्वादशी | बुध | सिद्धियोग |
| जया | तृतीया | अष्टमी | त्रयोदशी | मङ्गल | सिद्धियोग |
| रिक्ता | चतुर्थी | नवमी | चतुर्दशी | शनि | सिद्धियोग |
| पूर्णा | पञ्चमी | दशमी | पूर्णिमा औंसी | बिही | सिद्धियोग |
| शुक्लपक्षमा | अशुभ | मध्यम | शुभ | चन्द्र पहिला निर्बल पछि बलियो | |
| कृष्णपक्षमा | शुभ | मध्यम | अशुभ | चन्द्र पहिला सबल पछि दुर्बल | |

**परेवा तिथिमा गर्ने काम**

**चित्रलेख्यासवक्षेत्र तैलशय्यासनादि यत् ।**
**वृक्षाच्छेदो गृहाश्माथ कर्म प्रतिपदीरितम् ॥५॥**



अन्वयः - अथ चित्रलेख्य-आसव-क्षेत्र-तैल-शय्या-आस-वृक्षाच्छेदो-गृह-अश्म आदि यत् कर्म (तत्) प्रतिपदि इरितम् ।

भावार्थः- चित्रकारिता, मदिरा निर्माण, कृषि, तेल-शैया-आसनका कार्य, रुख काट्ने, गृहकर्म र पत्थरसम्बन्धि काम परेवा तिथिमा गर्नु उत्तम हुन्छ ।

द्रष्टव्य : परेवा तिथिका पर्यायवाची शब्दहरु :- (१) शुक्ल प्रतिपदा :- अग्नितिथि, अजातचन्द्रा, आग्नेयी, आदिमा, आद्य, आद्या, एकपक्षतिः, पक्षतिः, प्रतिपत्, प्रतिपद्, प्रतिपदा, प्रथमा, सितास्या, भू र चन्द्रमाका सबै पर्यायवाची शब्दहरु । (२) कृष्ण प्रतिपदा :- कलोनचन्द्रा, कृष्णास्या, बहुलमुखा, शुक्ल प्रतिपदाका सबै पर्यायवाची शब्दहरु ।

**द्वितीया तिथिमा गर्ने काम**

**विवाह मौञ्जी यात्रा च सुरस्थापनभूषणम् ।**
**गृहं पुष्ट्यखिलं कर्म द्वितीयायां विधीयते ॥६॥**

अन्वयः - विवाह-मौञ्जी-यात्रा-सुरस्थापनं-भूषणं-गृहं, पुष्टि अखिलं च कर्म द्वितीयायां विधीयते ।

भावार्थः- विवाह, व्रतबन्ध, यात्रा, देवप्रतिष्ठा, आभूषण-कार्य, गृहारम्भ र सबैखाले पौष्टिक कार्य द्वितीयामा गर्नु पर्दछ ।

द्रष्टव्यः द्वितीया तिथिका पर्यायवाची शब्दहरु :- दुतिया, द्वि, द्वितीया, धातृ, निक्षपतिः, युग्म, युग्म र नेत्रका सबै पर्यायवाची शब्दहरु ।

### तृतीया तिथिमा गर्ने काम

**मौञ्जी प्रतिष्ठाश्च शिल्पविद्या निखिलमङ्गलम् ।**
**पश्विभोष्ट्राम्बुयानोक्तं तृतीयायां विभूषणम् ॥७॥**

अन्वयः - मौञ्जी, प्रतिष्ठा, शिल्पविद्या, मङ्गलं, पशु, इभ, उष्ट्र, अम्बु, यान उक्तं निखिलं विभूषणं च (कर्म) तृतीयायां (विधीयते) ।

भावार्थः- उपनयन, देवप्रतिष्ठा, शिल्पविद्या, माङ्गलिक कार्य, पशुमध्ये हाथी र ऊँट सम्बन्धी काम, जलपूजा, वाहन र भूषण कर्म तृतीयामा शुभ हुन्छ । (तृतीया तिथिका पर्यायवाची शब्दहरु :- अग्नि, अनल, गिरिजा, गौरी, तृतीया, वह्नि, शिवस्वेद र हुताशन ।)

### चतुर्थी तिथिमा गर्ने काम

**अथर्वविद्याशस्त्राग्निबन्धनोच्चाटनादिकम् ।**
**मारणाद्यखिलं कर्म रिक्तास्वेव विधीयते ॥८॥**

अन्वयः - अधर्वविद्या, शस्त्र-अग्नि बन्धन, उच्चाटन, मारणदि अखिलं कर्म रिक्तासु एव विधीयते ।

भावार्थः- अथर्वविद्या, शस्त्रबन्धन, अग्निबन्धन, उच्चाटन, मारण आदि जस्ता सबै काम रिक्ता तिथिमा नै गर्नु पर्दछ ।

द्रष्टव्यः चतुर्थी तिथिका पर्यायवाची शब्दहरु :- अब्धि, उदधि, गणेश, चतुर्थी, चौथी, युग, लम्बोदर र वेद । रिक्ता तिथि : चतुर्थी, नवमी र चतुर्दशी ।

### पञ्चमी तिथिमा गर्ने काम

**यानोपनयनोद्वाह ग्रहशान्तिक पौष्टिकम् ।**
**चरस्थिराखिलं कर्म पञ्चम्यां मङ्गलोत्सवम् ॥९॥**

अन्वयः - यान, उपनयन, उद्वाह, ग्रहशान्तिक, पौष्टिकम्, चर, स्थिर, मङ्गलोत्सवादि अखिलं कर्म पञ्चम्यां (विधीयते) ।

भावार्थः- सवारीमा यात्रा गर्ने, उपनयन, विवाह, ग्रहशान्ति, पौष्टिक-कर्म, सबै स्थिर कर्म तथा माङ्गलिक कर्म पञ्चमीमा गर्नु उत्तम हुन्छ ।

द्रष्टव्यः पञ्चमी तिथिका पर्यायवाची शब्दहरु :- अहितिथिः, इषु, नाग, बाण, शर र सर्प ।

### षष्ठी तिथिमा गर्ने काम

**पशुवास्तु महीसेवा पण्याम्बु क्रय विक्रये ।**
**भूषणं व्यवहारादिकर्म षष्ठ्यां विधीयते ॥१०॥**



अन्वयः - पशु-वास्तु-महीसेवा-पण्य-अम्बु-क्रय-विक्रय-भूषणं- व्यवहार आदि कर्म षष्ठ्यां विधीयते ।

भावार्थः- पशु-दमन, वास्तुकर्म, भूमिकर्म, सेवा, बजारको काम, जलकर्म, भूषण (गहना) को किनबेच र व्यवहारिक काम षष्ठीमा गर्नू ।

द्रष्टव्यः षष्ठी तिथिका पर्यायवाची शब्दहरु :- अङ्ग, कार्तिकेय, खस्टी (बोलीचालीको भाषामा), स्कन्द र रस) ।

### सप्तमीमा गर्ने काम

**यानस्थापनवाहादि राजसेवादिकर्मयत् ।**
**विवाहवास्तुभूषाद्यं सप्तम्यां चोपनायनम् ॥११॥**

अन्वयः - यान-स्थापन-वाहादि, राजसेवादि, विवाह-वास्तु-भूषादि, उपनायनञ्च यत् कर्म (तत्) सप्तम्यां (विधीयते) ।

भावार्थः- सवारी, स्थापना, बोक्ने काम, राजसेवा, विवाह, वास्तुकर्म, अलङ्कार तथा उपनयन सप्तमीमा गर्नु पर्दछ ।

द्रष्टव्यः सप्तमी तिथिका पर्यायवाची शब्दहरुः- अद्रि, अर्क, अश्व, दिनकृत्, रवि, वायु, शैल, र हय ।

### अष्टमीमा गर्ने काम

**कृषिवाणिज्यधान्याश्मलोहसङ्ग्रामभूषणम् ।**
**शिवस्थापन खाताम्वु कर्माष्टम्यां विधीयते ॥१२॥**

अन्वयः - कृषि-वाणिज्य-धान्य-अश्म-लोह-सङ्ग्राम-भूषण-शिवस्थापन-खात-अम्बु कर्म अष्टम्यां विधीयते ।

भावार्थः- कृषि, वाणिज्य, धान्य, पत्थर, फलाम, सङ्ग्राम, भूषण, शिवस्थापना, खन्ने काम र जलकर्म जस्ता सबै काम अष्टमीमा गर्नू ।

द्रष्टव्यः अष्टमी तिथिका पर्यायवाची शब्दहरु :- उरग, गज, नाग, महेश र वसु ।



### नवमीमा गर्ने काम

यस सम्बन्धी कुरा श्लोक आठमा बताइ सकिएको ।

द्रष्टव्यः नवमी तिथिका पर्यायवाची शब्दहरु :- अङ्क, गो, ग्रह, दुर्गा र नन्द ।

### दशमीमा गर्ने काम

**प्रासादस्थापनं यानमुद्वाहं व्रतबन्धनं ।**
**शान्तिपुष्ट्यादिकं कर्मदशम्यांतु प्रशस्यते ॥१३॥**

अन्वयः - प्रासादस्थापनं, यानम्, उद्वाहं, व्रतबन्धनं, शान्ति, पुष्टि आदि कर्म तु दशम्यां प्रशस्यते ।

भावार्थः- दरवार बनाउनु, यान चढ्नु, विवाह, उपनयन र शान्ति एवं पौष्टिककर्म दशमीमा गर्दा राम्रो हुन्छ ।

द्रष्टव्यः दशमी तिथिका पर्यायवाची शब्दहरु :- अन्तक, आशा, काष्ठा, दिक् र यम ।

### एकादशीमा गर्ने काम

**व्रतोपवास वैवाह कृषिवाणिज्य भूषणम् ।**
**शिल्पनृत्यं गृहकर्म एकादश्यां विचित्रकम् ॥१४॥**

अन्वयः - व्रत, उपवास, वैवाह, कृषि, वाणिज्य, भूषणं, शिल्प, नृत्य, गृह, विचित्रकम् कर्म एकादश्यां (विधीयते) ।

भावार्थः- व्रत, उपवास, कृषि, व्यापार, भूषण, शिल्पविद्या, नाच, गृहकर्म तथा चित्रकार्य एकादशी तिथिमा गर्नु पर्दछ ।

द्रष्टव्यः एकादशी तिथिका पर्यायवाची शब्दहरु :- ईश, एकादशी, रुद्र, विश्वेदेवा र शिव ।

### द्वादशीमा गर्ने काम



**चरस्थिराखिलं कर्मदानशान्तिकपौष्टिकम् ।**
**यात्रान्नग्रहणंत्यक्त्वाद्वादश्यां निखिलं हितम् ॥१५॥**

अन्वयः - चर-स्थिर, दान, शान्तिक, पौष्टिक, यात्रा, अन्नग्रहणं अखिलं कर्म त्यक्ता (अन्य) निखिलं (कर्म) द्वादश्यां हितम् ।

भावार्थः- चर-स्थिर कर्म, दान, शान्तिपौष्टिक कर्म, यात्रा, नयाँ अन्न ग्रहण आदि बाहेकका काम द्वादशीमा गर्नु पर्दछ ।

द्रष्टव्यः द्वादशी तिथिका पर्यायवाची शब्दहरु :- अर्क, रवि, विष्णु, सूर्य र हरि ।

### त्रयोदशीमा गर्ने काम

**अग्न्याधानं प्रतिष्ठा च विवाहव्रतबन्धनम् ।**
**निखिलं मङ्गलं यानं त्रयोदश्यां प्रशस्यत् ॥१६॥**

अन्वयः - अग्न्याधानं, प्रतिष्ठा, विवाह, व्रतबन्धनम्, निखिलं मङ्गलं, यानं त्रयोदश्यां प्रशस्यत् ।

भावार्थः- अग्न्याधान, प्रतिष्ठा, विवाह, उपनयन, यान तथा सबै माङ्गलिक काम त्रयोदशीमा गर्नु शुभ हुन्छ ।

द्रष्टव्यः त्रयोदशी तिथिका पर्यायवाची शब्दहरु :- काम, मदन र विश्वे ।

### चतुर्दशीमा गर्ने काम

**बन्धनाग्निप्रदानोग्रघातव्रण रणक्रिया ।**
**शस्त्रास्त्रलोहकर्माणि चतुर्दश्यां विधीयते ॥१७॥**

अन्वयः - बन्धन, अग्निप्रदान, उग्र घात, व्रण, रणक्रिया, शस्त्र, अस्त्र, लोहकर्माणि चतुर्दश्या) विधीयते ।

भावार्थः- बन्धन, अग्निदाह, उग्रकर्म, घात, घाउको औषधी (?), युद्ध, शस्त्रअस्त्र निर्माण तथा फलामको काम चतुर्दशीमा शुभ हुन्छ ।



द्रष्टव्यः चतुर्दशी तिथिका पर्यायवाची शब्दहरु :-इन्द्र, कलिः, चतुर्दशी, पादूरः, मनु, यम, शक्र, शिव ( शुक्ल चतुर्दशीका) । भूतः, भूता, भूतेष्टा र शुक्ल चतुर्दशीका सबै ( कृष्ण चतुर्दशीका) ।

### पुर्नेमा गर्ने काम

**तैल स्त्रीसङ्गमं चैव दन्तकाष्ठोपनायनम् ।**
**सक्षौरं पौर्णमास्यां च विनान्यदखिलं हितम् ॥१८॥**

अन्वयः - तैल, स्त्रीसङ्गगम, दन्तकाष्ठ-उपनायनम्-क्षारं विना अन्यद् अखिलं पौर्णमास्यां हितम् ।

भावार्थः- तैलकर्म, स्त्रीसङ्गम, दन्तधावन, उपनयन र क्षौरकर्मलाई छोडी अरु सबै काम पूर्णिमामा गर्नु शुभ हुन्छ ।

द्रष्टव्यः पूर्णिमा तिथिका पर्यायवाची शब्दहरु :- चन्द्रमाता, चन्द्रमातृ, चान्द्री, तिथि, धमर्मवासरः, निरञ्जना, पञ्चदशी, पित्र्या, पुर्ने, पूर्णमा, पूर्णमासी, पूर्णा, पूर्णिका, पूर्णिमा, पौर्णमासी र पौर्णभी ।

### औंसीमा गर्ने काम

**पितृकर्मत्वमावास्यामेकं मुक्त्वा कदाचन ।**
**न विदध्यात् प्रयत्नेन यत्किञ्चिन्मङ्गलादिकम् ॥१९॥**

अन्वयः - अमावस्यायां एकं पितृकर्मत्वम् मुक्त्वा यत् किञ्चितद् मङ्गलादिकम् प्रयत्नेन कदाचन न विदध्यात् ।

भावार्थः- पितृकर्म बाहेकका अरु कुनै पनि शुभकर्म कहिल्यै औंसीमा नगर्नू ।

द्रष्टव्यः (१) औंसी तिथिका पर्यायवाची शब्दहरु :- अमा, अमामसी, अमामंस्या, अमावसी, अमावस्या, अमावासी, अमावास्या, तिथिक्षयः, दर्शः, पतृतिथि, विगतचन्द्रतिथिः, विधुक्षयः, सूर्येन्दुसङ्गमः । (२) औंसी र पूर्णिमा दुवैलाई बुझाउने पर्यायवाची शब्द : नन्दिवर्द्धनौ, पक्षान्तौ, पञ्चदश्यौ (स्त्री.द्वि.), पर्वणी (अन्) (न.द्वि.), यज्ञकालौ ।

### पक्षरन्ध्र र नाडिका तिथि

**अष्टमीद्वादशीषष्ठी चतुर्थी च चतुर्दशी ।**

**तिथयःपक्षरन्ध्राख्या दृष्टास्ता अतिनिन्दिताः ॥२०॥**

अन्वयः - अष्टमी, द्वादशी, षष्ठी, चतुर्थी, चतुर्दशी च पक्षरन्ध्राख्या तिथयः, ता अतिनिन्दिताः दृष्टाः ।

भावार्थः- अष्टमी, द्वादशी, षष्ठी, चतुर्थी, र चतुर्दशी-यि पक्षरन्ध्र तिथि हुन् । यिनलाई दुष्ट र अति निन्दित मानिन्छन् । यिनको शुरुको चौथो, चौधौं, सातौं, नवौं र पाँचौं घडी क्रमैले छाड्नुपर्ने हुन्छ, बाँकी घडी (नाडी) उत्तम हुन्छ ।

**चतुर्थमनुरन्ध्राङ्कतत्व संज्ञास्तु नाडिकाः ।**
**त्याज्या दुष्टासु तिथिषु चतसृष्वपि (पञ्चस्वेतासु) सर्वदा ॥२१॥**

अन्वयः - दुष्टासु तिथिषु चतुर्थ मनु रन्ध्र अङ्क तत्व पञ्चसु एतासु संज्ञास्तु नाडिका सर्वदा त्याज्या ।

भावार्थः- यिनको शुरुको चौथो, चौधौं, सातौं, नवौं र पाँचौं घडी क्रमैले छाड्नुपर्ने हुन्छ, बाँकी घडी (नाडी) उत्तम हुन्छ ।

### शुभ र अशुभ तिथि

**अमावास्या च नवमी त्यक्त्ता विषम संज्ञिकाः ।**
**तिथयस्ताः प्रशस्ताः स्युर्मध्यमा प्रतिपत्तथा ॥२२॥**

अन्वयः - अमावास्या नवमी च त्यक्त्ता विषम संज्ञिकाः तिथयः, ताः प्रशस्ताः, तथा प्रतिपद् मध्यमा स्युः ।

भावार्थः- औंसी र नवमी बाहेकका बिजोर तिथि (तृतीया, पञ्चमी, सप्तमी, एकादशी र त्रयादशी) राम्रो मानिएका छन् । परेवा मध्यम तिथि हो ।

### दाँत माझ्न नहुने तिथि

**दर्शषष्ठ्यां प्रतिपदि द्वादश्यां प्रतिपर्वसु ।**
**नवम्यां च न कुर्वीत कदाचिदन्तधावनम् ॥२३॥**



अन्वयः - दर्श, षष्ठ्यां, प्रतिपदि, द्वादश्यां प्रतिपर्वसु नवम्यां च कदाचिद् दन्तधावनम् न कुर्वीत ।

भावार्थः- औंसी, षष्ठी, परेवा, द्वादशी र नवमी तथा प्रत्येक पर्व (सङ्क्रान्ति -ग्रहण) मा दन्तधावन नगर्नू ।

### तिथि अनुसार बार्नुपर्ने कुरा

**षष्ठ्यां तैलं तथाष्टम्यां मांसं क्षौरं तथा कले ।**
**पूर्णिमादर्शयोर्नारीसेवनं परिवर्जयेत् ॥२४॥**
**व्यतीपाते च सङ्क्रान्तौ एकादश्याञ्च पर्वसु ।**
**अर्कभौमदिने षष्ठ्यां नाभ्यङ्गञ्च न वैधृतौ ॥२५॥**

अन्वयः - षष्ठ्यां तैलं तथा अष्टम्यां मांसं, कले क्षौरं तथा पूर्णिमादर्शयोः नारीसेवनं परिवर्जयेत् । व्यतीपाते, सङ्क्रान्तौ च, एकादश्यां च, पर्वसु, अर्क-भौमदिने, षष्ठ्यां वैधृतौ च न अभ्यङ्ग ।

भावार्थः- षष्ठीमा तेल दल्न, अष्टमीमा मासु खान र चतुर्दशीमा क्षौरकर्म नगर्नु । पूर्णिमा र औंसीमा मैथुन गर्नु हुँदैन । व्यतिपात, सङ्क्रान्ति, एकादशी, पर्व, आईतबार, मङ्गलबार र षष्ठीमा बुकुवा आदि लगाउनु हुँदैन ।

**यः करोति दशम्यां च स्नानमामलकैः सह ।**
**पुत्रहानिर्भवेत्तस्य त्रयोदश्यां धनक्षयः ॥२६॥**
**अर्थपुत्रक्षयं तस्य द्वितीयायां न संशयः ।**
**अमायाञ्च नवम्याञ्च सप्तम्याञ्च कुलक्षयः ॥२७॥**

अन्वयः - यः दशम्यां आमलकैः सह स्नानं करोति तस्य पुत्रहानिः भवेत्, त्रयोदश्यां धनक्षयः, द्वितीयायां तस्य अर्थपुत्रक्षयं (भवेत्) न संशयः, अमायां नवम्यां सप्तम्याञ्च कुलक्षयः (भवेत्) ।

भावार्थः- जसले दशमीका दिन अमलाले नुहाउँदछ उसलाई पुत्रहानि हुन्छ । त्रयोदशीमा नुहाए धन नाश हुन्छ । द्वितीयामा नुहाए धन र पुत्र नाश हुन्छ । औंसी, नवमी र सप्तमीका दिन अमलाले नुहाए कुलको नाश हुन्छ ।



**पूर्णिमा तिथिका प्रकारहरु**

**सा पूर्णमास्यनुमतिर्निशि चन्द्रवती तु या ।**
**दिवा चन्द्रवती राका अमावास्या तथा द्विधा ॥२८॥**

अन्वयः - या पूर्णिमा निशि चन्द्रवती सा अनुमतिः (या च) दिवाचन्द्रवती (सा) राका (पूर्णिमा) तथा अमावस्या अपि द्विधा ।

भावार्थः- रातमा चन्द्रमा उदाउने पूर्णिमा भए त्यसलाई अनुमति तथा दिनमा नै चन्द्रमा उदाएको देखिए त्यसलाई राका पूर्णिमा भनिन्छ । यसरी पूर्णिमा दुई थरी बताइएको छ । (पूर्णचन्द्र भए राका र एक कला कम भए अनुमति हुन्छ पनि भनिएको छ ।)

**औंसीका प्रकारहरु**

**सिनीवाली सेन्दुमती कुहुर्नेन्दुमती मता ।**

अन्वयः - सेन्दुमती सिनीवाली न इन्दुमती कुहुः मता (कथिता) ।

भावार्थः- जुन औंसीमा चन्द्रमा देखिन्छ त्यसलाई सिनीवाली तथा जुन औंसीमा चन्द्रमा देखिँदैन त्यसलाई कुहू भनिन्छ ।

सत्य आदि युग शुरु हुँदाका तिथी

**कार्तिके शुक्ल नवमीत्वादिः कृतयुगस्य सा ॥२९॥**
**त्रेतादिर्माधवेशुक्ला तृतीया पुण्यसंज्ञिता ।**
**कृष्णा पञ्चदशी माघे द्वापरादिरुदीरिता ॥३०॥**
**कल्पादिः स्यात्कृष्णपक्षे नभस्ये च त्रयोदशी ।**

अन्वयः - कार्तिके शुक्ल नवमी सा कृतयुगस्य तु आदिः । माधवे शुक्ला तृतीया पुण्य संज्ञिता त्रेदादिः । माघे कृष्णा पञ्चदशी द्वापरादिः उदिरिता । नभस्ये कृष्णपक्षे त्रयादेशी कल्पादिः स्यात् ।

भावार्थः- कार्तिक शुक्ल नवमी सत्ययुगको पहिलो तिथि हो । बैशाख शुक्लतृतीया त्रेताको पहिलो तिथि हो र यो पवित्र हुन्छ । माघेऔंसी द्वापरको पहिलो तिथि बताइएको छ । भाद्रकृष्ण त्रयोदशीलाई कलियुगको शुरुको तिथि भनिएको छ ।



मन्वन्तरका शुरुका तिथिहरु

**द्वादश्यूर्जे शुक्लपक्षे नवम्याश्वयुजे सिते ।३१।**
**चैत्रे भाद्रपदे चैव तृतीया शुक्ल संज्ञिता ।**
**एकादशी सिता पौषेऽप्याषाढे दशमी सिता ॥३२॥**
**माघे च सप्तमी शुक्ला नभस्येप्यसिताष्टमी ।**
**श्रावणे मास्यमावास्या फाल्गुने मासिपूर्णिमा ॥३३॥**
**आषाढे कार्तिकेमासि चैत्रेज्येष्ठे च पूर्णिमा ।**
**मन्वादयः स्नानदान श्राद्धेस्वानन्त पुण्यदाः ॥३४॥**

अन्वयः - ऊर्जे शुक्लपक्षे द्वादशी, आश्वयुजे सिते नवमी, चैत्रे शुक्ल तृतीया, भाद्रपदे चैव, पौषे सिता एकादशी, आषाढे सिता दशमी, श्रावणे मास्यं अमावास्या, फाल्गुने मासि पूर्णिमा, आषाढे-कार्तिकेमासि-त्रैचे-ज्येष्ठे च पूर्णिमा : (एते) मन्वादयः (तिथयः) । (एतेषु) स्नान-दान-श्राद्धेषु अनन्त पुण्यदाः (भवन्ति) ।

भावार्थः- कार्तिकशुक्ल द्वादशी, आश्विनशुक्ल नवमी, चैत्रशुक्ल तृतीया, भाद्रशुक्ल तृतीया, पौषशुक्ल एकादशी, आषाढशुक्ल दशमी, माघशुक्ल सप्तमी, भाद्रकृष्ण अष्टमी, श्रावण औंसी तथा फागुन-असार-कार्तिक-चैत्र-जेठको पूर्णिमालाई मन्वन्तरका शुरुका तिथि भनिन्छ । यी तिथिहरु स्नान, दान, श्राद्ध आदि काममा अनन्त पुण्यदायक हुन्छन् ।

गजछाया योग

**भाद्रकृष्णे त्रयोदश्यां मघास्विन्दुः करे रविः ।**
**गजच्छाया तदा ज्ञेया श्राद्धेत्यन्तफलप्रदा ॥३५॥**

अन्वयः - भद्रकृष्णे त्रयोदश्यां मघासु इन्दुः करे रविः तदा गजच्छाया ज्ञेया (सा) श्राद्धेत्यन्त फलप्रदा ।

भावार्थः- भाद्रकृष्ण त्रयोदशीका दिन चन्द्रमा मघामा र हस्तामा सूर्य भए गजछाया योग हुन्छ । यो योग श्राद्धकर्ममा अत्यन्त फलदायक हुन्छ ।

तिथि वृद्धि र क्षय

**एकस्मिन्वासरे तिस्रस्तिथयः स्युः क्षयातिथिः ।**
**तिथिर्वारत्रयेष्वेका त्वधिकात्यन्त निन्दिता ॥३६॥**

अन्वयः - तिस्रः तिथयः एकस्मिन्वासरे स्युः (तदा सा) क्षयातिथिः । वारत्रयेषु एकातिथिः (तदा सा) तु अधिका अत्यन्त निन्दिता ।

भावार्थः- एकै दिनमा तीन तिथिको भोग भए क्षयतिथि तथा तीन दिनसम्म एउटै तिथिको भोग भए तिथिवृद्धि हुन्छ । यो योग अती निन्दनीय हुन्छ ।

अखण्ड र खण्ड तिथि

**सूर्यास्तमन पर्यन्तं यस्मिन्वारेऽपि या तिथिः ।**
**विद्यते सात्वखण्डा स्याद्दूना चेत्खण्डसंज्ञिता ॥३७॥**

अन्वयःयस्मिन् वारे अपि या तिथिः सूर्यास्तमन पर्यन्तं विद्यते सा तु अखण्डा स्याद् ऊना चेते खण्ड संज्ञिता ।

भावार्थः- जुनदिन सूर्यास्त नभएसम्म जुन तिथि हुन्छ त्यसलाई अखण्डा र त्यसभन्दा कम समय भए खण्डा तिथि भनिन्छ ।

तिथि एवं मुहूर्तको परिचय

**तिथेः पञ्चदशो भागः क्रमात्प्रतिपदादयः ।**
**द्विघटी प्रमितं तत्र मुहूर्तं कथितं बुधैः ॥३८॥**

अन्वयः - तिथेः पञ्चदशो भागः क्रमात् प्रतिपदादयः । तत्र द्विघटी प्रमितं बुधैः मुहूर्तं कथितम् ।

भावार्थः- तिथिको अर्थात चन्द्रमण्डलको पन्ध्रौं भाग क्रमशः परेवा आदि तिथि हुन्छन् । दुई घडी बराबरको एक मुहूर्त हुन्छ भनी विद्वानहरूले भनेका छन् ।

इति श्रीनारदीयसंहितायां तिथिलक्षणाध्यायः चतुर्थः

✷

नारदीय संहिता अन्तर्गत तिथिका बारेमा बताइएको चौथो अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चमोऽध्यायः
## वारलक्षणाध्यायः

आइतबार गर्ने कार्यहरु

**नृपाभिषेकमाङ्गल्य सेवायानास्त्रकर्म यत् ।**
**औषधाहवधान्यादि विधेयं रविवासरे ॥१॥**

अन्वयः - रविवासरे नृपाभिषेक माङ्गल्य सेवा यान अस्त्रकर्म औषध आहव धान्यादि यत् कर्म (तत्) विधेयम् ।

भावार्थः- राज्याभिषेक, मङ्गल कार्य, सेवा, यान, अस्त्रकर्म, औषधकर्म, युद्ध र धान्यकर्म आइतबार गर्नु पर्दछ ।

सोमबार गर्ने कार्यहरु

**शङ्खमुक्ताम्बुरजत वृक्षेक्षुस्त्रीविभूषणम् ।**
**पुष्पगीत क्रतुक्षीर कृषि कर्मेन्दुवासरे ॥२॥**



अन्वयः - शङ्ख मुक्ता अम्बु रजत वृक्ष इक्षु स्त्रीविभूषणम् पुष्प गीत क्रतु क्षीर कृषि कर्म इन्दुवासरे (विधेयम्) ।

भावार्थः- शङ्ख, मुक्ता, चाँदी, वृक्ष, ऊखु, स्त्री आभूषण, फूल, गीत, यज्ञ, क्षीर तथा कृषि कर्महरु सोमबार गर्नु उत्तम हुन्छ ।

मङ्गलबार गर्ने कार्यहरु

**विषाग्नि वन्धनस्तेयं सन्धि विग्रहमाहवे ।**
**धात्वाकर प्रवालास्त्रीकर्म भूमिज वासरे ॥३॥**

अन्वयः - विष अग्नि वन्धन स्तेयं सन्धि विग्रहम् आहव धात्वाकार प्रवाल स्त्रीकर्म भूमिज वासरे (विधेयम्) ।

भावार्थः- विष, अग्नि, बन्धन, चोरी, सन्धि, विग्रह, धातुको खानी, मुगा, हतियार आदिको काम मङ्गलबार गर्नु पर्दछ ।

बुधबार गर्ने कार्यहरु

नृत्यशिल्पकलागीत लिपिभूरससङ्ग्रहम् ।
विवाहधातु सङ्ग्रामकर्म सौमस्यवासरे ॥४॥

अन्वयः - नृत्य शिल्प कला गीत लिपि भूरससङ्ग्रहम् विवाध धातु सङ्ग्रामकर्म सौमस्यवासरे (विधेयम्) ।

भावार्थः- नृत्य, शिल्पकला, गीत, लेखनकार्य, पृथ्वीको रस सङ्ग्रह, विवाह, धातु र लडाईँको काम बुधबार गर्नुपर्दछ ।

बिहीबार गर्ने कार्यहरु

यज्ञ पौष्टिक माङ्गल्य स्वर्णवस्त्रादि भूषणम् ।
वृक्षगुल्मलता यानकर्म देवेज्य वासरे ॥५॥

अन्वयः - यज्ञ पौष्टिक माङ्गल्य स्वर्ण-वस्त्रादि भूषणं वृक्ष-गुल्म-लता यानकर्म देवेज्य वासरे (विधेयम्) ।



भावार्थः- यज्ञ, पौष्टिककर्म, मङ्गलकार्य, स्वर्ण, वस्त्र, आभूषण, वृक्ष र वाहन सम्बन्धी कर्म बिहीबार गर्नु पर्दछ ।

शुक्रबार गर्ने कार्यहरु

नृत्यगीतादिवादित्र स्वर्णस्त्री रत्नभूषणम् ।
भूपण्योत्सवगोधान्यकर्म भार्गव वासरे ॥६॥

अन्वयः - विष अग्नि वन्धन स्तेयं सन्धि विग्रहम् आहव धात्वाकार प्रवाल स्त्रीकर्म भूमिज वासरे (विधेयम्) ।

भावार्थः- नृत्य, गीत, वाद्य, स्वर्ण, स्त्री, रत्न, आभूषण, भूमि, पुण्य, उत्सव, गौ तथा धान्य कर्महरु शुक्रबार गर्नु पर्दछ ।

शनिबार गर्ने कार्यहरु

त्रपुसीसायसोश्मास्त्र विषपापासवानृतम् ।
स्थिरकर्माखिलम्वास्तु सङ्ग्रहं सौरिवासरे ॥७॥

अन्वयः - त्रपु-सीसा-आयस-अश्म-अस्त्र विष पाप आसव अनृतम् स्थिरकर्म अखिल वास्तु सङ्ग्रहं सौरिवासरे (विधेयम्) ।

भावार्थः- राँग, सीसा, फलाम, पत्थर, अस्त्र, विषय, जल (या पाप), आसव, भूट बोल्ने तथा वास्तु सङ्ग्रह जस्ता अरु सबै स्थिरकर्म शनिबार गर्नु उत्तम हुन्छ ।

### बारस्वामीको स्वभाव

**रविः स्थिरश्चरश्चन्द्रः कुजः क्रूरो वुधोखिलः ।**
**लघुरीज्यो मृदुः शुक्रस्तीक्ष्णो दिकरात्मजः ॥८॥**

अन्वयः - रविः स्थिरः, चन्द्रः चरः, कुजः क्रूरः, वुधः अखिलः, ईज्यः लघु, शुक्रः मृदुः, दिकरात्मजः तीक्ष्णः ( भवति) ।

भावार्थः- सूर्य स्थिर, चन्द्रमा चर, मङ्गल क्रूर, बुध मिश्र, बृहस्पति लघु, शुक्र मृदु र शनि तीक्ष्ण स्वभावका हुन्छन् ।



### बार अनुसारका थप कार्य

**अभ्यक्तो भानुवारे यः स नरः क्लेशवान् भवेत् ।**
**ऋक्षेशे कान्तिभाग् भौमे व्याधिःसौभाग्यमिन्दुजे ॥९॥**
**जीवनैस्वं सितेहानिर्मन्दे सर्वसमृद्धयः ।**
**उदयादुदयम्वार इतिपूर्वविनिश्चितम् ॥१०॥**

अन्वयः - यः नरः भानुवारे अभ्यक्तः स क्लेशवान् भवेत् । (एवं) ऋक्षेसे कान्तिभाग् । भौमे व्याधिः । इन्दुजे सौभाग्यम् । जीवेनैस्वं । सिते हानिः । मन्दे सर्वसमृद्धयः । उदयाद् उदयं वार इति पूर्व विनिश्चि

भावार्थः- आइतबार तेल वा बुकुवा लगाउने रोगी हुन्छ । सोमबार लगाउने कान्तिमान्, मङ्गलबार लगाउने व्याधियुक्त, बुधबार लगाउने सौभाग्यशाली, बिहीबार लगाउने निर्धन, शुक्रवार लाउने लाई हानी तथा शनिबार लगाउनेले सर्वसमृद्धि पाउँछ । सूर्योदयदेखि सूर्योदयसम्मको समयलाई एक बार मानिको छ ।

**बार निर्धारण**

**लङ्कोदयात् स्याद्वारादिस्तस्माद्ध्र्वमधोऽपि वा ।**
**देशान्तरचरार्द्धाभिर्नाडीभिरपरो भवेत् ॥११॥**

अन्वयः - वारादिः लङ्कोदयात् स्यात् तस्मात् ऊर्ध्वं अधः अपि वा देशान्तर चरार्द्धाभिः नाडीभिः (अन्तरितः) अपरो भवेत् ।

भावार्थः- बार आदि लङ्काको सूर्योदय मानबाट शुरु हुन्छ । त्यसभन्दा तलमाथिका देशमा देशान्तर चरखण्डमा निकालिएको नाडीबाट जोडघटाउ गरेपछि सूर्योदयको समय आउँदछ । अर्थात् बारप्रवेश सबैतिर एकै समयमा हुँदैन ।

**ग्रह र सफलता**

**वलप्रदस्य खेटस्य वारेसिध्यति यत्कृतम् ।**
**तत्कर्मवलहीनस्य दुःखेनाऽपि न सिध्यति ॥१२॥**



अन्वयः - यत् कृतम् वलप्रदस्य खेटस्य वारे सिध्यति, तत् कर्म वलहीनस्य (खेटस्य वारे) दुःखेना अपि न सिध्यति ।

भावार्थः- बलिया ग्रह भएका बेलामा जुन काम सजिलैसँग सफल हुन्छ त्यही काम कमजोर ग्रह भएका दिन धेरै प्रयाश र कष्ट गर्दा पनि सफल हुँदैन ।

**शुभ र अशुभ बार**

**वुधेन्दुजीवशुक्राणां वासराः सर्वकर्मसु ।**
**सिद्धिदाः क्रूरवारेषु यदुक्तं कर्मसिध्यति ॥१३॥**

अन्वय :- सर्वकर्मसु वुध-इन्दु-जीव-शुक्राणां वासराः सिद्धिदाः, क्रूरवारेषु यद् उक्तं (तत्) कर्म सिध्यति ।

भावार्थः- सोम, बुध, बिही र शुक्रबार सबै कामका लागि शुभ मानिएको छ । क्रूर दिन (आइत, मङ्गल, शनि)मा त्यो बार गर्न बताइएका कर्ममात्र सिद्ध हुन्छन् ।

**बारका स्वामीको मनपर्ने रङ**

**रक्तवर्णो रविश्चन्द्रो गौरो भौमस्तु लोहितः ।**
**दूर्वावर्णो बुधोजीवः पीतः श्वेतस्तु भार्गवः ॥१४॥**
**कृष्णःशौरि स्ववारेषु स्वस्ववर्णाः क्रियाःशुभाः ।**

अन्वायः - रविः रक्तवर्णः, चन्द्रः गौरः, भौमः तु लोहित, बुधः दूर्वावर्णः, जीवः पीतः, भार्गवः तु श्वेतः, शौरि कृष्णः, स्ववारेषु स्व स्व वर्णाः क्रियाः शुभाः ।

भावार्थः- रातो वर्ण सूर्यको, गोरो चन्द्रमाको, लोहित मङ्गलको, दूर्वा बुधको, पीत बृहस्पतिको, श्वेत शुक्रको र कृष्ण वर्ण शनिको हुन्छ । आआफ्ना दिनमा गरिएका आआफ्ना वर्णका कार्य शुभ हुन्छन् ।

**कुलिक, यमघण्ट र अर्द्ध प्रहर योग**

**अद्रिवाणाव्धयस्तर्कतोयाकर धराधराः ॥१५॥**

**वाणाग्नि लोचनानि स्युः वेद वाहु शिलीमुखाः ।**
**लोकेन्दु वसवो नेत्र शैलाग्नीन्दु रसो रसः ॥१६॥**
**कुलिका यमघण्टाख्या अर्धप्रहर संज्ञकाः ।**
**प्रहरार्ध प्रमाणास्ते विज्ञेयाः सूर्यवासरात् ॥१७॥**

अन्वयः - अद्रि-वाण-अब्धयः तर्क तोयाकर धराधराः, वाणा अग्नि लोचनानि, वेद वाहु शिलीमुखाः, लोक-इन्दु वसवः, नेत्र शैल अग्नि, इन्दु रसो रसः, प्रहरार्ध प्रमाणा स्युः ते सूर्यवासरात् कुलिका, यमघण्टाख्या, अर्धप्रहर संज्ञकाः विज्ञेयाः ।

भावार्थः- कुलिक, यमघण्ट र अर्द्ध प्रहर नामक दुष्ट योगहरु प्रहरार्द्ध प्रमाणमा (आधा प्रहर) आइतबार आदि बारमा क्रमशः ७-५-४, ६-४-७, ५-३-२, ४-२-५, ३-१-८, २-७-३ र १-६-६ प्रहरमा हुन्छ ।

## बारका अधिपति र होरा

**यस्मिन्वारे क्षणो वार इष्टस्तद्वासराधिपः ।**
**आद्यः षष्ठो द्वितीयोस्मात्तस्मात् षष्ठस्तृतीयकः ॥१८॥**
**षष्ठषष्ठश्चेतरेषां कालहोराधिपाः स्मृताः ।**
**सार्धनाडीद्वयेनैवं दिवारात्रौ यथाक्रमात् ॥१९॥**
**यस्यखेटस्य यत्कर्मवारे प्रोक्तं विधीयते ।**
**ग्रहस्यकर्मवारेपि तस्य तत्क्षण सर्वदा ॥२०॥**

अन्वयः - यस्मिन् वारे क्षणः वार तद् वासराधिपः इष्टः । आद्यः षष्ठः, द्वितीयः तस्मात् षष्ठः, तृतीयः तस्मात् षष्ठः, एषां षष्ठषष्ठश्चेत् कालहोराधिपा स्मृताः । यथाक्रमात् सार्धनाडीद्वयेनैवं दिवारात्रौ यस्यखेटस्य वारे यत् कर्म प्रोक्तं तस्य ग्रहस्य कर्मवारेपि सर्वदा तत्क्षण विधीयते ।

भावार्थः- जुन दिन जुन क्षणको बार हुन्छ त्यसको अधिपति त्यही बारको अधिपति हुन्छ । छैटौं प्रथम, त्यसको छैटौं द्वितीय, त्यसको छैटौं तृतीयका क्रमले होराधिप हुन्छन् । २.५ नाडी दिनरातका क्रमले जुन ग्रहको जुन काम जुन दिन गर्ने भनिएको छ त्यो गर्नु अर्थात यदि सोमबारमा बुधको होरा भए बुधबार गर्ने भनी बताइएका काम नै गर्नु पर्दछ ।



इति श्रीनारदीयसंहितायां वारलक्षणाध्यायः पञ्चमः

✷

नारदीय संहिता अन्तर्गत बारका बारेमा बताइएको पाँचौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# षष्ठोऽध्यायः
# नक्षत्रफलाध्यायः

### नक्षत्रका स्वामी

नक्षत्रेशाः क्रमादस्रयमवह्निपितामहाः ।
चन्द्रेशादितिजीवाहि पितरो भगसंज्ञिताः ॥१॥
अर्यमार्कत्वष्ट्रमरुत् शक्राग्निमित्रवासवाः ।
नैऋत्युदग्विश्वऽजश्चगोविन्दो वसुतोयपाः ॥२॥
ततोजपादहिर्बुध्न्यः पूषा चेति प्रकीर्तिताः ।

अन्वयः - दस्र यम वह्नि पितामहः चन्द्र ईशः अदिति जीव अहि पितरः भग अर्यमा अर्क त्वष्ट्र मरुत् शक्र अग्नि मित्र वासव नैऋति उदक् विश्व अजः गोविन्द वसु तोयपः ततः अजपाद अहिर्बुध्न्यः, पूषा च इति क्रमात् नक्षत्रेशाः प्रकीर्तिताः ।

भावार्थः- अश्विनी आदि नक्षत्रका स्वामी क्रमशः अश्विनीकुमार, यम, अग्नि, ब्रह्मा, चन्द्रमा, शिव, अदिति, गुरु, सर्प, पितृ, भग, अर्यमा, सूर्य, विश्वकर्मा, पवन, इन्द्राग्नि, मित्र, वरुण, निऋति, जल, विश्वेदेव, ब्रह्मा, गोविन्द, वसु, वरुण अजचरण, अहिर्बुध्न्य र पूषा हुन्



### नक्षत्रका पर्यायवाची नामहरू

जुन नक्षत्रका जुन स्वामी देवता हुन् ती देवताका जेजति पर्यायवाची शब्दहरू हुन्छन् ती शब्दले पनि सोही नक्षत्रलाई बुझाउँदछ । जस्तै :

| क्र.सं. | नक्षत्र | पर्यायवाचक शब्द |
|---|---|---|
| १. | अश्विनी | दुवै अश्विनीकुमार, नासत्य, दस्र, अश्वियुक्, तुरग, वाजी, अश्व, हय आदि । |
| २. | भरणी | यम, अन्तक, कृतान्त आदि । |
| ३. | कृत्तिका | अग्नि, वह्नि, अनल, कृशानु, दहन, पावक, हुतभुक्, हुताश आदि । |
| ४. | रोहिणी | धाता, ब्रह्मा, कः, विधाता, द्रुहिण, विधि, विरञ्चि, प्रजापति, प्राजेश आदि । |
| ५. | मृगशिरा | शशभृत्, शशी, शशाङ्क, मृगाङ्क, विधु, हिमांशु, सुधांशु, इन्वका आदि । |
| ६. | आर्द्रा | रुद्र, शिव, ईश, त्रिनेत्र आदि । |
| ७. | पुनर्वसु | अदिति, आदित्य आदि । |
| ८. | पुष्य | ईज्य, गुरु, जीव, तिष्य, देवपुरोहित आदि । |
| ९. | अश्लेषा | सर्प, उरग, भुजग, भुजङ्ग, अहि, भोगी आदि । |
| १०. | मघा | पितृ, पितर आदि । |

| | | |
|---|---|---|
| ११. | पूर्वाफाल्गुनी | भग, योनी, भाग्य आदि । |
| १२. | उत्तराफाल्गुनी | अर्यमा |
| १३. | हस्ता | रवि, कर, सूर्य, व्रध्न, अर्क, तरणि, तपन आदि । |
| १४. | चित्रा | त्वष्ट्, त्वाष्ट्र, तक्ष आदि । |
| १५. | स्वाती | वायु, वात, अनिल, समीर, पवन, मारुत, निष्ठ्या आदि । |
| १६. | विशाखा | शक्राग्नी,वृषाग्नी, इन्द्राग्नी, द्वीश, राधा आदि । |
| १७. | अनुराधा | मित्र |
| १८. | ज्येष्ठा | इन्द्र, शक्र, वासव, आखण्डल, पुरन्दर आदि । |
| १९. | मूल | निर्ऋति, रक्षः, असृप आदि । |
| २०. | पूर्वाषाढा | जल, नीर, उदक, अम्बु, तोय आदि । |
| २१. | उत्तराषाढा | विश्वे, विश्वेदेव आदि । |
| २२. | अभिजित् | विधि, विरञ्चि, धाता, विधाता आदि । |
| २३. | श्रवण | गोविन्द, विष्णु, श्रुति, कर्ण, वैष्णव, श्रव आदि । |
| २४. | धनिष्ठा | वसु, श्रविष्ठा आदि । |
| २५. | शतभिषा | वरुण, वारुण, अपांपति, नीरेश, जलेश आदि । |
| २६. | पूर्वाभाद्रपदा | अजपाद, अजचरण, अजांघ्रि आदि । |
| २७. | उत्तराभाद्रपदा | अहिर्बुध्न्य |
| २८. | रेवती | पूषा, अन्त्य, पौष्ण आदि । |

### अश्विनी नक्षत्रमा गर्ने काम



**वस्त्रोपनयनं क्षौरः सीमन्ताभरणक्रिया ॥३॥**
**स्थापनाश्वादियानञ्च कृषिविद्यादयोश्विभे ।**

अन्वयः - वस्त्रः उपनयनं क्षौरः सीमन्तः आभरणक्रिया स्थापना अश्वादियानं कृषि विद्यादयः च अश्विभे (करणीयम्) ।

भावार्थः- अश्विनी नक्षत्रमा वस्त्रसम्बन्धी काम, उपनयन, क्षौरकर्म, सीमन्तोन्नयन, आभूषणका काम, स्थापनादि कर्म, घोडा आदि चढ्ने काम, कृषि, विद्या आदि कार्य शुभ हुन्छ ।

### भरणी नक्षत्रमा गर्ने काम

**वापीकूप तडागादि विषशस्त्रोग्रदारुणम् ॥**
**विलप्रवेश गणितनिक्षेपा याम्यभे शुभाः ॥४॥**

अन्वयः - वापी-कूप-तडागादि, विष, शस्त्र, उग्र, दारुण विलप्रवेश, गणित, निःक्षेपः शुभाः ।

भावार्थः- पँधेरो, कुवा, तलाउ, विष, हतियार, उग्र (बलि आदि क्रूरकर्म) तथा दारुण (चिर्ने फोर्ने आदि कर्म), किल्लामा प्रवेश, गणित र निक्षेपसँग सम्बन्धित कामहरू भरणी नक्षत्रमा गर्दा शुभ हुन्छ ।

### कृत्तिका नक्षत्रमा गर्ने काम

**अग्न्याधानास्त्रशस्त्रोग्रसन्धिविग्रहदारुणाः ।**
**सङ्ग्रामौषधवादित्रक्रियाः शस्ताश्च वह्निभे ॥५॥**

अन्वयः - वह्नि भे अग्न्याधान अस्त्र शस्त्र उग्र सन्धि विग्रह दारुणाः सङ्ग्राम औषध वादित्र क्रिया च शस्ताः ।

भावार्थः- अग्न्याधान, अस्त्र, शस्त्र, उग्र, सन्धि, विग्रह, दारुणकर्म, युद्ध, औषधि तथा वाद्यवादन सम्बन्धी कर्म कृत्तिकामा गर्नु शुभ हुन्छ ।

### रोहिणी नक्षत्रमा गर्ने काम

**सीमन्तोन्नयनो(पनयो)द्वाहवस्त्रभूषा स्थिर-क्रियाः ।**
**गजवास्त्वभिषेकाश्च प्रतिष्ठा ब्रह्मभे शुभाः ॥६॥**



अन्वयः - ब्रह्म भे सीमन्तोन्नयन (सीमन्त, उपनयन), उद्वाह, वस्त्र, भूषा, स्थिर-क्रियाः, गज, वास्तु, अभिषेक, प्रतिष्ठाश्च शुभाः ।

भावार्थः- सीमन्तोन्नयन (पाठान्तर अनुसार सीमन्त र उपनयन), विवाह, वस्त्र, आभूषण, स्थिरकर्म, गजकर्म, वास्तुकर्म, अभिषेक र प्रतिष्ठा रोहिणीमा शुभ हुन्छ ।

### मृगशिरा नक्षत्रमा गर्ने काम

**प्रतिष्ठा भूषणोद्वाह सीमन्तोन्नयन-क्रियाः ।**
**क्षौर वास्तु गजोष्ट्राश्च यात्राः शस्ता च चन्द्रभे ॥७॥**

अन्वयः - चन्द्र भे प्रतिष्ठा, भूषण, उद्वाह, सीमन्तोन्नयन-क्रिया, क्षौर, वास्तु, गन, उष्ट्र, यात्रा च शस्ताः ।

भावार्थः- प्रतिष्ठा, भूषण, विवाह, सीमन्तोन्नयन, क्षौर, वास्तु, हाती, ऊँट, घोडा, यात्रा आदि काम मृगशिरामा शुभ हुन्छ ।

आर्द्रा नक्षत्रमा गर्ने काम

**ध्वजतोरण सङ्ग्राम प्रकारास्त्रक्रिया शुभाः ।**
**सन्धि विग्रह वैतान रसाद्याः शर्वभे शुभाः ॥८॥**

अन्वयः शर्व भे ध्वज, तोरण, सङ्ग्राम, प्राकार, अस्त्र-क्रिया शुभाः । सन्धि, विग्रह, वैतान, रसाद्या(श्च) शुभाः ।

भावार्थः- ध्वज, तोरण, सङ्ग्राम, पर्खाल, अस्त्र, सन्धि, विग्रह, त्रिपाल, रस आदि काम आर्द्रामा गर्नु शुभ हुन्छ ।

पुनर्वसु नक्षत्रमा गर्ने काम

**प्रतिष्ठा यान सीमन्त वस्त्रवास्तूपनायनम् ।**
**क्षौरास्त्रकर्मदितिभे विधेयं धान्य भूषणम् ॥९॥**



अन्वयः दिति भे प्रतिष्ठा, यान, सीमन्त, वस्त्र, वास्तु, उपनायनम्, क्षौर, अस्त्र-कर्म, धान्य, भूषणम् विधेयम् ।

भावार्थः- प्रतिष्ठा, सवारी, सीमन्त, वस्त्र, वास्तु, उपनयन, क्षौर, अस्त्र, धान्य र आभूषणको निर्माण आदि पुनर्वसुमा शुभ हुन्छ ।

पुष्य नक्षत्रमा गर्ने काम

**यात्रा प्रतिष्ठा सीमन्त व्रतबन्ध प्रवेशनम् ।**
**करग्रहं विनासर्वं कर्म देवेज्यभे शुभम् ॥१०॥**

अन्वयः - देवेज्य भे यात्रा, प्रतिष्ठा, सीमन्त, व्रतबन्ध, प्रवेशनम् (तथा) करग्रहं विना सर्वं कर्म शुभम् ।

भावार्थः- यात्रा, देव प्रतिष्ठा, सीमन्त, उपनयन, गृह प्रवेश र विवाह बाहेकका शुभकर्म पुष्यमा गर्नु शुभ हुन्छ ।

### अश्लेषा नक्षत्रमा गर्ने काम

अनृत व्यसनद्यूत क्रोधाग्निविष दाहकम् ।
विवाद रसवाणिज्यं कर्म कद्रुजभे शुभम् ॥११॥

अन्वयः - कद्रुज भे अनृत, व्यसन, द्यूत, क्रोध, अग्नि, विष, दाहकम्, विवाद, रस-वाणिज्यं कर्म शुभम् ।

भावार्थः- झुटो बोल्ने, व्यसन, जुवा, रिस, अग्नि, विष, डढाउने, विवाद, मदको व्यापार अश्लेषामा गर्नु शुभ हुन्छ ।

### मघा नक्षत्रमा गर्ने काम

कृषि वाणिज्य गोधान्य रणोपकरणादिकम् ।
विवाह नृत्य गीताद्यं निखिलं कर्म पैतृभे ॥१२॥

अन्वयः - पैतृभे कृषि, वाणिज्य, गो, धान्य, रणोपकरण आदि (तथा) विवाह, नृत्य, गीत आदि निखिलं कर्म (कार्यमिति) ।



भावार्थः- कृषि, व्यापार, गोपालन, धान्यकर्म, युद्ध सामग्री, विवाह, नाचगान आदि सबै काम मघामा गर्नु शुभ हुन्छ ।

### तीनै पूर्वा नक्षत्रमा गर्ने काम

विवाद विष शस्त्राग्निदारुणोग्राहवादिकम् ।
पूर्वात्रयेखिलं कर्म कर्त्तव्यं मांसविक्रयम् ॥१३॥

अन्वयः - पूर्वात्रये विवाद, विष, शस्त्र, अग्नि दारुण, उग्र, आहव, मांसविक्रय आदिकं अखिलं कर्म कर्त्तव्यम् ।

भावार्थः- विवाद, विष, शस्त्र, अग्नि, दारुण, उग्रकर्म, युद्ध तथा मासु बिक्रीको काम तीनै पूर्वामा गर्नु पर्दछ ।

### तीनै उत्तरा नक्षत्रमा गर्ने काम

**वस्त्राभिषेक लोहाश्म विवाह व्रतबन्धनं ।**
**प्रवेश स्थापनाश्वेभ वास्तुकर्मोत्तरात्रये ॥१४॥**

अन्वयः - उत्तरात्रये वस्त्र, अभिषेक, लोह, अश्म, विवाह, व्रबन्धनं, प्रवेश, स्थापना, अश्व, इभ, वास्तुकर्म (कर्त्तव्यम्) ।

भावार्थः- लुगा लगाउनु, अभिषेक, फलाम-पत्थरको काम, विवाह, उपनयन, प्रवेश, स्थापना, अश्वकर्म, गजकर्म, वास्तुकर्म आदि सबै तीनै उत्तरामा गर्नु शुभ हुन्छ ।

### हस्ता नक्षत्रमा गर्ने काम

**प्रतिष्ठोद्वाह सीमन्त यानवस्त्रोपनायनम् ।**
**क्षौरवास्त्वभिषेकाश्वभूषणं कर्म भानुभे ॥१५॥**

अन्वयः - भानु भे प्रतिष्ठा, उद्वाव, सीमन्त, यान, वस्त्र, उपनायनं क्षौर, वास्तु, अभिषेक, भूषण कर्म च (कर्त्तव्यम्) ।



भावार्थः- प्रतिस्थापन, विवाह, सीमन्त, यानकर्म, वस्त्रनिर्माण र धारण, उपनयन, क्षौर, वास्तु, अभिषेक र भूषणकर्म हस्तामा गर्नु शुभ हुन्छ ।

### चित्रा नक्षत्रमा गर्ने काम

**प्रवेशवस्त्रसीमन्तप्रतिष्ठाव्रतबन्धनम् ।**
**त्वाष्ट्रभे वास्तुविद्या च क्षौरभूषणकर्म यत् ॥१६॥**

अन्वयः - प्रवेश, वस्त्र, सीमन्त, प्रतिष्ठा, व्रतबन्धनम्, वास्तुविद्या, क्षौर भूषण कर्म च (तत् सर्वं) त्वाष्ट्र भे (कर्त्तव्यम्) ।

भावार्थः- प्रवेश, वस्त्रधारण, सीमन्त, प्रतिस्थापन, व्रतबन्ध, वास्तुविद्या, र भूषण कर्म जस्ता काम चित्रामा गर्नू ।

### स्वाती नक्षत्रमा गर्ने काम

**प्रतिष्ठोपनयोद्वाह वस्त्रसीमन्तभूषणम् ।**
**प्रवेशा(विवाहा)श्वेभकृष्या(ष्णा)दि क्षौरकर्म समीरभे ॥१७॥**

अन्वयः - प्रतिष्ठा, उपनयन, उद्वाह, वस्त्र, सीमन्त, भूषणम्, प्रवेश, अश्व, इभ, कषि, क्षौरकर्म आदि समीर भे (कर्त्तव्यम्) ।

भावार्थः- प्रतिष्ठा, उपनयन, विवाह, वस्त्र, सीमन्त, आभूषण, प्रवेश, अश्वकर्म, गजकर्म, कृषि, क्षौरकर्म जस्ता सबै काम स्वातीमा गर्नु शुभ हुन्छ ।

### विशाखा नक्षत्रमा गर्ने काम

**वस्त्रभूषणवाणिज्यवस्तुधान्यादि सङ्ग्रहः ।**
**इन्द्राग्निभे नृत्यगीतशिल्पलोहाश्म लेखनम् ॥१८॥**

अन्वयः - वस्त्र, आभूषण, वाणिज्य, वस्तु-धान्यादि सङ्ग्रह, नृत्य, गीत, शिल्प, लोह, अश्म, लेखनम् (आदि कर्म) इन्द्राग्निभे (कर्त्तव्यम्) ।



भावार्थः- वस्त्र, आभूषण, व्यापार, धान आदिको सङ्ग्रह, नाचगान, शिल्पकर्म, लौहकर्म, पत्थरकर्म तथा लेखन विशाखामा गर्नु पर्दछ ।

### अनुराधा नक्षत्रमा गर्ने काम

**प्रवेशस्थापनोद्वाहव्रतबन्धाष्टमङ्गलम् ।**
**वास्तुभूषणवस्त्राश्व मैत्र भे संधि विग्रहम् ॥१९॥**

अन्वयः - प्रवेश, स्थापन, उद्वाह, व्रतबन्ध, अष्टाङ्गमङ्गल, वास्तु, भूषण, वस्त्र, सन्धि, विग्रह च मैत्र भे (कर्त्तव्यम्) ।

भावार्थः- प्रवेश, स्थापना, विवाह, व्रतबन्ध, अष्टमङ्गल, वास्तु, भूषण, वस्त्र, अश्वकर्म, सन्धि र विग्रह जस्ता कार्य अनुराधामा गर्नु पर्दछ ।

द्रष्टव्य :- अष्टमङ्गलका सम्बन्धमा विशेषतः दुई थरी भनाई पाइन्छन् । (१) लोकेस्मिन्मङ्गलान्यष्टौ ब्राह्मणो गौर्हुताशनः । हिरण्यं सर्पिरादित्य आपो राजा तथाष्टमः ॥ -ब्राह्मण, गाई, अग्नि, सुन, सर्सिउँ, घिउ, सूर्य, जल र राजा । (२) मृगराजो वृषो नागः कलशो व्यजनं तथा । वैजयन्ती तथा भेरी दीप इत्यष्टमङ्गलम् ॥ -सिँह, वृष, नाग, कलश, चमर (वा पङ्खा), वैजयन्तीमाला, भेरी र बत्ती । आयुर्वेदमा यसको बेग्लै अर्थ हुन्छ ।

**जेष्ठा नक्षत्रमा गर्ने काम**

**क्षौरास्त्रशस्त्र वाणिज्य गोमहिष्यम्बु कर्म यत् ।**
**इन्द्र भे गीत वादित्र शिल्प लोहाश्म लेखनम् ॥२०॥**

अन्वयः - क्षौर, अस्त्र, शस्त्र, वाणिज्य, गो, महिष, अम्बु, गीत, वादित्र, शिल्प, लोह, अश्म, लेखनम् कर्म इन्द्र भे (कर्त्तव्यम्) ।

भावार्थः- क्षौर, अस्त्र, शस्त्र, व्यापार, भैंसीको पालन आदि, जलकर्म, गान, वादन, शिल्प, लौह, पत्थर, लेखन आदि काम ज्येष्ठामा गर्नु शुभ हुन्छ ।



**मूल नक्षत्रमा गर्ने काम**

**विवाह कृषि वाणिज्य दारुणाहव भेषजम् ।**
**नैरृते नृत्यशिल्पसन्धिविग्रहलेखनम् ॥२१॥**

अन्वयः - विवाह, कृषि, वाणिज्य, दारुण, आहव, भेषजं, नृत्य, शिल्प सन्धि, विग्रह, लेखनं नैरृते कर्म (कर्त्तव्यम्) ।

भावार्थः- विवाह, कृषि, व्यापार, दारुणकर्म, युद्ध, औषधी, नृत्य, शिल्प, सन्धि, विग्रह, लेखन जस्ता काम मूलमा गर्नु शुभ हुन्छ ।

**श्रवण नक्षत्रमा गर्ने काम**

**प्रतिष्ठाक्षौरसीमन्तयानोपनयनौषधम् ।**
**पुरग्राम गृहारम्भा विष्णुभे पट्टवन्धनम् ॥२२॥**

अन्वयः - प्रतिष्ठा, क्षौर, सीमन्त, यान, उपनयन, औषधं, पुर, ग्राम, गृहारम्भ, पट्टबन्धनं (कर्म) विष्णुभे (कर्त्तव्यम्) ।

भावार्थः- प्रतिस्थापन, क्षौर, सीमन्त, वाहन, उपनयन, औषध, पुर-ग्राम-गृह आरम्भ, पट्ट बन्धन (दानपत्र, तमसुक, लिखत आदि) का कार्य श्रवणमा गर्नु शुभ हुन्छ ।

धनिष्ठा नक्षत्रमा गर्ने काम

**वस्त्रोपनयनं क्षौरं मौञ्जिवन्धन भेषजम् ।**
**वसुभेवास्तु सीमन्त प्रवेशाश्च विभूषणम् ॥२३॥**

अन्वयः - वस्त्र, उपनयन, क्षौर, मौञ्जिवन्धन, भेषज, वास्तु, सीमन्त, प्रवेश, विभूषणञ्च (कर्म) वसु भे (कर्त्तव्यम्) ।

भावार्थः- लुगा लगाउनु, उपनयन, क्षौर, मौञ्जीबन्धन, औषध, वास्तु, सीमन्त, प्रवेश तथा आभूषणको काम धनिष्ठामा गर्नु शुभ हुन्छ ।



शतभिषा नक्षत्रमा गर्ने काम

**प्रवेशस्थापनं क्षौर मौञ्जीवन्धन भेषजम् ।**
**अश्वारोहणसीमन्तवास्तुकर्म जलेश भे ॥२४॥**

अन्वयः - प्रवेश, स्थापनं, क्षौर, मौञ्जवन्धन, भेषजं, अश्वारोहण, सीमन्त, वास्तु कर्म जलेश भे (कर्त्तव्यम्) ।

भावार्थः- गृह प्रवेश, प्रतिस्थापन, क्षौर, मौञ्जीबन्धन, औषध, घोडसवारी, सीमन्त, वास्तु : यी सबै काम शतभिषामा गर्नु पर्दछ ।

रेवती नक्षत्रमा गर्ने काम

**विवाहव्रतबन्धाश्च प्रतिष्ठायानभूषणम् ।**
**प्रवेशवस्त्रसीमन्तक्षौरभेषजमन्त्यभे ॥२५॥**

अन्वयः - विवाह, व्रतबन्ध, प्रतिष्ठा, या, भूषणं, प्रवेश, वस्त्र, सीमन्त, क्षौर, भेषजञ्च (कर्म) अन्त्य भे (कर्त्तव्यम्) ।

भावार्थः- विवाह, व्रतबन्ध, प्रतिस्थापना, यानको सवारी, आभूषण, प्रवेश, वस्त्र, सीमन्त, क्षौर, औषधि निर्माणदि काम रेवतीमा गर्नु शुभ हुन्छ ।

अधोमुखी नक्षत्र

**पूर्वात्रयाग्निमूलाहिद्विदैवत्यमघान्तकम् ।**
**अधोमुखं तु नवकं भानां तत्र विधीयते ॥२६॥**
**विलप्रवेशगणितभूतसाधनलेखनम् ।**
**शिल्पकर्मलताकूपनिक्षेपोद्धारणादि यत् ॥२७॥**

अन्वयः - पूर्वात्रय, अग्नि, मूला, अहि, द्विदैवत्य, मघा, अन्तकं तु भानां नवकं अधोमुखं, तत्र विलप्रवेश गणित भूतसाधन लेखन शिल्पकर्म लता कूप निक्षेपेद्धारणादि यत् कर्म तत्र विधीयते ।

भावार्थः- तीनै पूर्वा, कृत्तिका, मूल, अश्लेषा, विशाखा, मघा र भरणी नक्षत्र अधोमुख संज्ञक हुन् । यिनमा गुफाप्रवेश, गणित, मन्त्र-यन्त्र-यन्त्रादिले भूतसाधना, लेखन, शिल्पकर्म, लहरा रोप्ने तथा निक्षेप उद्धार गर्ने काम गर्दछन् ।

तिर्यङ्मुखी नक्षत्र

**मित्रेन्दुत्वाष्ट्र हस्तेन्द्रादितिभान्त्योश्च वायुभम् ।**
**तिर्यङ्मुखाख्यं नवकं भानां तत्र विधीयते ॥२८॥**
**हलप्रवाहगमनं(ग्रहणं) गन्त्रीयन्त्रगजोष्ट्रकम् ।**
**अजादिगमनं चैव हयकर्म यतस्ततः ॥२९॥**
**खरगोरथनौयानं लुलायहयकर्म च ।**
**शकटोखे तथात्वोष्ट्रपश्वादि हयकर्म च ॥३०॥**
**(शकट ग्रहणञ्चैव तथा पश्वादि कर्म च)**

**अन्वयः -** मित्र इन्दु त्वाष्ट्र हस्ता इन्द्र अदिति भान्त्य अश्व वायुभं भानां नवकं तिर्यङ्मुखाख्यं, तत्र हलप्रवाह, गमनं गन्त्रीयन्त्र गज उष्ट्रकं अजादिगमनं (ग्रहणं वा) खर-गो-रथ-नौयानं लुलायकर्म च शखटोखे तथा उष्ट्र-पशु आदि हयकर्म च यतस्ततः विधीयते ।

भावार्थः- अनुराधा, मृगशिरा, चित्रा, हस्ता, आर्द्रा, पुनर्वसु, रेवती, अश्विनी र स्वाती नक्षत्र तिर्यङ्मुख संज्ञक हुन् । यिनमा हलो जोत्ने, गमन, गाडी बनाउने, हाती-ऊँट, बोका किन्ने, घोडाको खरिदबिक्री गर्ने काम शुभ हुन्छ । गधा-बैलगाडी-डुङ्गा चढ्न, लुलायहकर्म (भैंसी र घोडाको काम), वायुयान तथा ऊँटघोडा आदि पशुकर्म गर्नु पनि शुभ हुन्छ ।

**ऊर्ध्वमुखी नक्षत्र**

**ब्रह्मविष्णुमहेशार्य शततारावसूत्तराः ।**
**उध्र्वास्यं नवकं भानां प्रोक्तं चैव विधीयते ॥३१॥**
**पुरहर्म्यगृहारामवारणध्वजकर्म च ।**
**प्रासादं वारकोद्यान(भित्तिकोद्यान) प्राकारा चैव मण्डपम्(सिध्यति) ॥३२॥**

**अन्वयः -** ब्रह्म विष्णु महेश आर्य शततारा वसु उत्तरा (त्रय) च एव भानां नवकं उध्र्वास्यं, (तत्र) पुर हर्म्य गृह-आराम वारण ध्वजकर्म प्रासादं वारकोद्यान प्रकारा मण्डपञ्च विधीयते ।

भावार्थः- रोहिणी, श्रवण, आर्द्रा, पुष्य, शतभिषा, धनिष्ठा र तीनै उत्तरा नक्षत्र ऊर्ध्वमुख संज्ञक हुन् । यिनमा ग्राम, गृह, वाटिका, हाती, ध्वजकर्म, देवमन्दिर, उद्यानको पर्खाल, किल्ला, तथा मण्डपको निर्माण गर्नु शुभ हुन्छ ।

| नक्षत्र समूहको नाम | नक्षत्र | गर्न उपयुक्त कार्य |
|---|---|---|
| अधोमुखी | मूल, अश्लेषा, विशाखा, कृत्तिका, ३ पूर्वा, भरणी र मघा | कुवा खन्ने जस्ता अधोमुखी कार्य |
| ऊर्ध्वमुखी | आर्द्रा, पुष्य, श्रवण, धनिष्ठा, शतभिषा, ३ उत्तरा, रोहिणी | घर आदि बनाउने जस्ता ऊर्ध्वमुखी कार्य |
| तिर्यङ्मुखी | मृगशिरा, रेवती, चित्रा, अनुराधा, हस्ता, स्वाती, पुनर्वसु, अश्विनी, ज्येष्ठा | यात्रा जस्ता तिर्यङ्मुखी कार्य |

## चर, क्षिप्र, मिश्र, चर, मृदु र तीक्ष्ण संज्ञक नक्षत्र

**स्थिरं रोहिण्युत्तराभं क्षिप्रं सूर्याश्वि पुष्यभम् ।**
**साधारणं द्विदैवत्यं वह्निभं चर संज्ञितम् ॥३३॥**

अन्वयः - रोहिणी उत्तराभं स्थिरं, सूर्य अश्वि पुष्यभं क्षिप्रं, द्विदैवत्यं वह्निभं साधारणं, चर संज्ञितम्..।

भावार्थः- रोहिणी र तीनै उत्तरा यी स्थिरसंज्ञक नक्षत्र हुन् । हस्ता-अश्विनी-पुष्य यी क्षिप्र संज्ञक नक्षत्र हुन् । विशाखा-कृत्तिका यी साधारण वा मिश्र संज्ञक नक्षत्र हुन् । चर संक्षक नक्षत्रमा..।

**वस्वादित्यम्बुपस्वाती विष्णुभं मृदुसंज्ञितम् ।**
**चित्रान्त्य मित्र शशिभमुग्रं पूर्वा मघान्तकम् ॥**
**मूलेन्द्राह्यार्द्रभंतीक्ष्णं स्वनाम सदृशं फलम् ॥३४॥**

अन्वयः - वसु आदित्यअम्बुव स्वाती विष्णुभं, चित्रा अन्त्य मित्र शशिभं मृदुसंज्ञितं, पूर्वा मघान्तकं उग्रं, मूल इन्द्र आर्द्रभं तीक्ष्णं, (सर्वे) स्वनाम सदृशं फलम् (ज्ञेयम्) ।



भावार्थः- धनिष्ठा, पुनर्वसु, शतभिषा, स्वाती, श्रवण नक्षत्र पर्दछन् । चित्रा, रेवती, अनुराधा, मृगशिरा यि मृदु संज्ञक हुन् ।मूल, ज्येष्ठा, अश्लेषा, आर्द्रा तीक्ष्णसंज्ञक नक्षत्र हुन् र नाम अनुसारकै फल दिन्छन् ।

| नक्षत्र समूहको नाम | नक्षत्र | बार | गर्न उपयुक्त कार्य |
|---|---|---|---|
| ध्रुव वा स्थिर | तीनै उत्तरा, रोहिणी | आइत | स्थिर-बीज-गृह-शान्ति वाटिकागमन |
| चर वा चल | स्वाती, पुनर्वसु, श्रवण, धनिष्ठा, शतभिषा | सोम | हाति आदि आरोहण, वाटिका भ्रमण |
| उग्र वा क्रूर | तीनै पूर्वा, भरणी, मघा | मङ्गल | घात, अग्नि, शाठ्य, विष, शस्त्र आदि |
| मिश्र वा साधारण | विशाखा, कृत्तिका | बुध | अग्निकार्य, मिश्रकार्य, वृषोत्सर्ग |
| क्षिप्र वा लघु | हस्ता, अश्विनी, पुष्य, अभिजित् | बिही | पण्य-रति-ज्ञान-भूषणादि |
| मृदु वा मैत्र | मृगशिरा, रेवती, चित्रा, अनुराधा | शुक्र | गीत, वस्त्र, क्रीडा, मित्र-कार्य, भूषण |
| तीक्ष्ण वा दारुण | मूल, ज्येष्ठा, आर्द्रा, अश्लेषा | शनि | घात, उग्र, पशुदमन आदि |

कान छेड्न उपयुक्त नक्षत्र

**चित्रादित्याश्विविष्णवन्त्य रविमित्रवसूडुषु ।**
**समृगेषु च बालानां कर्णवेधक्रिया हिता ॥३५॥**

अन्वयः - चित्रा अदिति अश्वि विष्णु अन्त्य रवि मित्र वसु मृगेषु उडुषु च बालानां कर्णवेधक्रिया हिता ।

भावार्थः- चित्रा, पुनर्वसु, अश्विनी, श्रवण, रेवती, हस्ता, अनुराधा, धनिष्ठा र मृगशिरामा बालकको कान छेड्न शुभ हुन्छ ।

हात्ती सम्बन्धी कार्यमा शुभ हुने नक्षत्र

**दस्रेन्द्वदिति तिष्येसु करादित्रितये तथा ।**
**गजकर्माखिलं यत्तद्विधेयं स्थिरभेषु च ॥३६॥**

अन्वयः - दस्र, इन्दु, अदिति, तिष्य, करादित्रितये तथा स्थिरभेषु च यत् अखिलं गजकर्म तत् विधेयम् ।



भावार्थः- अश्विनी, मृगशिरा, पुनर्वसु, पुष्य, हस्ता, चित्रा र स्वाती  तथा स्थिरसंज्ञक नक्षात्रमा पनि हात्ती सम्बन्धी काम गर्नु शुभ हुन्छ ।

घोडा सम्बन्धी कार्यमा शुभ हुने नक्षत्र

**विविष्णु चरभे क्षिप्रे मृदुभे स्थिरभेषु च ।**
**वाजिकर्माखिलं कर्म सूर्यवारे विशेषतः ॥३७॥**

अन्वयः - विविष्णु, चरभे, क्षिप्रे, मृदुभे, स्थिरभे, विशेषतः सूर्यवारे च  अखिलं वाजिकर्म कर्म ।

भावार्थः- श्रवण लगायतका चर-क्षिप्र-मृदु-स्थिर संज्ञक नक्षत्र तथा आइतबार विशेषतः कुनै पनि प्रकारको अश्वकर्म गर्न उत्तम हुन्छ ।

जनावर किनबेच गर्न अनुपयुक्त नक्षत्र

**चित्रा श्रवणवैरञ्चित्र्युत्तरासु गमागमम् ।**

**दर्शाष्टम्यां चतुर्दश्यां पशूनाञ्च कदाचन ॥३८॥**

अन्वयः - चित्रा, श्रवण, वैरञ्चि, त्रिउत्तरा, दर्श, अष्टम्यां, चतुर्दश्याञ्च पशुनां गमागमं कदाचन ।

भावार्थः- चित्रा, श्रवण, रोहिणी र तीनै उत्तरा नक्षत्रमा तथा औंसी, चतुर्दशी र अष्टमी तिथिमा पशु खरिद गरेर वा बिक्रीका लागि कहिल्यै नलैजानू ।

हलो जोत्न उपयुक्त नक्षत्र

**मृदुध्रुवक्षिप्रचरविशाखापितृभेषु च ।**
**हलप्रवाहं प्रथम विदध्यान्मूलभे वृषैः ॥३९॥**

अन्वयः - मृदु, ध्रुव, क्षिप्र, चर, विशाखा, पितृभे, मूलभेषु च वृषैः प्रथम हलप्रवाहं (शुभम्) ।

भावार्थः- मृदु-ध्रुव-क्षिप्र-चर, विशाखा, मघा र मूल नक्षत्रमा बैलद्वारा पहिलो पटक खेत जोत्ने काम गर्नु शुभ हुन्छ ।



**हलादौ वृषनाशायभत्रयं सूर्यभुक्तभात् ।**
**अग्रेत्रयञ्च वैलक्ष्म्यै सौभ्यंपार्श्वे च पञ्चकम् ॥४०॥**
**शूलत्रयेऽपि नवकं मरणायान्य पञ्चकम् ।**
**श्रियै पुच्छेत्रयं श्रेष्ठं स्याच्चक्रेलाङ्गले शुभम् ॥४१॥**

अन्वयः - सूर्यभुक्तभात् हलादौ भत्रयं वृषनाशाय, अग्रे त्रयं च वैलक्ष्म्यै, पार्श्वे पञ्चकं च सौभ्यं, शूलत्रये अपि नवकं मरणाय, अन्य पञ्चकं श्रियै, पुच्छेत्रयं श्रेष्ठं, चक्रेलाङ्गले शुभम् स्यात् ।

भावार्थः- सूर्य रहेको नक्षत्रबाट हलको शुरुका ३ नक्षत्रले साँढेलाई कष्ट दिने, अगिल्तिरका ३ नक्षत्रले लक्ष्मी दिने, दक्षिणका ५ नक्षत्र सुख दिने, तीन शूल (जुआ र अरिशको टुप्पो) मा नौ नक्षत्र मरण कारक, देब्रेतिरका ५ नक्षत्र श्रीपद र पुच्छरका ३ नक्षत्र श्रेष्ठ फल दिने हुन्छन् । यसलाई हलचक्रबाट समभिनु पर्दछ ।

### बीउ रोप्न उपयुक्त नक्षत्र

**मृदुध्रुवक्षिप्रभेषु पितृवायुवसूडुषु ।**
**समूलभेषु वीजोप्तिरत्युत्कृष्टफलप्रदा ॥४२॥**

अन्वयः - मृदु-ध्रुव-क्षिप्रभेषु, पितृ-वायु-वसु उडुषु, समूलभेषु वीजोप्ति अति उत्कृष्ट फलप्रदा ।

भावार्थः- मृदु, ध्रुव, क्षिप्र, मघा, स्वाती, धनिष्ठा र मूल नक्षत्रमा बीउ रोप्नु अती शुभ हुन्छ ।

**भवेद्भत्रितयं मूर्ध्नि धान्यनाशाय राहुभात् ।**
**गलेत्रयं कज्जलाय वृद्ध्यै च द्वादशोदरे ॥४३॥**
**निस्तण्डुलत्वं लाङ्गूले भचतुष्टयमीरितम् ।**
**नाभौ वह्निः पञ्चकं यद्वीजोप्तावितिचिन्तयेत् ॥४४॥**

अन्वयः - राहुभात् मूर्ध्नि भत्रितयं धान्यनाशाय भवेद्, गलेत्रयं कज्जलाय, उदरे द्वादश च वृद्ध्यै, लाङ्गूले भचतुष्टयं निस्तण्डुलत्वं ईरितम्, नाभौ पञ्चकं वह्निः, इति यद् वीजोप्तारः चिन्तयेत् ।



भावार्थः- राहुचक्रका अनुसार राहुको नक्षत्रबाट ३ नक्षत्र मष्तकमा भए धान्यनाश, गलामा ३ नक्षत्र भए रोगप्रद, पेटमा १२ नक्षत्र भए वृद्धिदायक, पुच्छरमा ४ नक्षत्र भए दाना कम लाग्ने र नाइटोमा ५ नक्षत्र भए आगोको डर हुन्छ । यसको विचार बीउ रोप्ने बेलामा गर्नु पर्दछ ।

### रोग निको भएपछिको पहिलो स्नान गर्न नहुने समय

**स्थिरेष्वदिति सर्पान्त्यपितृमारुत भेसु च ।**
**न कुर्याद्रोगमुक्तश्च स्नानं वारेन्दु शुक्रयोः ॥४५॥**

अन्वयः - स्थिरेषु अदिति सर्प अन्त्य पितृ मारुत भेसु इन्दु शुक्रयोः वारे च रोगमुक्तश्च स्नानं न कुर्यात् ।

भावार्थः- स्थिर संज्ञक नक्षत्र, पुनर्वसु, अश्लेषा, रेवती, मघा र स्वाती नक्षत्रमा तथा सोमबार र शुक्रबार रोग निको भएका व्यक्तिले पहिलो पटक ननुहाउनू ।

### नाचगान आरम्भ गर्ने साइत

**उत्तरात्रयमित्रेन्द्र वसुवारुण भेषु च ।**
**पुष्यार्क पौष्ण धिष्ण्येषु नृत्यारम्भः प्रशस्यते ॥४६॥**

अन्वयः - उत्तरात्रय, मित्र, इन्द्र, वसु, वारुण भेषु पुष्य अर्क पौष्ण धिष्ण्येषु च नृत्यारम्भः प्रशस्यते ।

भावार्थः- तीनै उत्तरा, अनुराधा, ज्येष्ठा, धनिष्ठा, शतभिषा, पुष्य, हस्ता र रेवती नक्षत्रमा नृत्यको आरम्भ शुभ हुन्छ ।

### पूर्वयुजी, मध्ययुजी र परार्धयुजी नक्षत्र

**पूर्वार्धयुञ्जि षड्भानि पौष्णभाद्रुद्रभात्ततः ।**
**मध्ययुञ्जि द्वादशर्क्षाणीन्द्रभान्नवभानि च ॥४७॥**
**परार्धयुञ्जि क्रमशः सम्प्रीतिर्दम्पतेर्मिथः ।**

अन्वयः - पौष्णभात् षड्भानि पूर्वार्धयुञ्जि, ततः रुद्रभात् द्वादशर्क्षाणि मध्ययुञ्जि, इन्द्रभात् नवभानि च परार्धयुञ्जि, (एते) क्रमशः सम्प्रीतिर्दम्पतेमिथः (भवति) ।



भावार्थः- रेवती देखि मृगशिरासम्मका ६ नक्षत्र पूर्वयुजीमा, आर्द्रादेखि अनुराधासम्मका १२ नक्षत्र मध्ययुजीमा तथा ज्येष्ठा देखि उत्तर भाद्रपदासम्मका ९ नक्षत्र परार्धयुजीमा आउँदछन् । यिनमा क्रमैले पति श्रेष्ठ, दुवै समान र पत्नी श्रेष्ठ हुन्छे ।

### जघन्य, वृहद् र सम नक्षत्र

**जघन्यास्तोयमार्द्राहि पवनान्तक तारकाः ॥४८॥**
**ध्रुवादितिद्विदैवत्यो वृहत्ताराः पराः समः ।**
**तासां प्रमाणे घटिका त्रिंशन्नवति षष्ठ्यः ॥४९॥**
**क्रमादभ्युदिते चन्द्रे त्वनर्घार्घसमानि च ।**

अन्वयः - तोयं आर्द्रा अहि पवन अन्तक तारकाः जघन्याः, ध्रुव अदिति द्विदैवत्यः ताराः वृहत्, पराः समः, तासां त्रिशत् नवति षष्ठ्यः घटिका प्रमाणे अभ्युदिते चन्द्रे तु क्रमाद् अनर्घ अर्घ समानि च ।

भावार्थः- शतभिषा, आर्द्रा, अश्लेषा, स्वाती, भरणी, ज्येष्ठालाई जघन्य तथा ध्रुवसंज्ञक, पुनर्वसु, विशाखा नक्षत्रलाई वृहद् भनिन्छ । बाँकी नक्षत्रलाई सम भनिन्छ । यी ३ को क्रमशः ३०, ९० र ६० घडी अर्थात १५, ४५ र ३० मुहूर्तमा चन्द्रोदय भए क्रमैले भाउवेशा महँगो, सस्तो र स्थिर हुन्छ ।

कुल, उपकुल र कुलाकुल नक्षत्र

अश्व्यग्नीद्विजनैऋत्यभाग्यभात्वाष्ट्रत्र्युत्तरा ॥५०॥
पितृद्विदैवताख्यातास्तारास्युः कुल संज्ञकाः ।
धातृ ज्येष्ठादितिस्वाती पौष्णार्क हरिदेवताः ॥५१॥
अजपातङ्क भौजङ्ग ताराश्चोपकुलाह्वया ।
शेषा कुलाकुलस्ताराः....।

अन्वयः - अश्वि अग्नि द्विज नैऋत्य भाग्य त्वाष्ट्र त्रि उत्तरा पितृ द्विदैवता ख्याताः भा कुल संज्ञकाः तारा स्युः, धातृ ज्येष्ठा अदिति स्वाती पौष्ण अर्क हरिदेवता अजप आतङ्क भौजङ्ग च तारा उपकुलाह्वया, शेषा कुलाकुलः ताराः ।



भावार्थः- अश्विनी, कृत्तिका, मृगशिरा, मूल, पूर्वाफाल्गुनी, चित्रा, उत्तराफाल्गुनी, उत्तराषाढा, उत्तरभाद्रपदा, मघा, विशाखा-यी कुलसंज्ञक नक्षात्र हुन् । रोहिणी, ज्येष्ठा, पुनर्वसु, स्वाती, रेवती, हस्ता, श्रवण, पू.भाद्रपदा, भरणी र अश्लेषा उपकुल संज्ञक हुन् । बाँकी नक्षात्र कुलाकुल संज्ञक हुन् ।

राजाका लागि युद्धको साइत

...तासां मध्यकुलोडुषु ॥५२॥
गम्यते यदि भूपालैः पराजयमवाप्यते ।
भेषूपकुलसंज्ञेषु जयं प्राप्नोति भूमिपः ॥५३॥
सन्धिर्भवेत्तयोः साम्यं तदा कुलकुलोडुषु ।

अन्वयः - तासां मध्य भूपालैः यदि कुलोडुषु गम्यते पराजयमवाप्यते, उपकुल संज्ञेषु भेषु भूमिपः जयं प्राप्नोति, कुलकुलोडुषु तदा साम्यं तयोः सन्धिः भवेत् ।

भावार्थः- राजा यदि कुलसंज्ञक नक्षत्रमा युद्ध-यात्रामा निस्कन्छ भने उसले युद्ध हार्दछ । उपकुल संज्ञक नक्षत्रमा युद्ध-यात्रा गरे राजाले जित हासिल गर्दछ । कुलाकुल संज्ञक नक्षत्रमा यात्रा गरी युद्ध भए तिनका बीचमा सन्धि हुन्छ ।

### द्विपुष्कर आदि दोष र शान्ति

**अर्कार्कि भौमवारे चेद्भद्रायां विषमाङ्घ्रिभे ।५४।**
**त्रिपुष्करे त्रिगुणदं द्विगुणं यमलाङ्घ्रिभे ।**
**दद्यात्तदोषनाशाय गोत्रयं मूल्यमेव वा ॥५५॥**
**द्विपुष्करे द्वयं दद्यात् न दोषो ऋक्षगेऽपि वा ।**
**पुष्ये परकृतं हन्तु शक्तस्तेवापि यत्कृतम् ॥५६॥**
**दोषं परो न शक्तस्तु चन्द्रेप्यष्टमगेपि वा ।**
**क्रूरोविधुयुतो वापि पुष्यो यदिवलान्वितः ॥५७॥**
**विनाशं निग्रहं सर्वे मङ्गलस्विष्टदः सदा ।५८।**



भावार्थः- सूर्य, शनि र मङ्गलबार भद्रा तिथिमा यदि त्रिपुष्कर योग भए शुभ वा अशुभ फललाई तेबर तथा द्विपुष्कर योग भए दोबर बनाउँदछ । यो दोष मेटाउन क्रमशः ३ र २ गाईको वा त्यो मूल्य बराबरको द्रव्यदान गर्नू । द्विपुष्कर योगमा २ गाईको वा त्यो बराबर मूल्य दान गर्नू । केवल नक्षत्र मात्र हुँदा कुनै दोष हुँदैन । पुष्य नक्षत्र यात्राकालका सबै दोष नाश गर्न समर्थ हुन्छ । पुष्य आफैं कुनै दोषमा परेको भए अरु कुनै योगले सो दोष हटाउन सक्दैन । पुष्य बलियो भए क्रूरग्रहले युक्त चन्द्रमा वा अष्टम आदि स्थानको चन्द्रदोष विनाश गरी खुलाउँदछ तथा सबै खालका मङ्गल र इष्ट फल दिने हुन्छ ।

### तारा र योगतारा

**रामाग्निऋतुवाणाग्नि भूवेदाग्निशरेषवः ।५८।**
**नेत्रबाहुशरेंद्विंदु वेदवेदाग्निशङ्कराः ।**
**बाहुनेत्राग्निबह्वचब्धिशतद्विद्वि रदाः क्रमात् ॥५९॥**
**तारा संख्यास्तु विज्ञेया दस्रादीनां पृथक् पृथक् ।**
**या दृश्यते दीप्ततारा भगणे योगतारका ॥६०॥**

अन्वयः - दस्रादीनां तु पृथक् पृथक् राम अग्नि ऋतु वाण अग्नि भू वेदा अग्नि शर इषवः (इषु इवः, इषु बाणः) नेत्र, बाहु, शर इन्दु इन्दु वेद वेदा अग्नि शङ्कर बाहु नेत्र अग्नि बह्नि अब्धि शत द्वि द्वि तारा सङ्ख्या विज्ञेया, भगणे या दीप्ततारा दृश्यते (सा) योगतारका ।

भावार्थः- अश्विनी आदि २८ नक्षत्रका तारा क्रमशः ३, ३, ६, ५, ३, १, ४, ३, ५, ५, २, २, ५, १, १, ४, ४, ३, ११, २, २, ३, ३, ४, १००, २, २ र ३२ वटा हुन्छन् । यी अश्विनी आदि नक्षत्रका बेग्लाबेग्लै तारा हुन् । जुन चम्किलो तारा देखिन्छ त्यसलाई योगतारा भनिन्छ ।

### नक्षत्रशान्ति

वृषवृक्षोऽश्विभाद्याम्यधिष्ण्यात्परूषकस्ततः ।
उदुम्बरो ह्यग्निधिष्ण्याद्रोहिण्याजम्बुकस्तरुः ॥६१॥
इन्दुभात्खदिरो जातः कलिवृक्षश्च रौद्रभात् ।
सम्भूतो दितिभाद्वंशः पिप्पलः पुष्यसम्भवः ॥६२॥
सर्पधिष्ण्यान्नागवृक्षो वटः पितृभसम्भवः ।
पालाशो भाग्यजातश्च प्लक्षश्चार्यमसम्भवः ॥६३॥
अरिष्टवृक्षो रविभात् श्रीवृक्षस्त्वाष्ट्रसम्भवः ।
स्वात्यृक्षादर्जुनोवृक्षो द्विदैवात्पाहिकं ततः ॥६४॥
मित्रभात् वकुलोजातो विष्टिः पौरन्दरर्क्षजः ।
सर्जवृक्षो मूलभाच्च वंजुलो वारिधिष्ण्यजः ॥६५॥
पनसो विश्वभाज्जातो ह्यर्कवृक्षस्तु विष्णुभात् ।
वसुधिष्ण्याच्छमीजाता कदम्बो वारुणर्क्षजः ॥६६॥
अजैकपाच्चूतवृक्षोहिर्बुध्न्यात् पिचुमन्दकः ।
मधुवृक्षः पौष्णधिष्ण्यादेवं वृक्षं प्रपूजयेत् ॥६७॥
अरियोनिभवो वृक्षो पीडनीयः प्रयत्नतः ।

भावार्थः- अश्विनीबाट वृषवृक्ष (विषको रूख), भरणीबाट परूषक (फाल्सा), कृत्तिकाबाट डुम्री, रोहिणीबाट जामुनु, मृगशिराबाट खयर, आर्द्राबाट कलिवृक्ष (बर), पुनर्वसुबाट बाँस, पुष्यबाट पिपल, अश्लेषाबाट नागवृक्ष, मघाबाट वर, पूर्वाफाल्गुनीबाट पलाँश, उत्तराफाल्गुनीबाट प्लक्ष (पाखरी), हस्ताबाट रिठ्ठो, चित्राबाट नरिवल, स्वातीबाट अर्जुन, विशाखाबाट पाहिक ?, अनुराधाबाट वकुलवृक्ष, ज्येष्ठाबाट देवदारु, मूलबाट सर्ववृक्ष ?, पूर्वाषाढाबाट वंजुल (अशोक), उत्तराषाढाबाट पनस (रुखकटहर), श्रवणबाट

आँक, धनिष्ठाबाट शमी, शतभिषाबाट कदम्ब, पूर्वभाद्रपदाबाट आँप, उत्तरभाद्रपदाबाट निमको रुख र रेवतीबाट मधूवृक्ष उत्पन्न भएको हो । त्यसैले अश्विनी आदि नक्षत्रको शान्तिका लागि यिनै वृक्षको पूजा गर्नु पर्दछ तथा यी नक्षत्रका शत्रुसंज्ञक योनी भएका जुनजुन नक्षत्र हुन् त्यस नक्षत्रबाट उत्पन्न भएका वृक्ष काट्ने वा भाँच्ने कामले पनि त्यस नक्षत्रजन्य दोषको शान्ति हुन्छ ।

इति श्रीनारदीयसंहितायां नक्षत्रफलाध्यायः षष्ठः

✷

नारदीय संहिता अन्तर्गत नक्षत्रका बारेमा बताइएको छैटौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# सप्तमोऽध्यायः

## विष्कुम्भादि योग

**योगेशा यमविष्ण्विन्दु धातृजीवनिशाकराः ।**
**इन्द्रतोयाहिवह्न्यर्क भूमरुद्रुद्रऽतोयपाः ॥१॥**
**गणेशरुद्रधनदत्वष्ट्रमित्र षडाननाः ।**
**सावित्री कमला गौरी नासत्यौ पितरोऽदिति ॥२॥**

भावार्थः- विष्कुम्भ आदि २७ वटा योगका स्वामी क्रमैले यम, विष्णु, चन्द्रमा, ब्रह्मा, बृहस्पति, चन्द्रमा, इन्द्र, वरुण, सर्प, अग्नि, सूर्य, भूमि, वायु, रुद्र, वरुण, गणेश, रुद्र, कुबेर, त्वष्टा, मित्र, षडानन, सावित्री, कमला, गौरी, अश्विनीकुमार, पितृ र अदिति हुन् ।

## विभिन्न योगका त्याज्य नाडी

**सवैधृतौ व्यतिपातौ महापातावुभौ सदा ।**
**परिघस्य तु पूर्वार्द्धं सर्वकार्येषु गर्हितम् ॥३॥**



अन्वयः -स वैधृतौ व्यतिपातौ उभौ सदा महापातौ (तथा) परिघस्य पूर्वार्द्धं तु सर्वकार्येषु गर्हितम् (कथितम्) ।

भावार्थः- वैधृति र व्यतिपात योगलाई महापात भनिन्छ । यसका साथै परिघयोगको पूर्वार्द्ध पनि सबै कार्यमा वर्जित छ ।

**विष्कुम्भवज्रयोः तिस्रः षट्कं गण्डातिगण्डयोः ।**
**व्याघाते नवशूले तु पञ्चनाड्यस्तु गर्हिताः ॥४॥**

अन्वयः - विष्कुम्भवज्रयोः तिस्रः, गण्डातिगण्डयोः षट्कं, व्याघाते नव, शूले तु पञ्चनाड्यः गर्हिताः ।

भावार्थः- विष्कुम्भ र वज्र योगका ३, गण्ड र अतिगण्डका ६, व्याघातको ९ नाडी तथा शूलको पहिला ५ नाडी निन्दित हुनाले यिनमा कुनै शुभ कार्य गर्नु हुँदैन ।

## मूर्ध्नि नक्षत्र

**अदितीन्दुमघाश्लेषामूलमैत्रेन्यभानि च ।**
**ज्ञेयानि सहचित्राणि मूर्ध्निभानि यथाक्रमात् ॥५॥**

भावार्थः- पुनर्वसु, मृगशिरा, मघा, अश्लेषा, मूल, अनुराधा, पुष्य र चित्रा नक्षत्रलाई मूर्ध्निनक्षात्र भनिएको छ ।

### एकार्गल र दृष्टिपात दोष

**लिखेदूर्ध्वगतामेकां तिर्यग्रेखास्त्रयोदश ।**
**तत्र खार्जूरिके चक्रे मूर्ध्निभं न्यसेत् ॥६॥**
**भान्येकरेखागतयोः सूर्याचन्द्रमसोर्मिथः ।**
**एकार्गलो दृष्टिपातश्चाभिजिद्वर्जितानि वै ॥७॥**

अन्वयः - एकां उर्ध्वगतां त्रयोदश तिर्यग् रेखां लिखेत् । तत्र खार्जूरिके चक्रे कथितं मूर्ध्निभं न्यसेत् । सूर्याचन्द्रमसो मिथ एकरेखा गतयोः भानि, एकार्गलः दृष्टिपातश्च वै अभिजित् वर्जितानि ।

भावार्थः- एउटा ठाडो रेखा खिचेर त्यसमा तेर्सा १३ रेखा खिच्नू । यसरी एउटा खार्जूरिक चक्रमा बताइएका नक्षत्र राख्नु पर्दछ । एउटै रेखामा सूर्य र चन्द्रमाको नक्षत्र विषम परे एकार्गल र दृष्टिपात दोष हुन्छ । यो चक्रमा गणना गर्दा अभिजितलाई छोडेर गर्नू ।



### विभिन्न चक्रमा अभिजितको गणना

**लाङ्गले कमठे चक्रे फणिचक्रे त्रिनाडिके ।**
**अभिजिद्गणना नास्ति चक्रपाते विशेषतः ॥८॥**
**त्रिनाडिभिर्द्वादशभिः सहितं घटिकाद्वयम् ।**
**योगप्रकरणं योगात्क्रमात्ते सप्तविंशति ॥९॥**

भावार्थः- लाङ्गल, कमठ, फणि र त्रिनाडी चक्रमा अभिजितको गणना हुँदैन तथा विशेषतः चक्रपातमा पनि गणना गर्नु हुँदैन । १२ त्रिनाडी समेत २ घडीको एक योग बताइएको छ, ती क्रमशः बताइन्छ ।

इति श्रीनारदीयसंहितायां योगाध्यायः सप्तमः

✷

नारदीय संहिता अन्तर्गत योगका बारेमा बताइएको सातौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## अष्टमोऽध्यायः
### करणका स्वामी

**इन्द्रः प्रजापतिर्मित्रस्त्वर्यमाभूर्हरिप्रिया ।**
**कीनाशः कलिरुद्राक्षाख्यौ तिथ्यर्धेशास्त्वहिर्मरुत् ॥१॥**
**ववादि वणिगंतानि शुभानि करणानि षट् ।**
**परीता विपरीता वा विष्टिर्नेष्टा तु मङ्गले ॥२॥**

भावार्थः- करणका स्वामी क्रमैले इन्द्र, प्रजापति, सूर्य, अर्यमा, भूमि, लक्ष्मी, यम तथा कृष्णपक्षका उत्तरार्द्धका चार करणका स्वामी कलि, रुद्र, सर्प र पवन हुन् । ववबाट वणिज्सम्मका ६ करण शुभ हुन्छन् । पछिका ५ करण अशुभ फलदायक हुन्छ । मङ्गलकार्यमा विष्टि सदा निषिद्ध हुन्छ ।

### भद्रा

**मुखे पञ्च गलेत्वेका वक्षस्येकादशस्मृताः ।**
**नाभौ चतस्रः कट्यां तु तिस्रः पुच्छाख्यनाडिका ॥३॥**
**कार्यहानिर्मुखे मृत्युर्गले वक्षसि निःस्वता ।**
**कट्यामुन्नयनं नाभौच्युतिः पुच्छेध्रुवो जयः ॥**

भावार्थः- भद्राका सबै नाडीमा ५ घडी मुख, १ गला, ११ छाती, ४ नाभि, ३ कमर र ३ घडी पुच्छरमा कल्पना गर्नू । भद्राको मुखघडीमा कार्यहानी, गलाघडीमा मृत्यु, छातीघडीमा दरिद्रता, कमरघडीमा भ्रमण, नाइटोघडीमा हानि र पुच्छरघडीमा कार्यसिद्धि हुन्छ ।

### शुभ र अशुभ करणहरु

**स्थिराणि मध्यमान्येषां नेष्टं नाग चतुष्टये ॥४॥**

भावार्थः- स्थिरसंज्ञक करण मध्यम तथा नाग र चतुष्पद करण अशुभ हुन् ।

नोटः तिथिमानको आधालाई करण भनिन्छ । अर्थात प्रत्येक तिथिमा २/२ करण हुन्छ । यसका दुई भेद मानिएको छ । पहिलो चर र दोश्रो स्थिर । वव, वालव, कौलव, तैतिल, गर, वणिज

र विष्टि यी ७ करण प्रत्येक पक्षमा ४/४ पटक पर्ने हुनाले चर भनिन्छन् । शकुनि, नाग, चतुष्पद, किंस्तुघ्न यी ४ करण स्थिर करण हुन् किन कि कृष्णपक्षको चतुर्दशीको उत्तरार्द्धमा शकुनि, औंसीको पूर्वार्द्ध र उत्तरार्द्धमा क्रमैले नाग र चतुष्पद, शुक्लपक्षको परेवाको पूर्वार्द्धमा किंस्तुघ्न हुन्छ । अरु तिथिमा यी दोहोरिँदैनन् । यसैले यिनलाई स्थिरकरण भनिएको हो । तिथिबाट करण थाहा पाउनका लागि शुक्लपक्षको परेवाबाट वर्तमान तिथि संख्यासम्म गनेर आएको संख्यालाई दोबर पारी एक घटाउनू । बाँकी भएको अङ्कलाई ७ ले भाग गरी जती बाँकी हुन्छ त्यति १...२...आदिको क्रममा क्रमशः वव आदि करण हुन्छन् ।

इति श्रीनारदीयसंहितायां करणाध्यायः अष्टमः

नारदीय संहिता अन्तर्गत करणका बारेमा बताइएको आठौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

# नवमोऽध्यायः

## मुहूर्तका स्वामी

**दिवा मुहूर्त्ता रुद्राहिमित्रापितृवसूदकम् ।**
**विश्वे विधातृब्रह्मेन्द्रा इन्द्राग्न्यसुरतोयपाः ॥१॥**
**अर्यमा भगसंज्ञश्च विज्ञेया दश पञ्च च ।**
**ईशाजपादहिर्बुध्न्यः पूषाश्वियमवह्नयः ॥२॥**
**धातृचन्द्रादितीज्याख्य विष्ण्वर्कत्वाष्ट्रवायवः ।**
**अह्नः पञ्चदशो भागस्तथा रात्रि प्रमाणतः ॥३॥**
**मुहूर्त्तमानं द्वे एव क्षणार्धं च समे वरे ।**

भावार्थः- दिनरातमध्ये दिनको १५ मुहूर्तका स्वामी क्रमैले रुद्र, सर्प, मित्र, पितृ, वसु, उदक, विश्वेदेवा, अभिजित्, ब्रह्मा, इन्द्र, इन्द्राग्नि, राक्षस, वरुण, अर्यमा र भग हुन् तथा यिनको नाम अनुसारकै फल जान्नु र प्रत्येकको समय २ घडीको हुन्छ । यसै गरी रातका १५ मुहूर्तका स्वामी क्रमशः शिव, अजपात्, अहिर्बुध्न्य, पूषा, अश्विनीकुमार, धर्मराज, अग्नि, ब्रह्मा, चन्द्रमा, अदिति, बृहस्पति, विष्णु, सूर्य, त्वष्ट्रा र वायु हुन् । दिन र रात बराबर हुँदा यो २ मुहूर्तको मान हुन्छ । घटीबढी हुँदा यसको मान २ मुहूर्तबाट धेरथोर हुन्छ ।



## त्याज्य मुहूर्त

**अर्यमा, राक्षस ब्राह्मौ, पित्र्याग्नेयौ१ तथाभिजित् ॥४॥**
**राक्षसाप्यौ(यौ), ब्राह्मपित्र्यौ भौजङ्गगे शविनादिषु (भौजङ्गे रविनाडिषु) ।**
**वारेषु वर्जनीयास्ते मुहूर्त्तार्द्ध शुभा कर्मणि ॥५॥**

भावार्थः- आइतबार आदि बारमा क्रमैले अर्यमा, राक्षस र ब्रह्म, पितृ र अग्नि, अभिजित्, राक्षस र तोयप, ब्रह्म र पितृ, भुजङ्ग र ईश : यी मुहूर्तहरु शुभकार्यमा बर्जित हुन्छन् ।

वार अनुसार त्याग गर्नुपर्ने मुहूर्तहरु :-

| वार | आइत | सोम | मङ्गल | बुध | बिही | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| दिनमा डाड्नुपर्ने मुहूर्त | १४ | ९ र १२ | ४ र ७ | ८ | ६ र १२ | ४ र ९ | १ र २ |
| रातमा छाड्नुपर्ने मुहूर्त | - | ८ | ७ | - | - | ८ | १ |

मुहूर्तका नाम

पौराणिका रौद्रसित मैत्र वार भवाः क्षणाः ।
सवित्र वैराजिकाख्यौ गंधर्वाश्चष्टमो भिजित् ॥६॥
रोहिणी वल संज्ञश्च विजयो नैऋतस्तथा ।
इन्द्रो जलेश्वरः पञ्चदशमो भग संज्ञकः ॥७॥
अष्टमो योभिजित् संज्ञः स एव कुतपः स्मृतः ।
रौद्र गंधर्व यक्षेशाश्चारुणेमारुतोऽनलः ॥८॥
रक्षो धाता तथा सौम्यःपद्मजो वाक्पतिः स्मृतः ।
पूषा हरिर्वायुनिऋत् मुहूर्त्ता रात्रि संज्ञिताः ॥९॥

भावार्थः- पुराणका अनुसार वारोत्पन्न मुहूर्त क्रमशः रौद्र, सित, मैत्र, सूर्य, सावित्र, वैराजिक, गन्धर्व, अभिजित, रोहिणी, वल, विजय, निऋति, इन्द्र, जलेश्वर र भग : यी दिनका तथा रौद्र, गन्धर्व, यक्ष, ईश, अरुण, मारुत्, अनल, रक्ष, धाता, सौम्य, पद्मजा, वाक्पति, पूषा, हरि, वायु र निऋति : यी रातका मुहूर्त हुन् ।



अभिजित मुहूर्त

अभिजिद्वलयुक्तास्ते सर्वकार्येषु सिद्धिदाः ।

भावार्थः- यिनमा दिनको आठौं अभिजित् मुहुर्त सबै कार्यमा सिद्धिदायक हुन्छ ।

मुहूर्तको महत्व

एषु ऋक्षेषु यत्कर्म कथितं निखिलं च यत् ॥१०॥
तदैवत्ये तन्मुहूर्त्ते कार्ये यात्रादिकं सदा ।

भावार्थः- जुन नक्षात्रमा जुन काम गर्ने बताइएको छ त्यही काम गर्नु, काम नचले आवश्यकता परेको नक्षात्रको त्यही मुहूर्त निकालेर अरु दिनमा पनि त्यो काम गर्न उत्तम हुन्छ । यात्रा आदि सबै शुभकर्ममा आवश्यकता अनुसार मुहूर्त थाहा पाएर काम गर्नु पर्दछ ।

**रवियोग**

**सूर्य भाद्वेद गोतर्क दिग्विश्व नखसंमिते ।**
**चन्द्रर्क्षे रवियोगाः स्युर्दोष संघ विनाशकाः ॥११॥**

भावार्थः- सूर्य नक्षत्रबाट चन्द्रनक्षत्र ४,९,६,१०,१३ र २० औं मा परे रवियोग हुन्छ । यसले दोष-समूलाई नै नाश गर्दछ ।

इति श्रीनारदीयसंहितायां मुहूर्त्ताध्यायो नवमः

✷

नारदीय संहिता अन्तर्गत मुहूर्तका बारेमा बताइएको नवौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## दशमोऽध्यायः

### सूर्यचन्द्र नक्षत्रको कारण हुने योगहरु र तिनको फल

भूकम्प सूर्यभात्सप्तमर्क्षे विद्युच्च पञ्चमे ।
शूलोष्टमे च दशमे (शूलोष्टमेब्धिदिग्भे) शनिरष्टादशे तथा ॥१॥
केतुः पञ्चदशे दण्ड उल्का एकोनविंशतिः ।
मोह निर्घातकम्पाश्च (पञ्चाश्च) कुलिशं (कुविशं) परिवेषणम् ॥२॥
विज्ञेयमेकविंशर्क्षादारभ्य च यथाक्रमम् ।
चन्द्रयुक्तेषु भेष्वेषु शुभकर्म न कारयेत् ॥३॥
सूर्यभात्सार्प पित्रर्क्षत्वाष्ट्रमित्रान्त्यभेषु च ।
सविष्णुभेषु क्रमशो दश्रभाच्चन्द्रसंयुते ॥४॥
धिष्ण्येतावति संख्येत्र दुष्टयोगः पतत्यसौ ।
चण्डीश चण्डायुधाख्ये तस्मिन्नेवाचरेत्शुभम् ॥५॥

भावार्थः- सूर्य नक्षत्रबाट चन्द्रनक्षत्र सातौंमा परे भूकम्प हुन्छ । पाँचौंमा परे चटचाङ पर्दछ । आठौंमा भए सलहको डर हुन्छ । चौधौंमा भए शनि योग र अठारौंमा भए केतु योग हुन्छ । पन्ध्रौं भए दण्ड योग, १९ औं भए उल्का योग, २९ औं भए मोह योग, २२ औं भए निर्घात योग, २३ औं भए कम्प योग र २४ औं भए वज्र योग तथा २५ औं परे परिवेषण योग हुन्छ । यिनमा शुभकर्म नगर्नू । सूर्य नक्षत्रबाट ९,१०,१४,१७,२२ र २७ औं नक्षत्रमा चण्डीश तथा अश्विनीबाट यही संख्याका नक्षत्रमा चन्द्रमा हुँदा चण्डायुध नामको दुष्ट योग हुन्छ । त्यसैले यि योगमा मङ्गल कार्यको शुरुवात नगर्नू ।

### क्रकच र संवर्त्तक योग

(क्रकचं हि प्रवक्ष्यामि योगं शास्त्रानुसंमतम् ।
निन्दितं सर्वकार्येषु तस्मिन्नैवाचरेत् शुभम् ॥४॥
त्रयोदशस्युर्मिलने संख्यया तिथिवारयोः ।
क्रकचो नाम योगोयं मङ्गलेष्वतिगर्हितः ॥५॥)
सप्तम्यामर्कवारश्चेत्प्रतिपत्सौम्य वासरे ।
संवर्तयोगो विज्ञेयः शुभकर्म विनाशकृत् ॥६॥

भावार्थः- शास्त्रसम्मत क्रकच योगका बारेमा बताइरहेको छु, जो सबै कार्यमा निन्दित र कुनै पनि शुभकार्यका लागि अयोग्य छ । जब तिथि र बारको संख्या जोड्दा जोडफल १३ हुन्छ तब क्रकच योग हुन्छ । यो शुभकार्यमा वर्जित छ । यसरी नै सप्तमी तिथिमा आइतबार र परेवामा बुधबार परे संवर्त्तक नामको योग हुन्छ । यसले पनि शुभकर्मलाई नष्ट पार्दछ ।

**योगहरू**

**आनन्दः कालदण्डश्च धूम्रधातृसुधाकराः ।**
**ध्वांक्ष ध्वजाख्य श्रीवत्स वज्रमुद्गर छत्रकाः ॥७॥**
**मित्र मानस पद्माख्यलुंवकोत्पात मृत्यवः ।**
**काणः सिद्धिः शुभामृतमुसलातङ्क कुञ्जराः ॥८॥**
**राक्षसाख्यः चरैस्थर्य वर्धमानाः क्रमादमी ।**
**योगाःस्वसंज्ञाफलदास्त्वष्टाविंशति संख्यकाः ॥९॥**

भावार्थः- आनन्द, कालदण्ड, धूम्र, धाता, सुधाकर, ध्वांक्ष, ध्वज, श्रीवत्स, वज्र, मुद्गर, छत्र, मित्र, मानस, पद्म, लुम्ब, उत्पात, मृत्यु, काण, सिद्धि, शुभ, अमृत?, मुसल, अन्तक, कुञ्जर, राक्षस, चर, स्थिर र वर्धमान : यी २८ वटा आनन्द आदि गरिएका योग हुन् जुन् आफ्नो नाम अनुसारको फल दिने हुन्छन् ।



**रविवारे क्रमादेते दस्रभादिन्दुभाद्विधौ ।**
**सार्पाद्भौमे बुधेहस्तान्मैत्रभात्सुरमन्त्रिणः ॥१०॥**
**वैश्वदेवेभृगुसुते वारुणात् भास्करात्मजे ।**

भावार्थः- क्रमैले आइतबार अश्विनी नक्षत्रबाट, सोमबार मृगशिराबाट, मङ्गलबार अश्लेषाबाट, बुधबार हस्ताबाट, बिहीबार अनुराधाबाट, शुक्रबार उत्तराषाढाबाट तथा शनिबार शतभिषा नक्षत्रबाट (अभिजित् समेत) चाहिएको दिनको नक्षत्रसम्म गन्दा जति संख्या हुन्छ, त्यति नै संख्या (क्रम) को आनन्दादि योग हुन्छ ।

| क्र.सं. | योग | फल | आईत | सोम | मंगल | बुध | बिही | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|---|---|
| १ | आनन्द | शुभ | अश्विनी | मृगशिरा | अश्लेषा | हस्ता | अनुराधा | उ.षा. | शतभिषा |
| २ | कालदण्ड | अशुभ | भरणी | आर्द्रा | मघा | चित्रा | ज्येष्ठा | अभिजित् | पू.भा.प. |
| ३ | धूम्र | अशुभ | कृत्तिका | पुनर्वसू | पू.फा. | स्वाती | मूल | श्रवण | उ.भा.प. |
| ४ | धाता | शुभ | रोहिणी | पुष्य | उ.फा. | विशाखा | पू.षाढा | धनिष्ठा | रेवती |
| ५ | सौम्य | शुभ | मृगशिरा | अश्लेषा | हस्ता | अनुराधा | उ.षा. | शतभिषा | अश्विनी |
| ६ | ध्वांक्ष | अशुभ | आर्द्रा | मघा | चित्रा | ज्येष्ठा | अभिजित् | पू.भा.प. | भरणी |
| ७ | केतु | शुभ | पुनर्वसू | पू.फा. | स्वाती | मूल | श्रवण | उ.भा.प. | कृत्तिका |
| ८ | श्रीवत्स | शुभ | पुष्य | उ.फा. | विशाखा | पू.षाढा | धनिष्ठा | रेवती | रोहिणी |
| ९ | वज्र | अशुभ | अश्लेषा | हस्ता | अनुराधा | उ.षा. | शतभिषा | अश्विनी | मृगशिरा |
| १० | मुद्गर | अशुभ | मघा | चित्रा | ज्येष्ठा | अभिजित् | पू.भा.प. | भरणी | आर्द्रा |
| ११ | छत्र | शुभ | पू.फा. | स्वाती | मूल | श्रवण | उ.भा.प. | कृत्तिका | पुनर्वसू |
| १२ | मित्र | शुभ | उ.फा. | विशाखा | पू.षाढा | धनिष्ठा | रेवती | रोहिणी | पुष्य |
| १३ | मानस | शुभ | हस्ता | अनुराधा | उ.षा. | शतभिषा | अश्विनी | मृगशिरा | अश्लेषा |
| १४ | पद्म | अशुभ | चित्रा | ज्येष्ठा | अभिजित् | पू.भा.प. | भरणी | आर्द्रा | मघा |
| १५ | लुम्ब | अशुभ | स्वाती | मूल | श्रवण | उ.भा.प. | कृत्तिका | पुनर्वसू | पू.फा. |
| १६ | उत्पात | अशुभ | विशाखा | पू.षाढा | धनिष्ठा | रेवती | रोहिणी | पुष्य | उ.फा. |
| १७ | मृत्यु | अशुभ | अनुराधा | उ.षा. | शतभिषा | अश्विनी | मृगशिरा | अश्लेषा | हस्ता |
| १८ | काण | अशुभ | ज्येष्ठा | अभिजित् | पू.भा.प. | भरणी | आर्द्रा | मघा | चित्रा |
| १९ | सिद्धि | शुभ | मूल | श्रवण | उ.भा.प. | कृत्तिका | पुनर्वसू | पू.फा. | स्वाती |
| २० | शुभ | शुभ | पू.षाढा | धनिष्ठा | रेवती | रोहिणी | पुष्य | उ.फा. | विशाखा |
| २१ | अमृत | शुभ | उ.षा. | शतभिषा | अश्विनी | मृगशिरा | अश्लेषा | हस्ता | अनुराधा |
| २२ | मुशल | अशुभ | अभिजित् | पू.भा.प. | भरणी | आर्द्रा | मघा | चित्रा | ज्येष्ठा |
| २३ | गद | अशुभ | श्रवण | उ.भा.प. | कृत्तिका | पुनर्वसू | पू.फा. | स्वाती | मूल |
| २४ | मातंग | शुभ | धनिष्ठा | रेवती | रोहिणी | पुष्य | उ.फा. | विशाखा | पू.षाढा |
| २५ | रक्ष | अशुभ | शतभिषा | अश्विनी | मृगशिरा | अश्लेषा | हस्ता | अनुराधा | उ.षा. |
| २६ | चर | शुभ | पू.भा.प. | भरणी | आर्द्रा | मघा | चित्रा | ज्येष्ठा | अभिजित् |
| २७ | सुस्थिर | शुभ | उ.भा.प. | कृत्तिका | पुनर्वसू | पू.फा. | स्वाती | मूल | श्रवण |
| २८ | प्रवर्धमान | शुभ | रेवती | रोहिणी | पुष्य | उ.फा. | विशाखा | पू.षाढा | धनिष्ठा |



**सिद्धि योग**

हस्तर्क्षैरविवारेस्यादिन्दुभं दस्रभं कुजे ॥११॥
सौम्ये मित्रभमाचार्ये तिष्यं पौष्णं भृगोः सुते ।
रोहिणी मन्दवारे तु सिद्धियोगाह्वया अमी ॥१२॥

भावार्थः- आइतबार हस्ता, सोमबार मृगशिरा, मङ्गलबार अश्विनी, बुधबार अनुराधा, बिहीबार पुष्य, शुक्रबार रेवती र शनिबार रोहिणी नक्षत्र परे सिद्धि योग हुन्छ ।

अमृत योग

आदित्यभौमयोर्नन्दा भद्राशुक्रशशाङ्कयोः ।
जयासौम्ये भृगौरिक्ता शनौ पूर्णेतिनोशुभाः ॥१३॥

भावार्थः- आइतबार र मङ्गलबार नन्दा तिथि, शुक्र र सोमबार भद्रा, बुधबार जया, बिहीबार रिक्ता र शनिबार पूर्णा तिथि परे अमृत योग हुन्छ । यसमा शुभकार्य नगर्नू ।

सिद्धि योग

नन्दातिथिः शुक्रवारे सौम्ये भद्राजयाकुजे ।
रिक्तामन्दे गुरोर्वारे पूर्णासिद्धाह्वया अमी ॥१५॥

भावार्थः- शुक्रबार नन्दा, बुधबार भद्रा, मङ्गलबार जया, शनिबार रिक्ता र बिहीबार पूर्णा तिथि भए त्यो सिद्धि योग हुन्छ र यसमा सबै खाले शुभकर्म गर्नु पर्दछ ।

दग्ध योग

एकादश्यामिन्दुवारो द्वादश्यामार्किवासरः ।
षष्ठीवृहस्पतेर्वारे तृतीयाबुधवासरे ॥१६॥
अष्टमीशुक्रवारे तु नवम्यामर्कवासरः ।
पञ्चमीभौमवारे तु दग्धयोगाः प्रकीर्तिताः ॥१७॥
दग्धयोगाश्च विज्ञेया पङ्गुयोगाभिधा अमी ।
यमर्क्षमर्कवारेऽब्जे चित्राभौमे तु विश्वभम् ॥१८॥
बुधे धनिष्ठार्यमभं गुरौज्येष्ठा भृगोर्दिने ।
रेवतीमन्दवारे तु दग्धयोगाभवंत्यमी ॥१९॥

भावार्थः- एकादशी सोमबार, द्वादशी शनिबार, षष्टी बिहीबार, तृतीया बुधबार, अष्टमी शुक्रबार, नवमी आइतबार र पञ्चमी मङ्गलबार भए दग्ध योग हुन्छ । दग्धयोगलाई पङ्गु योग पनि भनिन्छ ।

आइतबार भरणी, सोमबार चित्रा, मङ्गलबार उत्तराषाढा, बुधबार धनिष्ठा, बिहीबार उत्तराफाल्गुनी, शुक्रबार ज्येष्ठा र शनिबार रेवती नक्षत्र भए पनि दग्ध योग हुन्छ ।

**विशाखादिचतुर्वर्गमर्कवारादिषु क्रमात् ।**
**उत्पातमृत्युकाणाख्याःसिद्धियोगाःप्रकीर्तिताः॥२०॥**

भावार्थः- विशाखा आदि ४ नक्षत्रको वर्ग आइतबार आदि ७ बारमा पर्दा क्रमैले उत्पात, मृत्यु, काण र सिद्धि योग हुन्छ ।

**तिथिवारोद्भवानेष्ठा योगा वारर्क्षसम्भवाः ।**
**हूणवङ्ग खशेभ्योन्यदेशेष्वतिशुभप्रदाः ॥२१॥**

भावार्थः- तिथि र बारजन्य योग अशुभ फल दिने हुन्छन् तथा वार र नक्षत्रजन्य योग हूण, बंग र खश देश बाहेकका देशमा शुभ फलद हुन्छन् ।

उत्पात, मृत्यु, काण र सिद्धि योग-चक्रः



| योग/ वार | आईत | सोम | मङ्गल | बुध | बिही | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| उत्पात | विशाखा | पूर्वाषाढा | धनिष्ठा | रेवती | रोहिणी | पुष्य | उत्तराफाल्गुनी |
| मृत्यु | अनुराधा | उत्तराषाढा | शतभिषा | अश्विनी | मृगशिरा | अश्लेषा | हस्ता |
| काण | ज्येष्ठा | अभिजित् | पूर्व भाद्रपदा | भरणी | आर्द्रा | मघा | चित्रा |
| सिद्धि | मूल | श्रवण | उत्तर भाद्रपदा | कृत्तिका | पुनर्वसु | पूर्वाफाल्गुनी | स्वाती |

इति श्रीनारदीयसंहितायां उपग्रहाध्यायो दशमः

नारदीय संहिता अन्तर्गत उपग्रह-योगका बारेमा बताइएको दशौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

# एकादशोऽध्यायः

## सङ्क्रान्तिका नाम र फल

**घोराध्वांक्षीमहोदर्यो नन्दामन्दाकिनीमता ।**
**मिश्राराक्षसिकानाम सूर्यवारादिषु क्रमात् ॥१॥**
**शूद्रविट्तस्करक्ष्माप भूदेवपशुनीचजाः ।**
**अनुक्तानां च सर्वेषां घोराद्याः सुखदाः स्मृताः ॥२॥**

भावार्थः- आइतबार आदि बारमा क्रमैले घोरा, ध्वांक्षी, महोदरी (नन्दा वा मन्दा), मन्दाकिनी, मिश्रा र राक्षसी सङ्क्रान्ति हुन्छ । घोराले शूद्र, ध्वांक्षीले वैश्य, महोदरीले चोर, मन्दाकिनीले राजा, नन्दाले बाहुन, मिश्रले पशु र राक्षसीले चाण्डाल तथा सबै नीच जातिलाई सुख दिन्छ ।

| सङ्क्रान्ति पर्ने वार (क) | सङ्क्रान्ति पर्ने नक्षत्र (ख) | क र ख मा सङ्क्रान्ति परे त्यसको नाम | त्यस्तो सङ्क्रान्तिको फल |
|---|---|---|---|
| आइत | उग्र (तीनै पूर्वा, भरणी र मघा) | घोरा | शूद्रलाई सुख |
| सोम | लघु (हस्ता, पुष्य, अभिजित् र अश्विनी) | ध्वांक्षी | वैश्यलाई सुख |
| मङ्गल | चर (स्वाती, पुनर्वसु, श्रवण, धनिष्ठा र शतभिषा) | महोदरी | चोरलाई सुख |
| बुध | मैत्र (मृगशिरा, रेवती, चित्रा र अनुराधा) | मन्दाकिनी | क्षत्रियलाई सुख |
| बिही | स्थिर (तीनै उत्तरा र रोहिणी) | मन्दा | बाहुनलाई सुख |
| शुक्र | मिश्र (विशाखा र कृत्तिका) | मिश्रा | पशुलाई सुख |
| शनि | तीक्ष्ण (मूल, आर्द्रा, ज्येष्ठा र अश्लेषा) | राक्षसी | अन्त्यजातलाई सुख |



### समय अनुसार सङ्क्रान्तिका फल

**पूर्वाह्नेनृपतीन्हन्ति विप्रान्मध्यंदिने विशः ।**
**अपराह्णेस्तगे शूद्रान्प्रदोषे च पिशाचकान् ॥३॥**
**निशिरात्रिचरान्नाटचकारानपररात्रिके ।**
**गोमाहिषेतिसन्ध्यायां लिङ्गिनो निशिसङ्क्रमः ॥४॥**
**दिवाचेन्मेषसङ्क्रान्तिरनर्थकलहप्रदा ।**
**रात्रौसुभिक्षमतुलं सन्ध्ययोर्वृष्टिनाशनम् ॥५॥**

भावार्थः- दोपहरभन्दा पहिले सङ्क्रान्ति भए राजालाई, मध्याह्नमा भए ब्राह्मणलाई, तेश्रो प्रहरमा भए वैश्यलाई तथा साँझमा भए शूद्रलाई नष्ट पार्दछ । प्रदोषकालकोले पिशाचलाई, रातकोले राक्षसलाई र आधिरात पछिकोले नृत्यजीविलाई पिडा दिन्छ । प्रातकालीनले गाईभैंसी आदि पशुलाई र प्रभातकालीनले सन्यासी आदिलाई कष्ट दिन्छ । दिनको मेष सङ्क्रान्ति अशुभ फलद र कलह जन्माउने हुन्छ । रातको भए अती सुभिक्ष र दुवै सन्ध्याको भए वर्षाको नाश गर्ने हुन्छ ।

### सङ्क्रान्तिका बाहन आदि

**हरिशार्दूलवाराहखर-कुञ्जरमाहिषाः ।**
**अश्वश्वाजवृषाः पादायुधाः करणवाहनाः ॥६॥**
**खशबाह्लिकवङ्गेषु सङ्क्रान्तिर्धिष्ण्यवाहना ।**
**अन्यदेशेषु तिथ्यर्धवाहना स्याद्ववादितः ॥७॥**
**भुशुण्डिभिन्दिपालासि दण्डकोदण्डतोमरान् ।**
**कुन्तपाशाङ्कुशास्त्रेसून्बिभर्तिकरणेष्विनः ॥८॥**
**निविष्टी वाणिजे विष्ट्यां बालवे च गरे ववे ।**

**कौलवे शकुने भानुः किंस्तुघ्ने चोर्ध्वसंस्थिता ॥१०॥**
**चतुष्पात्तैतिलेनागे सुप्ताक्रान्तिंकरोति सा ।**
**धान्यार्घवृष्टिषु भवेदनिष्टक्रमशस्तदा ॥११॥**
**आयुधं वाहनाहारो यज्जातीयजनस्य च ।**
**स्वापोपविष्टतिष्ठँतस्तेलोकाः क्षयमाप्नुयुः ॥१२॥**

भावार्थः- वव आदि करणका आधारमा सङ्क्रान्तिका करण वाहनका नाम क्रमशः सिंह, बाघ, वाराह, गधा, हाती, राँगो, घोडा, कुकुर, भेडो, साँढे र कुखुरा भनिएको छ । खश, वाह्लिक र वङ्ग देशमा सङ्क्रान्ति वाहन नक्षत्रका आधारमा तथा अन्त ववादि करणका आधारमा जान्नू । भुशुण्डि, भिन्दिपाल, खड्ग, दण्ड, धनुष, तोमर, भाला, फाश ?, अङ्कुश, अस्त्र ? र बाण : यी वव आदि करणका क्रमशः शस्त्र सङ्क्रान्तिवश बताइएको छ । वणिज, विष्टि, बालव, गर, वव करणमा स्थिति बसेको हुन्छ । कौलव, शकुनि र किंस्तुघ्न मा स्थिति उभिएको हुन्छ । चतुष्पद, तैतिल र नागमा स्थिति सुप्ता हुन्छ । बसेको बेलामा अन्न सस्तो, उभिएको बेला वर्षा र सुप्तामा अशुभ फल जान्नू । शयन, बसाइ तथा उभिने स्थिति जस्तो छ, हतियार-वाहन-आहार जुन जातिको हो त्यसैको तथा त्यस अनुसारका पदार्थको नाश हुन्छ ।

## अन्ध आदि गणना

**अंधकं मंदसंज्ञश्च मध्यसंज्ञः सुलोचनः ।**
**पर्यायात्गणयेद्धानि रोहिण्यादि चतुर्विधम् ॥१३॥**

भावार्थः- अन्ध, मन्द, मध्य, र सुलोचनको गणना गर्दा रोहिणी आदिबाट अभिजित समेत क्रमैले गर्नू । यसरी ७-७ नक्षत्र अन्द-मन्द-मध्य र सुलोचनको ७ आवृत्ति हुन्छ ।

| क्र.सं. | नाम | स्वामी | संज्ञा | मुख | नष्ट आदि विचार | | रोग उत्पत्ती र दान | | तारा | स्वरुप | जाति |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | संज्ञा | फल | दिन | दान | संख्या | | |
| १ | अश्विनी | अश्वि | क्षिप-लघु | अधः | मन्द | यत्नलाभ | ९ | भोजन | ३ | अश्व | वैश्य |
| २ | भरणी | यम | उग्र-क्रूर | अधः | मध्य | दूरश्रवण | ११ | गोन्नादि | ३ | योनि | चाण्डाल |
| ३ | कृत्तिका | अग्नि | मिश्र-साधा. | ऊर्ध्व | सुलोचन | अलाभ | ९ | स्वर्ण | ६ | क्षुर | ब्राह्मण |
| ४ | रोहिणी | ब्रह्मा | ध्रुव-स्थिर | ऊर्ध्व | अन्ध | शीघ्रलाभ | ७ | घृत | ५ | शकट | शूद्र |
| ५ | मृगशिरा | चन्द्र | मृदु-मैत्र | तिर्यक् | मध्य | यत्नलाभ | १ महिना | तिल | ३ | मृग | कृषक |
| ६ | आर्द्रा | रुद्र | तीक्ष्ण-दारुण | ऊर्ध्व | मन्द | दूरश्रवण | मृति | गो | १ | मणि | क्रूर |
| ७ | पुनर्वसु | अदिति | चर-चल | तिर्यक् | सुलोचन | अलाभ | ७ | पित्तल | ४ | गृह | वैश्य |
| ८ | पुष्य | गुरु | क्षिप-लघु | ऊर्ध्व | अन्ध | शीघ्रलाभ | ७ | तेल | ३ | शर | क्षत्रिय |
| ९ | अश्लेषा | सर्प | तीक्ष्ण-दारुण | अधः | मन्द | यत्नलाभ | मृति | गोजादि | ५ | चक्र | चाण्डाल |
| १० | मघा | पितृ | उग्र-क्रूर | अधः | मध्य | दूरश्रवण | २० | वस्त्रोपव | ५ | भवन | शूद्र |
| ११ | पू. फा. | भग | उग्र-क्रूर | अधः | सुलोचन | अलाभ | मृति | भोजन | २ | मंच | ब्राह्मण |
| १२ | उ. फा. | अर्यमा | ध्रुव-स्थिर | ऊर्ध्व | अन्ध | शीघ्रलाभ | ७ | अन्न | २ | शैया | क्षत्रिय |
| १३ | हस्ता | सूर्य | क्षिप-लघु | तिर्यक् | मन्द | यत्नलाभ | १५ | तिल | ५ | हात | वैश्य |
| १४ | चित्रा | त्वष्टा | मृदु-मैत्र | तिर्यक् | मध्य | दूरश्रवण | ११ | दुग्ध | १ | मुक्ता | कृषक |
| १५ | स्वाती | वायु | चर-चल | अधः | सुलोचन | अलाभ | मृति | गोघृत | १ | मुगा | क्रूर |
| १६ | विशाखा | इन्द्राग्नि | मिश्र-साधा. | अधः | अन्ध | शीघ्रलाभ | १५ | गोस्वर्ण | ४ | तोरण | चाण्डाल |
| १७ | अनुराधा | मित्र | मृदु-मैत्र | तिर्यक् | मन्द | यत्नलाभ | स्थिर | गोघृत | ४ | बलि | शूद्र |
| १८ | ज्येष्ठा | इन्द्र | तीक्ष्ण-दारुण | तिर्यक् | मध्य | दूरश्रवण | मृति | तिल | ३ | कुण्डल | कृषक |
| १९ | मूल | निऋति | तीक्ष्ण-दारुण | अधः | सुलोचन | अलाभ | ९ | रौप्योमा | ११ | सिंहपु. | क्रूर |
| २० | पू. षाढा | जल | उग्र-क्रूर | अधः | अन्ध | शीघ्रलाभ | मृति | गोमुक्ता | २ | गजदन्त | ब्राह्मण |
| २१ | उ. षाढा | विश्वेदेवा | ध्रुव-स्थिर | ऊर्ध्व | मन्द | यत्नलाभ | १ महिना | भोजन | २ | मंच | क्षत्रिय |
| २२ | अभिजित | ब्रह्मा | क्षिप-लघु | ऊर्ध्व | मध्य | दूरश्रवण | - | - | - | - | - |
| २३ | श्रवण | विष्णु | चर-चल | ऊर्ध्व | सुलोचन | अलाभ | १ महिना | श्रीफल | ३ | वामन | चाण्डाल |
| २४ | धनिष्ठा | वसु | चर-चल | ऊर्ध्व | अन्ध | शीघ्रलाभ | १५ | अश्वान्न | ४ | मादल | कृषक |
| २५ | शतभिषा | वरुण | चर-चल | ऊर्ध्व | मन्द | यत्नलाभ | ११ | भोजनान्न | १०० | वृत्त | क्रूर |
| २६ | पू. फा. | अजच. | उग्र-क्रूर | ऊर्ध्व | मध्य | दूरश्रवण | मृति | भोजन | २ | मंच | ब्राह्मण |
| २७ | उ. फा. | अहिर्वुध्न्य | ध्रुव-स्थिर | ऊर्ध्व | सुलोचन | अलाभ | ७ | अन्न | २ | यमल | क्षत्रिय |
| २८ | रेवती | पूषा. | मृदु-मैत्र | तिर्यक् | अन्ध | शीघ्रलाभ | स्थिर | वृष | ३२ | मादल | शूद्र |

## विष्णुपदा र षडशीतिमुखी सङ्क्रान्ति

**स्थिरभेष्वर्क सङ्क्रान्तिर्ज्ञेया विष्णुपदाह्वया ।**
**षडशीतिमुखीज्ञेया द्विस्वभावेषु राशिषु ॥१४॥**

भावार्थः- स्थिर राशि (वृष, सिंह, वृश्चिक र कुम्भ) मा सूर्य सङ्क्रान्ति भए विष्णुपदा र द्विस्वभाव राशि (मिथुन, कन्या, धनु र मीन) मा सूर्य सङ्क्रान्ति भए षडशीतिमुखी भनिन्छ ।

**अयन**

**सौम्ययाम्यायने नूनं भवेता मृगकर्किणोः ।**
**तुलाधराजयोर्ज्ञेयो विषुवत्सूर्य सङ्क्रमः ॥१५॥**

भावार्थः- मकर सङ्क्रान्तिबाट उत्तरायण र कर्कट सङ्क्रान्तिबाट दक्षिणायण शुरु हुन्छ । तुला र मेष सङ्क्रान्तिका दिन विषुवत् काल (दिनरात) समान हुन्छ ।

**सङ्क्रमण काल**

**अहः सङ्क्रमणे कृत्स्नं महत्पुण्यं प्रकीर्तितम् ।**
**रात्रौसङ्क्रमणे भानोर्व्यवस्था सर्वसङ्क्रमे ॥१६॥**



भावार्थः- दिनमा सङ्क्रान्ति हुँदा दिनमा ठूलो पुण्य र सबै रातमा सङ्क्रान्ति हुँदा सूर्यको व्यवस्था बताइएको छ ।?

**विभिन्न समयको कर्कट सङ्क्रान्ति र त्यसको फल**

**सूर्योदयसन्ध्यायां यदियाम्यायनं भवेत् ।**
**तदोदयादहः पुण्यं पूर्वाहः परतो यदि ॥१७॥**

भावार्थः- सूर्योदयका समयमा कर्कट सङ्क्रान्ति भए उदयदिनमा नै र सूर्योदयभन्दा पहिले कर्कट सङ्क्रान्ति भए अघिल्लै दिन पुण्यकाल हुन्छ ।

**विभिन्न समयको मकर सङ्क्रान्ति र त्यसको फल**

**सूर्यास्तमनवेलायां यदि सौम्यायनं भवेत् ।**
**तदोपेयादहः पुण्यं पराह्णः परतो यदि ॥१८॥**

भावार्थः- सूर्यास्तकालमा मकर सङ्क्रान्ति भए त्यही दिन र रातमा (सूर्यास्तभन्दा ३ घडी पछि) मकर सङ्क्रान्ति भए भोलिपल्ट पुण्यकाल हुन्छ ।

सन्ध्याकाल

**अर्धार्कास्तमनात्सन्ध्याघटिकात्रय सम्मिता ।**
**तथैवार्धोदयात्प्रातर्घटिकात्रय सम्मिता ॥१९॥**

भावार्थः- सूर्य आधा अस्ताए पछिका ३ घडी सायं सन्ध्या र आधा उदाएको ३ घडी अघिसम्म प्रातः सन्ध्या बताइएको छ । (एक घडीमा चालीस मिनेट हुन्छ) ।

सङ्क्रान्तिका पुण्यकाल र फल

**प्रागर्धरात्रात्पूर्वाह्णो पूर्ववद्विष्णुपादयोः ।**
**षड्शीतिमुखीचैव परतश्चेत्परेऽहनि ॥२०॥**



भावार्थः- यी दुई (विष्णुपदा र षडशीतिमुखी) सङ्क्रान्ति आधारात भन्दा पहिले भए पहिलो दिन र आधारात पछि भए अर्कोदिन पुण्यकाल हुन्छ ।

**पश्चात्पराह्नः सङ्क्रान्तिः षड्शीतिर्विपर्ययात् ।**
**यादृशेनेन्दुना भानोः सङ्क्रान्तिस्तादृशं फलम् ॥२१॥**
**नरः प्राप्नोतितद्राशौ शीतांशोः साध्वसाधु वा ।**
**सङ्क्राान्तिग्रहणर्क्षे वा पूर्वभाद्गणनाक्रमः ॥२२॥**
**रवेरयनसङ्क्रान्तिस्तदा तद्राशि सङ्क्रमः ।**
**सङ्क्रान्तिग्रहणर्क्षे वा जन्मभावधिगण्यताम् ॥२३॥**

भावार्थः- विष्णुपदा र षडशीतिमुखी सङ्क्रान्तिका फल विपरित हुन्छन् । जस्तो चन्द्रमाको सङ्क्रान्ति हुन्छ, त्यसको फल पनि त्यस्तै हुन्छ । सूर्यसङ्क्रान्तिका दिन जसको चन्द्रमा राम्रा छन् उसैलाई श्रेष्ठ फल दिन्छ । सङ्क्रान्तिका दिनभन्दा अघिल्लो दिनदेखि नक्षत्र गणना गर्नू । सूर्यको अयन सङ्क्रान्ति वा अरु राशिको सङ्क्रान्ति जुन दिन छ त्यसै दिनको नक्षात्रबाट जन्मनक्षत्रसम्म गनी सो अनुसार फल जान्नू ।

**नेष्टं त्रयं षट् च शुभं पर्यायाच्च पुनः पुनः ।**
**हानिर्वृद्धिः स्थानहानिस्तत्प्राप्तिर्भानुतः क्रमात् ॥२४॥**

भावार्थः- सङ्क्रान्तिका दिनको नक्षत्रदेखि जन्मनक्षत्रसम्म गन्दा पहिला ३ नक्षत्र अशुभ, त्यसपछिका ६ शुभदायक, त्यसपछिका ३ हानिकारक, त्यसपछिका ६ वृद्धिकारक, त्यसपछिका ३ स्थान हानिकारक र अन्त्यका ६ नक्षत्र लाभप्रद हुन्छन् ।

सङ्क्रान्ति दोषको शान्ति

**तिलोपरि लिखेच्चक्रं त्रिशूलञ्च त्रिकोणकम् ।**
**तत्रहेमं विनीक्षिप्य दद्यात्तद्दोषशान्तये ॥२५॥**

भावार्थः- थालमा तिल भरी त्यसमाथि कुङ्कुमले चक्र, त्रिशूल र त्रिकोण बनाई त्यसमाथि सुनका टुक्रा राखी पूजा गरेर ब्राह्मणलाई दान दिनु, सङ्क्रान्तिजन्य दोष शान्त हुन्छ ।

**ग्रहबल**



**तारावलेन शीतांशुर्बलवाँस्तद्वशाद्रविः ।**
**स सङ्क्रमणतस्तद्वद्वशात्खेट बलाधिकः ॥२६॥**

भावार्थः- ताराबलले चन्द्र बलियो हुन्छ, चन्द्रमाले सूर्य बलियो हुन्छ, त्यस्तै अन्य ग्रह सूर्य सङ्क्रान्तिका वशमा बल पाई बलवान हुन्छन् ।

इति श्रीनारदीयसंहितायां सङ्क्रान्तिलक्षणाध्यायः एकादशः

✷

नारदीय संहिता अन्तर्गत सङ्क्रान्तिका बारेमा बताइएको एघारौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्वादशोऽध्यायः
# गोचराऽध्यायः

### सूर्यस्थान

**शुभोऽर्को जन्मतस्त्र्यायदशषट्सु न विध्यते ।**
**जन्मतो नवपञ्चाम्बुव्ययगैर्व्यर्किभिस्तदा ॥१॥**

भावार्थः- सूर्य जन्मलग्नबाट ९।५।४।१२ मा शनि बाहेक कुनै ग्रहबाट विद्ध नभए जन्मबाट ३।११।१०।६ स्थानमा शुभ फल दिने हुन्छ । राशिचक्रमा ३ बाट ९, ११ बाट ५, १० बाट ४ र ६ बाट १२ को वेध हुन्छ ।

### चन्द्रस्थान

**विध्यते जन्मतो नेन्दुर्घुनाद्यायारिखत्रिषु ।**
**स्वेष्वष्टान्त्याम्बुधर्मस्थैर्विवुधैर्जन्मतः शुभः ॥२॥**



भावार्थः- जन्मराशिबाट ७।१।११।६।१० र ३ स्थानमा चन्द्रमा शुभ हुन्छ तर २।५।८।१२।४ र ९ स्थानमा बसेका बुध बाहेक अरु कुनै पनि ग्रहले विद्ध हुनुहुँदैन ।

### मङ्गल र शनिको स्थान

**त्र्यायारिषु कुजः श्रेष्ठो जन्मराशेर्न विध्यते ।**
**व्ययेष्वर्कग्रहे सौरिरप्यसूर्येण जन्मतः ॥३॥**

भावार्थः- जन्मराशिबाट ३।११।६ स्थानमा यदि मङ्गल, जन्मलग्न बाट १२।५।९ स्थानमा रहेका कुनै ग्रहले विद्ध छैनन् भने श्रेष्ठ फल दिन्छ । शनिको पनि मङ्गलको जस्तै विचार गर्नु तर शनिको सूर्यद्वारा वेध मानिँदैन ।

### बुधको स्थान

**ज्ञोद्व्यब्धर्यष्टखायेषु जन्मतश्च न विध्यते ।**

धीत्र्यङ्काद्याष्टान्त्यखटैर्जन्मतो व्यब्जकैः शुभः ॥४॥

भावार्थः- जन्मराशिबाट २।४।६।८।१०।११ स्थानमा रहेको बुध शुभ हुन्छ तर ५।३।९।१।८।१२ स्थानमा चन्द्रमा बाहेक कुनै ग्रह हुनु हुँदैन ।

बृहस्पतिको स्थान

जन्मतः स्वायगोक्षास्तेस्वन्त्याष्टायजलत्रिगैः ।
जन्मराशेर्गुरुः श्रेष्ठो ग्रहैर्यदि न विध्यते ॥५॥

भावार्थः- जन्मराशिबाट २।११।९।५।७ स्थानमा रहेको बृहस्पति १२।८। १०।४।३ स्थानमा कुनै ग्रह भई त्यसले विद्ध नभए शुभ हुन्छ ।

शुक्रको स्थान

कुव्यग्न्यब्धिसुताष्टाङ्कान्त्याये शुक्रो न विध्यते ।
जन्मभान्मृत्युसप्ताद्यखाङ्केष्वायारि पुत्रगैः ॥६॥

भावार्थः- जन्मराशिबाट ८।७।१।१०।९।५।११।६ कुनै ग्रह नभई १।२।३। ४।५।८।९।१२।११ मा बसेको शुक्र शुभ फलदायक हुन्छ ।

ग्रहको वेधको फल

न ददाति शुभं किञ्चिद्गोचरे वेधसंयुते ।
तस्माद्वेधं विचार्याथ कथ्यते तच्छुभाशुभम् ॥७॥

भावार्थः- वेधित ग्रहले कुनै पनि फल दिँदैन, त्यसैले ग्रहको वेधविचार गरेर मात्र शुभअशुभ फल बताउनु पर्दछ ।

ग्रहको उल्टो वेधको असर

वामवेधविधानेनाप्यशुभोऽपिग्रहो शुभः ।
अतस्तान्विविधान्वेधान्विचार्याथ वदेत्फलम् ॥८॥

भावार्थः- ग्रहको उल्टो बेध भए (वेधस्थानमा ग्रह र शुभस्थानमा वेध गर्ने ग्रह) अशुभ ग्रह पनि शुभ फल दिने हुन्छ । अतः विविध बेध विचारी फल बताउनू ।

### ग्रहको वेधको असर

**अज्ञात्वाविविधान्वेधान्यो ग्रहज्ञो फलं वदेत् ।**
**स मृषावचनाभाषी हास्यं याति नरः सदा ॥९॥**

भावार्थः- थरीथरीका वेध नजानी जुन ज्यौतिषले फल बताउँछन् तिनको भविष्यवाणी व्यर्थ हुन्छ र सधैं उपहासका पात्र बन्दछन् ।

### ग्रहदृष्टि

**सौम्येक्षितो नेष्टफलः शुभदः पापवीक्षितः ।**
**निष्फलौ तौ ग्रहौ चोभौ शत्रुणा च विलोकितौ ॥१०॥**

भावार्थः- अशुभ ग्रह पनि शुभ ग्रहको दृष्टिले गर्दा शुभद हुन्छन् । पापग्रह वा शत्रुग्रहले दृष्ट ग्रह शुभ भए पनि अशुभ फलद हुन्छन् ।



### निष्फल ग्रह

**नीचराशिगतः स्वश्य शत्रुक्षेत्रगतोऽपि वा ।**
**शुभाशुभफलं नैव दद्यादस्तमितोऽपि वा ॥११॥**

भावार्थः- निच राशिमा रहेको र आफ्नो शत्रुको घरमा गएको तथा अस्ताउने ग्रह निष्फल हुन्छ ।

### ग्रहको पूजा

**ग्रहेषु विषमस्थेषु शान्तिं यत्नात्समाचरेत् ।**
**हानिर्वृद्धिर्ग्रहाधीना तस्मात्पूज्यतमा ग्रहाः ॥१२॥**

भावार्थः- बिजोर स्थानका अशुभ फलद ग्रहको प्रयत्नपूर्वक शान्ति गर्नू । ग्रहकै अधिनमा लाभहानी सबै कुरा हुने हुनाले ग्रह पूजनीय हुन्छन् ।

**मणिमुक्ताफलं विद्रुमाख्यं गारुत्मकाह्वयम् ।**

**पुष्परागं त्वथोवज्रनीलगोमेद संज्ञके ॥**
**वैडूर्यं भास्करादीनां तुष्ट्यैधार्यं यथाक्रमम् ॥१३॥**

भावार्थः- सूर्य, चन्द्र, मङ्गल, बुध, गुरु, शुक्र, शनि, राहु र केतुलाई खुशी पार्न क्रमशः माणिक्य, मोती, मुँगा, पन्ना, पुष्पराज, हिरा, नीलम, गोमेद र वैदुर्यमणि धारण गर्नुपर्दछ ।

इति श्रीनारदीयसंहितायां गोचराऽध्यायः द्वादशः

✷

नारदीय संहिता अन्तर्गत ग्रहगतिका बारेमा बताइएको बाह्रौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# त्रयोदशोऽध्यायः

## शुभ र अशुभ पक्ष

**शुक्लपक्षादिदिवसे चन्द्रो यस्य शुभप्रदः ।**
**स पक्षस्तस्य शुभदः कृष्णपक्षोऽन्यथाशुभः ॥१॥**

भावार्थः- शुक्लपक्षको पहिलो दिन जसका चन्द्रमा शुभ छन् उसको शुक्लपक्ष शुभ हुन्छ, चन्द्रमा अशुभ भए कृष्णपक्ष शुभ हुन्छ ।

**शुक्लपक्षे शुभश्चन्द्रो द्वितीयनवपञ्चके ।**
**रिपुमृत्यम्बुसँस्थश्च न विद्धो गगनेचरैः ॥२॥**

भावार्थः- शुक्लपक्षमा २।९।५ औं चन्द्रमा शुभ भए पनि बुध बाहेक ६।८।४ मा रहेका कुनै ग्रहले विद्ध हुनु हुँदैन ।

## तारा थाहा पाउने तरिका



**जन्मसम्पद्विपत्क्षेम प्रत्यरिस्साधको वधः ।**
**मित्रं परममित्रञ्च जन्मभाच्च पुनः पुनः ॥३॥**

भावार्थः- कसैको तारा थाहा पाउन जन्मनक्षत्रबाट आजका दिनसम्म को नक्षत्र गनी त्यसलाई ९ ले भाग गरी बच्ने शेष क्रमशः १ जन्म, २ सम्पद, ३ विपत्, ४ क्षेम, ५ प्रत्यरि, ६ साधक, ७ बध, ८ मित्र तथा ९ वा ० शेष रहे परम मित्र नामक तारा हुन्छ भनी थाहा पाउनू ।

**जस्तैः- भीम (जन्मनक्षत्रःमूल) नामक व्यक्तिको तारा चक्रः**

| नाम,क्र.सं. | जन्मतारा | सम्पत् | विपत् | क्षेम | प्रत्यरि | साधक | वध | मित्र | अतिमित्र |
|---|---|---|---|---|---|---|---|---|---|
| १ | मूल | पू.षाढा | उ.षाढा | श्रवण | धनिष्ठा | शतभिषा | पू.भाद्रपदा | उ.भाद्रपदा | रेवती |
| २ | अश्विनी | भरणी | कृत्तिका | रोहिणी | मृगशिरा | आर्द्रा | पुनर्वसु | पुष्य | अश्लेषा |
| ३ | मघा | पू.फाल्गुनी | उ.फाल्गुनी | हस्ता | चित्रा | स्वाती | विशाखा | अनुराधा | ज्येष्ठा |

### दुष्ट तारा र तिनको शान्ति

**जन्मत्रिपञ्चसप्ताख्या तारा नेष्टफलप्रदाः ।**
**अनिष्टपरिहाराय दद्यादेतद्विजातये ॥४॥**
**शाकं गुडञ्च लवणं सतिलं काञ्चनं क्रमात् ।**
**कृष्णे वलवतीतारा शुक्लपक्षेवली शशीः ॥५॥**

भावार्थः- ताराहरुमध्ये जन्म, विपत्, प्रत्यरि र बध तारा अशुभ फलदायक हुन्छन् । यो दुष्टफल शान्ति गर्न ब्राह्मणलाई क्रमशः साग सखर, नुन र सतिल स्वर्ण दान गर्नु पर्दछ । शुक्लपक्षमा चन्द्रमाको र कृष्णपक्षमा ताराका बल धेरै हुन्छ ।

### दिन र रातका अवस्था

**चन्द्रस्य द्वादशावस्था दिवा रात्रौ यथाक्रमात् ।**
**यत्रोद्वाहादिकार्येषु संज्ञातुल्यफलप्रदा ॥६॥**

भावार्थः- दिन तथा रातका क्रमैले १२ अवस्था बताइएको छ । विवाह आदि काममा यी १२ अवस्था नाम अनुसार फल दिने हुन्छन् ।



**षष्टिघ्नं चन्द्रनक्षात्रं तत्कालघटिकान्वितम् ।**
**वेदघ्नमिषुवेदाप्तमवस्था भानुभाजिताः ॥७॥**
**प्रवासनष्टाख्यमृता जयाहास्यारतिर्मुदा ।**
**सुप्तिर्भुक्तिज्वराकम्पसुस्थितिर्नामसन्निभाः ॥८॥**

भावार्थः- अश्विनी आदि गत नक्षत्र सङ्ख्यालाई ६० ले गुणन गरी वर्तमान नक्षात्रको घडीपला जोड्नू । त्यसलाई ४ ले गुणन गरी ४५ ले भाग गर्नू । जति शेष रहन्छ त्यसलाई १२ ले भाग गर्दा क्रमैले प्रवास, नष्ट, मृत, जया, हास्या, रति, मुदा, सुप्ति, भुक्ति, ज्वर, कम्प र सुस्थिति नाम भएका अवस्था हुन्छन् । यी अवस्थाले नाम अनुसार फल दिन्छन् ।

इति श्रीनारदीयसंहितायां चन्द्रवलाऽध्यायः त्रयोदशः

*

नारदीय संहिता अन्तर्गत चन्द्रबलका बारेमा बताइएको तेह्रौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

# चतुर्दशोऽध्यायः

### मेष लग्न

पट्टबन्धनयानोग्रसन्धि विग्रहभूषणम् ।
धात्वाकरावहं कर्म मेषलग्ने प्रसिध्यति ॥१॥

भावार्थः- पट्टबन्धन?, सवारी, सन्धि, विग्रह, आभूषण, कोष र युद्ध कर्म गर्न मेष लग्नमा उत्तम फलदायी हुन्छ ।

### वृष लग्न

मङ्गलानि स्थिराण्येव वेश्मकर्म प्रवर्तनम् ।
कृषिवाणिज्यपश्वादि वृषलग्ने प्रसिध्यति ॥२॥

भावार्थः- मङ्गलकार्य, स्थिरकार्य, गृह सम्बन्धी कार्य, व्यापार र पशुसम्बन्धी कार्य वृष लग्नमा गर्नुपर्दछ ।



### मिथुन लग्न

कलाविज्ञानसिद्धिश्च भूषणाहव संश्रयम् ।
गजोद्वाहाभिषेकाद्यं कर्त्तव्यं मिथुनोदये ॥३॥

भावार्थः- मिथुन लग्नमा कला, विज्ञान, सिद्धि, आभूषण, युद्ध, शरण, हाती, विवाह तथा राज्याभिषेक आदि काम गर्नुपर्दछ ।

### कर्कट लग्न

बापीकूपतडागादि वारिवन्धन मोक्षणे ।
पौष्टिकं लिपिलेखादि कर्त्तव्यं कर्कटोदये ॥४॥

भावार्थः- कर्कट लग्नमा पोखरी, कुवा, तलाउ, पुल, नहर, पौष्टिककर्म तथा लेखन आदि काम गर्नु शुभ हुन्छ ।

सिंह लग्न

**इक्षुधान्य वणिक्पण्य कृषिसेवादि यत्स्थिरम् ।**
**साहसावहभूपाढ्यं सिंहलग्ने प्रसिध्यति ॥५॥**

भावार्थः- सिंह लग्नमा ऊखु, धान्य, व्यापार, पसल, कृषि, सेवाजस्ता स्थिरकार्य, साहसिक कार्य, युद्ध र राजाको काम गर्नुपर्दछ ।

कन्या लग्न

**विद्याशिल्पौषधीकर्म भूषणञ्च चरं स्थिरम् ।**
**कन्यालग्नेविधेयं तत् पौष्टिकाखिल मङ्गलम् ॥६॥**

भावार्थः- कन्या लग्नमा विद्या, शिल्प, औषधी, आभूषण, चरकर्म, स्थिरकर्म, पौष्टिक र सबै मङ्गल काम गर्न शुभ हुन्छ ।



तुला लग्न

**कृषिवाणिज्ययानाश्वपशूद्वाहव्रतादिकम् ।**
**तुलायामखिलं कर्मतुलाभाण्डाश्रितञ्च यत् ॥७॥**

भावार्थः- तुला लग्नमा कृषि, व्यापार, सवारी, घोडाको काम, पशु कर्म, विवाह, व्रत, तुला तथा भाण्ड ? सम्बन्धी काम गर्नु पर्दछ ।

वृश्चिक लग्न

**स्थिरकर्माखिलं कार्यं राजसेवाभिषेचनम् ।**
**चौर्यकर्मस्थिरारम्भाः कर्त्तव्यावृश्चिकोदये ॥८॥**

भावार्थः- वृश्चिक लग्नमा सबै स्थिर कार्य, राजसेवा, अभिषेक, चोरी तथा स्थिरकार्यको शुरुवात गर्नु शुभ फलदायक हुन्छ ।

धनु लग्न

**व्रतोद्वाहप्रयाणाञ्च ह्यङ्गशिल्पकलादिकम् ।**
**चरं स्थिरं सशस्त्रास्त्रं कर्त्तव्यं कार्मुकोदये ॥९॥**

भावार्थः- धनु लग्नमा व्रत, विवाह, तिर्थादि यात्रा, अङ्ग, शिल्प, कला, चरकर्म, स्थिरकर्म तथा शास्त्रअस्त्र आदिको काम गर्नु शुभ फलदायक हुन्छ ।

मकर लग्न

**तोयवन्धनमोक्षास्त्रकृष्यं चोष्ट्रादिकर्म यत् ।**
**प्रस्थानं पशुदासादिकर्त्तव्यं मकरोदये ॥१०॥**

भावार्थः- मकर लग्नमा बाँध, मोक्ष, हतियार निर्माण, कृषि, ऊँट सम्बन्धी काम, प्रस्थान, पशुकर्म तथा दास आदिको काम गर्नु लाभदायक हुन्छ ।



कुम्भ लग्न

**कृषिवाणिज्यपश्वम्बु शिल्पकर्म कलादिकम् ।**
**जलयात्रास्त्रशस्त्रादि कर्त्तव्यं कलशोदये ॥११॥**

भावार्थः- कुम्भ लग्नमा कृषि, वाणिज्य, पशु, जल, शिल्पकला, जलयात्रा तथा शस्त्रअस्त्रको काम गर्नु लाभदायक हुन्छ ।

मीन लग्न

**व्रतोद्वाहाभिषेकाम्बुस्थापनं सन्निवेशनम् ।**
**भूषणञ्जलपात्रञ्च कर्ममीनोदयेशुभम् ॥१२॥**

भावार्थः- मीन लग्नमा व्रत, विवाह, अभिषेक, जलस्थापन, प्रवेश कर्म, आभूषण, तथा जलपात्रको काम गर्नु शुभ हुन्छ ।

### शुभ र अशुभ राशि

**गोयुग्मकर्ककन्यान्त्यतुलाचापधराः शुभाः ।**
**शुभग्रहास्पदत्वात्स्युरितरे पापराशयः ॥१३॥**

भावार्थः- शुभ ग्रहका घर हुनाले वृष, मिथुन, कर्कट, कन्या, मीन, तुला र धनु राशिलाई शुभ भनिएको छ । यस बाहेकका राशि अशुभ हुन् ।

### पापग्रह र शुभग्रह

**क्षीणेन्द्वर्कार्किभूपुत्राः पापाभ्यां संयुतोबुधः ।**
**पूर्णचन्द्रबुधाचार्यशुक्रास्ते स्युः शुभग्रहाः ॥१४॥**

भावार्थः- क्षीण चन्द्र, सूर्य, शनि, र मङ्गल एवं पापयुक्त बुध पापग्रह तथा पूर्णचन्द्र, बुध, गुरु र शुक्रलाई शुभग्रह भनिएको छ ।



### राशिका शुभ र अशुभ फल

**सौम्योग्रं तेषां राशिनाम्प्रकृत्येव फलं भवेत् ।**
**योगेन सौम्यपापैश्च खचरैर्वीक्षितेन वा ॥१५॥**

भावार्थः- सौम्य र उग्र : यी राशिका प्राकृतिक फल हुन् । पाप र शुभ ग्रहको योग र दृष्टिका आधारमा यिनको शुभाशुभ फल हुन्छ

**सौम्याश्रितत्वात्क्रूरो वा स राशिः शोभनः स्मृतः ।**
**सौम्योपि राशिः क्रूरः स्यात्क्रूरग्रहयुतो यदि ॥१६॥**

भावार्थः- सौम्य ग्रह रहँदा क्रूर राशि पनि शुभ हुन्छ तथा शुभ राशि पनि क्रूरग्रहले युक्त हुँदा अशुभ फल दिने हुन्छ ।

**ग्रहयोगावलोकाभ्यां राशिर्धत्तेगृहोद्भवम् ।**
**फलं ताभ्यां विहीनौसौ स्वं भावमुपसर्पति ॥१७॥**

भावार्थः- राशिले ग्रहयोग र दृष्टि मुताबिक ग्रहजन्य फल दिन्छ तथा स्वतन्त्र हुँदा आफ्नो प्राकृतिक स्वभाव अनुसार फलको अनुसरण गर्दछ ।

लग्नको फल

**आदौसम्पूर्णफलदं  मध्येमध्यफलप्रदम् ।**
**अन्ते तुच्छफलं लग्नं सर्वस्मिन्नेवमेव च ॥१८॥**

भावार्थः- लग्नले शुरुमा पूर्ण, बीचमा मध्यम र अन्तमा अति थोरै फल दिन्छ । यो सबै लग्नको फल हो ।

**सर्वत्र प्रथमं लग्नं कर्तुश्चन्द्रबलं ततः ।**
**कन्यान्य इन्दौबलिनि सन्त्यन्ये बलिनो ग्रहाः ॥१९॥**



भावार्थः- कर्ताले सर्वप्रथम लग्नबलको  विचार गर्नु पर्दछ । त्यसपछि चन्द्रबल हेर्नू । कन्याबाहेकका राशिमा बलिया चन्द्रमा भए सबै ग्रह बलवान् हुन्छन् ।

**चन्द्रस्यबलमाधारमाधेयं चान्यखेटजम् ।**
**आधारभूतेनाधेयं दीयते परिनिष्ठितम् ॥२०॥**

भावार्थः- चन्द्रमाको बल आधार (जरा) हो र अरु ग्रहको बल आधेय हो । आधारको बलमा नै आधेयको रक्षा हुन्छ ।

**सचेन्दुः शुभदः सर्वग्रहाः शुभफलप्रदाः ।**
**अशुभश्चेदशुभदो वर्जयित्वा दिनाधिपम् ॥२१॥**

भावार्थः- यसकारण चन्द्र बलियो भए सबैग्रह शुभ फलदायक हुन्छन् अन्यथा अशुभ फलदायक । तर सूर्यका लागि यो नियम लाग्दैन ।

**लग्नेह्यभ्युदयो येषां तेष्वंशेषु स्थिताग्रहाः ।
लग्नोद्भवं फलं धत्तेचैवमेवं प्रकल्पयेत् ॥२२॥**

भावार्थः- लग्नमा रहेका ग्रह जुन राशिमा बसी शुभ वा अशुभ फल दिन्छन्, लग्नका राशि नवांशमा पनि यही किसिमको फलको कल्पना गर्नु पर्दछ ।

**एवं स्थानेषु शेषेषु चैवमेव प्रकल्पयेत् ।
लग्नं सर्वगुणोपेतम्लभ्यते यदितेन हि ॥
दोषाल्पत्वं गुणाधिक्यं वहुसन्ततमिष्यते ॥२३॥**

भावार्थः- सबै स्थानको विचार लग्न जसरी नै गर्नुपर्दछ । यदि लग्न सर्वगुण सम्पन्न छ भने दोष कम हुन्छ र गुणको बढोत्तरी हुन्छ ।

**दोषदुष्टो हि कालः स परिहार्यः पितामह ।
अथ शक्त्या गुणाधिक्यं दोषाल्पत्वन्ततो हितम् ॥२४॥**



भावार्थः- दोषयुक्त समयलाई सम्भव भएसम्म टाल्नू । जुन लग्नमा दोष थोरै र गुण धेरै हुन्छ त्यो शुभ फलदायक हुन्छ ।

इति श्रीनारदीयसंहितायां सर्वलग्नाध्यायः चतुर्दशः

✷

नारदीय संहिता अन्तर्गत लग्नका बारेमा बताइएको चौधौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# पञ्चदशोऽध्यायः

## प्रथमार्त्तवाध्यायः

### पहिलो पटकको अशुभ रजोदर्शन

**अमारिक्ताष्टमीषष्ठीद्वादशी प्रतीपत्स्वपि ।**
**परिघस्यतु पूर्वार्धे व्यतीपाते च वैधृतौ ।**
**सन्ध्यासूपप्लवे विष्ट्यामशुभं प्रथमार्त्तवम् ॥१॥**

भावार्थः- औंसी-रिक्ता-अष्टमी-षष्ठी-द्वादशी र परेवामा, परिघको पूर्वार्द्ध तथा व्यतिपात र वैधृति योगमा, सन्ध्याकालमा, कुनै किसिमको उत्पात वा आपत्कालमा एवं भद्रामा हुने पहिलो रजोदर्शन अशुभ हुन्छ ।

### बार अनुसार प्रथम रजोदर्शनको फल

**रुग्णा पतिव्रता दुःखी पुत्रिणी भोगभागिनी ।**
**पतिप्रिया क्लेशयुक्ता सूर्यवारादिषु क्रमात् ॥२॥**

भावार्थः- आइत आदि बारमा प्रथम रजोदर्शन हुने स्त्री क्रमशः रोगिनी, पतिव्रता, दुःखी, पुत्रिणी, भोग भागिनी, पतिप्रिया र क्लेशयुक्ता हुन्छे ।

### नक्षत्र अनुसार प्रथम रजोदर्शनको फल

**श्रीयुक्ता सुभगा पुत्रवती सौख्यान्विता स्थिरा ।**
**मानीकुलाधिकानारीचाश्विन्यां प्रथमार्त्तवा ॥३॥**

भावार्थः- अश्विनीमा प्रथम रजोदर्शन हुने स्त्री सम्पन्न, सुभगा, पुत्रवती, सुखी, स्थिर, माननीय तथा कुलमा आदरणीय हुन्छे ।

**दुःशीला स्वैरिणीवंध्यागर्भपातनतत्परा ।**
**परप्रेष्या काकवन्ध्या भरण्यां प्रथमार्त्तवा ॥४॥**

भावार्थ:- भरणीमा प्रथम रजोदर्शन हुने स्त्री दुष्टा, व्यभिचारिणी, बाँझी, गर्भपातक, दासवृत्तिकी तथा छोरैछोरा वा छोरी नै छोरी पाउने हुन्छे ।

**अन्यथा पुँश्चली वन्ध्या गर्भपातनतत्परा ।**
**वेश्या मृतप्रजा चापि वह्निभे प्रथमार्त्तवा ॥५॥**

भावार्थ:- भरणीमा प्रथम रजोदर्शन हुने स्त्री व्यभिचारिणी, बाँझी, गर्भपातिका, वेश्या र मरेका छोरा जन्माउने हुन्छे ।

**सुशीला सुप्रजा चान्या पतिभक्ता दृढव्रता ।**
**गृहार्चनरता नित्यं धातृभे प्रथमार्त्तवा ॥६॥**

भावार्थ:- रोहिणीमा प्रथम परसर्ने स्त्री सुशील, सुन्दर सन्तान पाउने, पतिलाई विशेष माया गर्ने, दृढव्रती र निरन्तर गृहकार्यमा लाग्ने हुन्छे ।

**गुणान्विता धर्मरता नारी सर्वसहा सती ।**
**पतिप्रिया सुपुत्रा या चन्द्रभे प्रथमार्त्तवा ॥७॥**

भावार्थ:- मृगशिरामा प्रथम रजोदर्शन हुने स्त्री गुणी, धार्मिक, सहनशील, पतिव्रता, पतिप्रिया र सुन्दर पुत्र जन्माउने हुन्छे ।

**कुलटा दुर्भगा दुष्टा मृतपुत्रा खला जडा ।**
**दुष्टव्रतपरिभ्रष्टा रौद्रभे प्रथमार्त्तवा ॥८॥**

भावार्थ:- आर्द्रामा प्रथम रजोदर्शन हुने स्त्री व्यभिचारिणी, अभागिनी, दुष्टा, जन्मनासाथ सन्तान मर्ने, निर्लज्जा, मूर्ख तथा दुष्टव्रत र आचरणकी हुन्छे ।

**पतिभक्ता पुत्रवती परसन्तानमोदिनी ।**
**कलाचारानुरक्ता या दितिभे प्रथमार्त्तवा ॥९॥**

भावार्थ:- पुनर्वसुमा प्रथम परसर्ने स्त्री पतिभक्ता, पुत्रवती, अर्काको सन्तानलाई पनि आनन्द दिने, कलामा विज्ञ, अनुरागी र कुलाचारिनी हुन्छे ।

**पतिप्रिया पुत्रवती मानभोगवती शुभा ।**
**सुकर्मनिरता दक्षा तिष्यर्क्षे प्रथमार्त्तवा ॥१०॥**

भावार्थः- पुष्यमा प्रथम रजोदर्शन हुने स्त्री पुत्रवती, मानभोग्या, शुभ र सुन्दर कर्ममा लागिरहने तथा दक्ष हुन्छे ।

**परभर्तृरता प्रेष्या कोपिनी निर्घृणालसा ।**
**मृषावादी च दुष्पुत्रा भौजङ्गे प्रथमार्त्तवा ॥११॥**

भावार्थः- अश्लेषामा प्रथम रजोदर्शन हुने स्त्री परपुरुष चाहने, दासी, रिसाहा, दया रहित, अल्छी, झूटी र दुष्ट सन्तान जन्माउने हुन्छे ।

**निर्द्वेष्या रोगसंयुक्ता सर्वदा ज्ञेय लोलुपा ।**
**पितृवेश्मरता मान्या पैतृभे प्रथमार्त्तवा ॥१२॥**

भावार्थः- मघामा प्रथम रजोदर्शन हुने स्त्री वैर रहित, अज्ञानी, लोभी, पिताको घरमा बस्न रुचाउने तथा सम्माननीय हुन्छे ।



**परकार्यरतादीना दुष्पुत्रा क्लेशभागिनी ।**
**मालिनी कर्कशा क्रुद्धा भाग्यभे प्रथमार्त्तवा ॥१३॥**

भावार्थः- पूर्वा फाल्गुनीमा प्रथम रजोदर्शन हुने स्त्री मजदुरी गर्ने, दीन, खराब छोरा जन्माउने, कष्ट भोग्ने, मलिन, कर्कशा र क्रोधी हुन्छे ।

**प्रजावती धर्मरता निर्बैरा मित्रपूजिता ।**
**सती मित्रगृहेसक्तार्यमर्क्षे(तु) रजस्वला ॥१४॥**

भावार्थः- उत्तरा फाल्गुनीमा प्रथम रजोदर्शन हुने स्त्री सन्तानवती, धार्मिक, शत्रुरहित, पूजनीय, सती र नातागोताको सम्मान गर्ने हुन्छे ।

**निर्द्वेष्या भूरिविभवा पुत्राढ्या भोगभोगिनी ।**
**प्रधाना दानकुशला हस्तर्क्षे प्रथमार्त्तवा ॥१५॥**

भावार्थः- हस्तामा प्रथम रजोदर्शन हुने स्त्री द्वेषहीन, अधिक वैभव युक्त, पुत्रवती, भोगभोग्ने र दान दिनमा कुशल हुन्छे ।

**चित्रकर्मा भोगिनी च कुशला क्रयविक्रये ।**
**विकीर्णकामा सुश्लक्ष्णा त्वाष्ट्रभे प्रथमार्त्तवे ॥१६॥**

भावार्थः- चित्रामा प्रथम रजोदर्शन हुने स्त्री चित्रकलामा निपुण, भोगवती, खरिदबिक्रीमा कुशल, कार्य कुशल र सुन्दर तथा चतुर हुन्छे ।

**वहुवित्तवती नस्यात्कुशला शिल्प कर्मणि ।**
**पुत्रपौत्रवती साध्वी वायुभे प्रथमार्त्तवा ॥१७॥**

भावार्थः- स्वातीमा प्रथम रजोदर्शन हुने स्त्री धनी, शिल्पकलामा चतुर र छोरानातीले युक्त एवं पतिव्रता हुन्छे ।



**नीचकर्मरता दुष्टा परसक्ता परप्रिया ।**
**विपुत्रा मलिना क्रुद्धा द्विदैवे प्रथमार्त्तवा ॥१८॥**

भावार्थः- विशाखामा प्रथम रजोदर्शन हुने स्त्री नीचकर्ममा लाग्ने, दुष्टा, परासक्ता, परपुरुषप्रिया, पुत्रहीन, मलीन र रिसाहा हुन्छे ।

**स्वामिपक्षार्चिता सौख्य गुणैः सम्यग्विभूषिता ।**
**सुपुत्रा शुभदा कान्ता मित्रर्क्षे प्रथमार्त्तवा ॥१९॥**

भावार्थः- अनुराधामा प्रथम रजोदर्शन हुने स्त्री पतिकुलबाट पूजित, सुखदायिनी, गुणवती, सन्तानवती र पतिप्रिया हुन्छे ।

**दुश्चरित्रा क्लेशिन्यार्त्तवा पुंश्चली व्यसुः ।**
**दुःसन्तानवती ज्येष्ठानक्षत्रे प्रथमार्त्तवा ॥२०॥**

भावार्थः- ज्येष्ठामा प्रथम पटक परसर्नै स्त्री चरित्रहीन, दुःखी, मासिक रजस्वलामा कष्ट हुने, व्यभिचारिणी, शक्तिहीन तथा दुष्ट सन्तान जन्माउने हुन्छे ।

**सन्तानार्थगुणैरन्यैर्युक्तान्यक्लेशमोचिनी ।**
**स्वकर्मनिरता नित्यं मूलभे प्रथमार्त्तवा ॥२१॥**

भावार्थः- मूलमा प्रथम रजोदर्शन हुने स्त्री सन्तान-धन-गुणले युक्त, दुःख हटाउने र स्वकर्ममा तत्पर रहने हुन्छे ।

**प्रच्छन्नपापा दुष्पुत्रा प्राणिहिंसनतत्परा ।**
**अजस्रव्यसना सक्ता तोयभे प्रथमार्त्तवा ॥२२॥**

भावार्थः- पूर्वाषाढामा प्रथम रजोदर्शन हुने स्त्री लुकेर पापगर्ने, दुष्ट सन्तान पाउने, जीवहिंसा गर्ने र दुर्व्यसनी हुन्छे ।

**कार्याकार्येषु कुशला सदा धर्मानुवर्तिनी ।**
**गुणाश्रया भोगवती विश्वभे प्रथमार्त्तवा ॥२३॥**

भावार्थः- उत्तराषाढामा प्रथम रजोदर्शन हुने स्त्री कर्तव्यअकर्तव्यमा कुशल, धर्माचारिणी, गुणी र भोगवती हुन्छे ।

**धनधान्यवती भोग पुत्रपौत्र-समन्विता ।**
**कुलानुमोदिनी मान्या विष्णुभे प्रथमार्त्तवा ॥२४॥**

भावार्थः- श्रवणमा प्रथम रजोदर्शन हुने स्त्री धनधान्य सम्पन्न, पुत्रपौत्रादिको सुखभोगगर्ने, कुललाई प्रसन्न राख्ने र माननीय हुन्छे ।

**पुत्र पौत्रान्विता भोग धनधान्यवती सती ।**
**स्वकर्मनिरता मान्या वसुभे प्रथमार्त्तवा ॥२५॥**

भावार्थः- धनिष्ठामा प्रथम रजोदर्शन हुने स्त्री पुत्रपौत्रादिको सुखभोगगर्ने, भोग तथा धनधान्यले पूर्ण, कार्यकुशल तथा माननीय हुन्छे ।

**वहुपुत्रा धनवती स्वकर्मनिरता सती ।**
**कुलानुमोदिनी मान्या वारुणे प्रथमार्त्तवा ॥२६॥**

भावार्थः- शतभिषामा प्रथम रजोदर्शन हुने स्त्री धेरै सन्तान पाउने, धनी, कार्यकुशल, पतिव्रता, कुलीन तथा माननीय हुन्छे ।

**वन्धकी वन्धुविद्वेष्या नित्यं दुष्टरता खला ।**
**शिल्प कार्येषु कुशलाऽजाङ्घ्रिभे प्रथमार्त्तवा ॥२७॥**

भावार्थः- पूर्वभाद्रपदामा प्रथम रजोदर्शन हुने स्त्री व्यभिचारिणी, दुष्टसँग घुमफिर गर्ने, दुष्टा र शिल्पकुशल हुन्छे ।

**आढ्या पुत्रवती मान्या सुप्रसन्ना पति प्रिया ।**
**बन्धुपूज्या धर्ववत्यहिर्बुध्न्ये प्रथमार्त्तवा ॥२८॥**

भावार्थः- उत्तरभाद्रपदामा प्रथम रजोदर्शन हुने स्त्री धनी, सन्तानवती, माननीय, प्रसन्नचित्ता, पतिप्रिया, बन्धूपूजिता र धर्मचारिणी हुन्छे ।



**दृढव्रताधर्मवती पुत्रसौख्यार्थसंयुता ।**
**विशाखागुणसम्पन्ना पौष्णभे प्रथमार्त्तवा ॥२९॥**

भावार्थः- रेवतीमा प्रथम रजोदर्शन हुने स्त्री दृढव्रती, धर्मात्मा, पुत्र-धनबाट सुखयुक्ता र विशाखाको जुन गुण हुन्छ त्यो गुणवाली हुन्छे ।

लग्न अनुसार प्रथम रजोदर्शनको फल

**कुलीरवृषचापान्त्यनृयुक्कन्या तुलाधराः ।**
**राशयः शुभदाज्ञेया नारीणां प्रथमार्त्तवे ॥३०॥**

भावार्थः- स्त्रीको प्रथम रजोदर्शन कर्कट, वृष, धनु, मीन, मिथुन, कन्या र तुला लग्नमा उत्तम हुन्छ ।

अशुभ मुहूर्तमा पहिलो राजोदर्शन हुँदाको शान्ति

**तिथ्यर्क्षवार निन्द्याश्चेत्सेवकर्म न कारयेत् ।**
**दोषाधिक्ये गुणाल्पत्वे तथापि न च कारयेत् ॥३१॥**

भावार्थः- प्रथम रजोदर्शनका समयमा यदि तिथि, बार, नक्षत्र : यी तीनै कुरा निन्दित भएमा वा दोष धेरै र गुण थोरै भए अभिषेक कर्म नगर्नू ।

**दोषाल्पत्वे गुणाधिक्ये सेककर्म समाचरेत् ।**
**निन्द्यर्क्षे तिथिवारेषु यत्रपुष्पं प्रदृष्यते ॥३२॥**
**तत्र शान्तिः प्रकर्त्तव्या घृतदूर्वातिलाक्षतैः ।**
**प्रत्येकमष्टशतञ्च गायत्र्या जुहुयात्ततः ॥३३॥**

भावार्थः- यदि दोष थोरै र गुण धेरै भए अभिषेक कर्म गर्नू । निन्दित नक्षत्र तथा तिथिबार हुनाले गर्दाको दोष घिउ, दुबो, तिल र अक्षता प्रत्येकले शान्तिका लागि १०८ चोटी गायत्री मन्त्रले होम गर्नु पर्दछ ।



**स्वर्णगोभूतिलान्दद्यात्सर्वदोषापनुत्तये ।**
**भर्ता तस्यापि गमनं वर्जयेद्रक्त दर्शनात् ॥३४॥**

भावार्थः- सुन, गाई, भूमि, तिल आदिको यथाशक्ति दान गर्नाले पनि सबै किसिमका दोष नाश हुन्छ । सामान्य रजस्वलाकालमा पतिका लागि पनि स्त्रीगमन ४ दिनसम्म वर्जित हुन्छ ।

इति श्रीनारदीयसंहितायां प्रथमार्त्तवाध्यायः पञ्चदशः

नारदीय संहिता अन्तर्गत पहिलो रजस्वलाका बारेमा बताइएको पन्ध्रौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

# षोडशोऽध्यायः

## आधानाध्यायः

### रजस्वला र पुरुष सम्पर्क

**रजोदर्शनतोऽस्पृश्या नार्यो दिनचतुष्टयम् ।**
**ततः शुद्धाक्रियाश्चैताः सर्वे वर्णेत्वयं विधिः ॥१॥**

भावार्थः- रजस्वला भएपछि ४ दिनसम्म स्त्री छुन लायक हुन्न । पछि पाँचौं दिन शुद्ध हुन्छे । यो नियम सबै वर्णका लागि समान छ ।

### ग्रामीणधर्म सम्बन्धी नियम

**ओजराश्यंशगे चन्द्रे लग्ने सुग्रहविक्षिते ।**
**उपवीती युग्मतिथौ ननग्नं कामयेत्स्त्रियम् ॥३॥**

भावार्थः- विषम राशि तथा विषम नवांशमा चन्द्रमा भए तथा पुरुष ग्रह लग्नलाई देख्दछ भने त जोर तिथिमा स्त्री सम्पर्क गर्नू । नाङ्गो भएर स्त्री कामना पूर्ण नगर्नू ।

**पुत्रार्थी पुरुषं त्यक्त्वा पौष्णमूलाहिपैतृभम् ।**
**युग्मेषु शशांके च लग्नेस्त्रीग्रहवीक्षिते ॥३॥**

भावार्थः- पुत्र चाहने स्त्रीले रेवती, मूल, अश्लेषा, मघा नक्षात्रका जोरराशिमा चन्द्रमा भएका बेलामा तथा लग्नलाई स्त्रीग्रहले हेरेको अवस्थामा पतिका साथ समागम नगर्नू ।

**अयुग्मेदिवसे भार्या कन्यार्थी कामयेत्पतिः ।**
**निर्वीजानामिमे योगाः सर्वदा निष्फलप्रदाः ॥४॥**

भावार्थः- रजस्वला भएको दिनबाट बिजोर दिनमा छोरी चाहने स्त्रीले पतिका साथ समागम गर्नू । जो पुरुष शक्तिहीन छ उसका लागि सबै योग निष्फल हुन्छन्, उसलाई सन्तान हुँदैन ।

### ग्रहको लिङ्ग

**पुंग्रहाः सूर्यभौमार्याः स्त्री ग्रहौ शशिभार्गवौ ।**
**नपुंसकौ सौम्यसौरी शिरोमात्रं विधुंतुदः ॥५॥**

भावार्थः- सूर्य, मङ्गल र बृहस्पति पुरुषग्रह, चन्द्रमा र शुक्र स्त्रीग्रह, बुध र शनि नपुंसक ग्रह तथा राहुको शीरमात्र नपुंसक भनिएको छ ।

इति श्रीनारदीयसंहितायां आधानाध्यायः षोडशः

✷

नारदीय संहिता अन्तर्गत पहिलो गर्भाधानका बारेमा बताइएको सोह्रौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## सप्तदशोऽध्यायः

### पुंसवनाध्यायः

**पुंसवन र सीमन्तोन्नयन गर्ने समय**

**प्रसिद्ध विषमे गर्भे तृतीये वाथ मासि च ।**
**कुर्यात्पुंसवनं कर्म सीमन्तञ्च यथा तथा ॥१॥**

भावार्थः- गर्भ रहेको तेश्रो महिनामा वा गर्भरहेदेखि गनी बिजोर महिनामा पुंसवन तथा सीमन्त कर्म गर्नुपर्दछ ।

इति श्रीनारदीयसंहितायां पुंसवनाध्यायः सप्तदशः

✷

नारदीय संहिता अन्तर्गत पहिलो पुंसवनका बारेमा बताइएको सत्रौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# अष्टादशोऽध्यायः

## सीमन्तोन्नयनाध्यायः

### सीमन्तोन्नयन गर्ने साइत

**चतुर्थेमासि षष्ठे वाप्यष्टमे वा तदीश्वरे ।**
**बलसम्पन्नदम्पत्योश्चन्द्रताराबलान्विते ॥१॥**
**अरिक्ता पर्वदिवसे कुजजीवार्कवासरे ।**
**तीक्ष्णमिश्रोग्र वर्जेषु पुंसंज्ञभांशके शशी ॥२॥**
**शुद्धेऽष्टमे जन्मलग्नात्तयोर्लग्ने न नैधने ।**
**शुभग्रहयुते दृष्टे पापखेटयुतेक्षिते ॥३॥**
**मासेष्टके चतुर्भिर्वा दृष्टेऽर्के बीजपूरकैः ।**
**स्त्रीणान्तु प्रथमे गर्भे सीमन्तोन्नयनं शुभम् ॥४॥**

भावार्थः- चौथो, छैटौं वा आठौं महिनामा जब मासाधिपति बलियो होस्, स्त्री-पुरुषका चन्द्रमा र तारा अनुकूल हुन्, रिक्ता र औंसी तिथि नहोस्, बिही र आइतबार नपरोस्, तीक्ष्ण-मिश्र-उग्र नक्षत्र बाहेकका नक्षत्र होस्, पुरुष संज्ञक राशिनवांशमा चन्द्रमा होस्, लग्न र अष्टम स्थान शुद्ध भई यिनलाई शुभग्रहले हेरेको होस्, आठौं महिना होस्, पूर्ण बलिया चार ग्रहले सूर्य दृष्ट होस् तब स्त्रिको प्रथम गर्भसम्बन्धी सीमन्तकर्म गर्नु अत्यन्त शुभदायक हुन्छ ।

**शुभग्रहेषु धीधर्मकेन्द्रेक्ष्वरिभे त्रिषु ।**
**पापेषु सत्सु चन्द्रेन्त्य निधनाद्यारि वर्जिते ॥५॥**

भावार्थः- केन्द्र, पाँचौं तथा नवम स्थानमा शुभ ग्रह बसेको, छैटौं, एघारौं र तेश्रो भावमा पापग्रह बसेको तथा चन्द्रमा लग्न-आठौं-बाह्रौं भावमा नहोस् अनि सीमन्तोन्नयन शुभ हुन्छ ।

**क्रूरग्रहाणामेकोपिलग्नादन्त्यात्मजाष्टगाः ।**
**सीमन्तिनीनां सद्गर्भं बलोहन्ति न संशयः ॥६॥**

भावार्थः- क्रूर ग्रहमध्ये यदि एउटा पनि ग्रह लग्नबाट बाह्रौं, पाँचौं वा आठौं स्थानमा छ भने त स्त्रीको उत्तम गर्भलाई निश्चय नै नष्ट गर्दछ किन की त्यसबेला त्यही ग्रह बलियो हुन्छ ।

# अथोनविंशोऽध्यायः

## जातकर्माध्यायः

### जातकर्म गर्ने समय

**तस्मिञ्जन्म मुहूर्त्तेऽपि सूतकान्तेऽपि वा शिशोः ।**
**जातकर्म प्रकर्त्तव्यं पितृपूजनपूर्वकम् ॥१॥**

भावार्थः- जन्मनासाथ वा सूतक चोखिएपछि पितृको पूजा आदि सकी शिशुको जातकर्म संस्कार गर्नु पर्दछ ।

इति श्रीनारदीयसंहितायां जातकर्माध्यायः एकोनविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत जातकर्मका बारेमा बताइएको उन्नाइसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## विंशोऽध्यायः

### नामकरणाध्यायः

#### न्वारान गर्ने समय

**सूतकान्ते नामकर्म विधेयं स्वकुलोचितम् ।**
**नामपूर्वं प्रशस्तं स्यान्मङ्गलैश्च शुभाक्षरैः ॥१॥**

भावार्थः- सूतक पछि आफ्नो कुल परम्परा अनुसार नामकर्म संस्कार गर्नु पर्दछ । नामको पहिलो अक्षर शुभ र माङ्गलिक राख्नु उत्तम हुन्छ ।

**देशकालोपयाताद्यैः कालातिक्रमणं यदि ।**
**अनस्तगे भृगाविज्ये तत्कार्यं चोत्तरायणे ॥२॥**

भावार्थः- परिस्थितिवश सूतकान्तमा नामाकरण संस्कार हुन नसके शुक्र र बृहस्पति उदाएका अवस्थामा एवं उत्तरायणमा नामाकरण संस्कार गर्नू ।



**चरस्थिर-मृदुक्षिप्रनक्षात्रे शुभवासरे ।**
**चन्द्रतारावलोपेते दिवसे च शिशोः पिता ॥३॥**
**शुभलग्ने शुभांशे च नैधने शुद्धिसंयुते ।**
**लग्नेन्त्यनैधने सौम्ये संयुते वा निरीक्षते ॥४॥**

भावार्थः- चर-स्थिर-मृदु-क्षिप्र नक्षात्रमा, शुभ बार (गुरु, शुक्र, चन्द्र र बुध) मा, चन्द्र र तारा बलिया हुँदा, शुभ लग्न तथा शुभ नवांशमा, आठौं शुद्ध लग्नमा, लग्न-द्वादश-अष्टम स्थानमा शुभ ग्रहको योग वा दृष्टि भएका बेलामा बाबुले आफ्नो नवजात शिशुको नामकरण संस्कार सम्पन्न गरोस् ।

इति श्रीनारदीयसंहितायां नामकरणाध्यायः विंशतितमः

*

नारदीय संहिता अन्तर्गत न्वारनका बारेमा बताइएको बीसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

# एकविंशोऽध्यायः

## अन्नप्राशनाध्यायः

### अन्नप्रासन गर्ने समय

**षष्ठेमास्यष्टमेवापि पुंसां स्त्रीणान्तु पञ्चमे ।**
**सप्तमे मासि वा कार्यं नवान्नप्राशनं शुभम् ॥१॥**

भावार्थः- बालकको पास्नी छैटौं वा आठौं महिनामा तथा बालिकाको पास्नी पाँचौं वा सातौं महिनामा गर्नु शुभ हुन्छ ।

**रिक्तां दिनक्षयं नन्दा द्वादशीमष्टमीममाम् ।**
**त्यक्त्वान्यतिथयः श्रेष्ठाः प्राशने शुभवासरे ॥२॥**

भावार्थः- पास्नी तिथिक्षय, रिक्तातिथि, नन्दा तिथि, द्वादशी, अष्टमी र औंसी बाहेकका तिथि र शुभ बारमा शुभ हुन्छ ।



**चरस्थिरमृदुक्षिप्रनक्षत्रे शुभनैधने ।**
**दशमे शुद्धिसंयुक्ते शुभलग्ने शुभांशके ॥३॥**

भावार्थः- चर-स्थिर-मृदु र क्षिप्र संज्ञक नक्षत्रमा अष्टम र दशम भाव शुद्ध हुँदा तथा शुभलग्न र शुभ ग्रहको नवांश भएमा त पास्नी गर्नु शुभ हुन्छ ।

**पूर्वाह्ने सौम्यखेटेन संयुक्ते वीक्षितेऽपि वा ।**
**त्रिषष्ठलाभगैः क्रूरैः केन्द्रधीधर्मगैः शुभैः ॥४॥**

भावार्थः- १२ बज्नुभन्दा अगाडी शुभ ग्रहले युक्त या इष्ट लग्नमा जव लग्नबाट ३।६।११ स्थानमा क्रूरग्रह तथा १।४।७।१०।५।९ स्थानमा शुभग्रह बसेको होस् पास्नी गर्नु शुभ हुन्छ ।

**व्ययारिनिधनस्थेन चन्द्रेण प्राशनं शुभम् ।**
**अन्नप्राशन लग्नस्थे क्षीणेन्दौ वास्तनीचगे ॥**
**नित्यभोक्तुश्च दारिद्र्यं रिष्फषष्ठाष्टगेऽपि वा ॥५॥**

भावार्थः- १२ औं, आठौं, छैटौं चन्द्रमामा पास्नी शुभ हुँदैन । पास्नी लग्नमा क्षीण चन्द्रमा, अस्तगत चन्द्रमा वा निच राशिगत चन्द्रमा बसेको भए अथवा चन्द्रमा ६।८।१२ औं स्थानमा भए पास्नी गर्ने दरिद्र हुन्छ ।

इति श्रीनारदीयसंहितायामन्नप्राशनाध्यायः एकविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत पास्नीका बारेमा बताइएको एक्काइसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्वाविंशोऽध्यायः
## चौलाध्यायः

### चौलकर्मको समय

**तृतीये पञ्चमाब्देवा स्वकुलाचारतोऽपि वा ।**
**बालानां जन्मतः कार्यं चौलमावत्सरत्रयात् ॥१॥**

भावार्थः- बालकको चौलकर्म जन्मबाट ३ वर्षदेखि लिएर ५ वर्षको अवस्थामा आफ्नो कुल परम्परा अनुसार गर्नुपर्दछ ।

**सौम्यायने नास्तगयोरसुरासुरमन्त्रिणेः ।**
**अपर्वरिक्ततिथिषु शुक्रेज्ञेज्येन्दुवासरे ॥२॥**

भावार्थः- उत्तरायण, बृहस्पति र शुक्र नअस्ताएको बेला, पूर्णिमा र रिक्ता तिथि नपारी शुक्र-बुध-बिही र सोमबार चौलकर्म गर्नु पर्दछ ।



**दस्रादितीज्य चन्द्रेन्द्रपूषा भानि शुभान्यतः ।**
**चौलकर्मणि हस्तर्क्षात्त्रीणि त्रीणिच विष्णुभात् ॥३॥**

भावार्थः- चौलकर्ममा अश्विनी, पुनर्वसु, पुष्य, मृगशिरा, ज्येष्ठा, रेवती नक्षत्र तथा हस्ता, चित्रा र स्वाती एवं श्रवण, धनिष्ठा र शतभिषा नक्षत्र शुभ हुन्छ ।

**पट्टबन्धनचौलान्नप्राशने चोपनायने ।**
**शुभदं जन्मनक्षात्रमशुभं त्वन्यकर्मणि ॥४॥**

भावार्थः- चौलकर्म, पट्टबन्धन, पास्नी र उपनयनमा जन्मनक्षात्र शुभ र अरुकर्ममा अशुभ समझिनु पर्दछ ।

**अष्टमे शुद्धि-संयुक्ते शुभलग्ने शुभांशके ।**
**न नैधने भे शीतांशौ षष्ठेन्त्ये तु विवर्जयेत् ॥५॥**

भावार्थः- शुभ लग्न तथा शुभ नवांशमा एवं आठौं भाव शुभ वा पापग्रह रहित हुँदा, निधन राशि नहुँदा र ६।८।१२ मा चन्द्रमा नहुँदा चौलकर्म शुभदायक हुन्छ ।

**धनत्रिकोणकेन्द्रस्थैः शुभैस्त्र्यायारिगैः परैः ।**
**अभ्यक्ते सन्ध्ययोर्नान्ते निशि भोक्तुर्न चाहवे ॥६॥**

भावार्थः- २।९।५।१।४।७।१० स्थानमा शुभग्रह र ३।६।११ स्थानमा पापग्रह हुँदा तेल लाएर क्षौरकर्म गराउनू । सन्ध्याकालमा, खाना खाइसकेपछि, रातमा तथा युद्धमा क्षौरकर्म नगराउनू ।

**नोत्कटे भूषिते नैव न याने नवमेऽह्नि च ।**
**क्षौरकर्म महीशानां पञ्चमे पञ्चमेऽहनि ॥७॥**
**कर्त्तव्यं क्षौरनक्षत्रे अथवास्योदयेष्टदम् ।**
**नृपविप्राज्ञया यज्ञे मरणे वाद मोक्षणे ॥**
**उद्वाहेऽखिल वारर्क्षतिथिषु क्षौर मिष्टदम् ॥८॥**



भावार्थः- अनुहार विगारेर (रिसाएको आदि बखत), ठाँट्टिएर र सवारीमा बसेर क्षौरकर्म नगर्नू । राजाको नवौं वा पाँचौं दिन क्षौरकर्म नगराउनू । केवल क्षौरकर्ममा बताइएका बार-नक्षत्र र तिथिमा नै क्षौरकर्म गर्नू । यज्ञ-मरण-जेलबाट निक्लँदा र विवाहमा जुनसुकै बार-नक्षत्र र तिथिमा ब्राह्मण तथा राजाको आज्ञा लिई क्षौरकर्म गर्नु शुभ हुन्छ ।

इति श्रीनारदीयसंहितायां चौलाध्यायो द्वाविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत कपाल मुण्डनका बारेमा बताइएको बाइसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# त्रयोविंशोऽध्यायः

## मङ्गलाङ्कुरार्पणम्

### मङ्गलदायक रुखविरुवा सार्ने वा रोप्ने साइत

कर्त्तव्यं मङ्गलेष्वादौ मङ्गलेषु करार्पणम् ।
नवमे सप्तमे मासि पञ्चमे दिवसेऽपि वा ॥१॥
तृतीये वीजनक्षत्रे शुभवारे शुभोदये ।
सम्यग्गृहाण्यलङ्कृत्य वितानध्वजतोरणैः ॥२॥
आशिषो वाचनं कार्यं पुण्यं पुण्याङ्गनादिभिः ।
महावादित्र नृत्याद्यैर्गताः प्रागुत्तरां दिशम् ॥३॥
तत्र मृत्सिकतां श्लक्ष्णां गृहीत्वा पुनरागतः ।
मृन्मयेष्वथवा बैणवेसु पात्रेषु पूरयेत् ॥
अनेक वीजसंयुक्तं तोयं पुष्पोपशोभितम् ॥४॥

भावार्थः- मङ्गलकर्मका पहिले ३।५।७।९ महिनामा दिनमा बिजारोपण मुहूर्तमा बताइएका नक्षत्रमा, शुभ दिनको शुभ लग्नमा, चँदुवा-ध्वजा-तोरण आदिले घरलाई सजाई बिरुवा सार्नु पर्दछ । सौभाग्यवती स्त्री तथा ब्राह्मणबाट मङ्गलगीत एवं स्वस्तीवाचन गराउँदै बाजा, नाचगान गर्दै पूर्व-उत्तर दिशाको बिचमा जानू । त्यहाँबाट उत्तम माटो लिएर फर्किनू र कुनै माटाको भाँडामा वा बाँसको भाँडामा भर्नू । त्यसपछि माङ्गलिक बिजलाई त्यसमा रोप्नू र पानी छर्केर फूल सजाउनू ।



इति श्रीनारदीयसंहितायां मङ्गलाङ्कुरार्पणं नाम त्रयोविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत मङ्गल विरुवा रोप्ने वा सार्ने सम्बन्धी कुरा बताइएको तेइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुर्विंशोऽध्यायः
## उपनयनाध्यायः

### व्रतबन्ध गर्ने उमेर

**आधानादष्टमे वर्षे जन्मतो वाग्रजन्मनाम् ।**
**राज्ञामेकादशे मौञ्जीबन्धनं द्वादशे विशाम्॥१॥**

भावार्थः- जन्मबाट वा गर्भाधानबाट ब्राह्मणको आठौं वर्षमा, क्षत्रियको एघारौं वर्षमा र वैश्यको बाह्रौं वर्षमा व्रतबन्ध गर्नु पर्दछ ।

**आजन्मात् पञ्चमे वर्षे वेदशास्त्रविशारदः ।**
**उपनीतो यतः श्रीमान् कार्यं तत्रोपनायनम्॥२॥**

भावार्थः- जन्मेको पाँचौं वर्षमा उपनयन संस्कार भए श्रीमान् तथा वेदविज्ञ हुन्छ त्यसैले यस्तो इच्छा राखी पाँचौं वर्षमा उपनयन गराउनू ।



**बालस्य बलहीनोऽपि शान्त्या जीवो बलप्रदः ।**
**यथोक्तवत्सरे कार्यमनुक्ते नोपनायनम्॥३॥**

भावार्थः- बृहस्पति दुर्बल भई नजुर्ने भएमा शान्ति गराएर भएपनि बताइएका वर्षमा नै उपनयन संस्कार गर्नुपर्दछ ।

### व्रतबन्धको साइत

**दृश्यमाने गुरौशुक्रे दिनेशे चोत्तरायणे ।**
**वेदानामधिपा जीवशुक्रभौमबुधाः क्रमात्॥४॥**

भावार्थः- बृहस्पति र शुक्रको उदयकाल र उत्तरायणमा उपनयन संस्कार गर्नू । ऋग्, यजु, साम र अथर्व वेदका क्रमैले गुरु, शुक्र, मङ्गल र बुध मालिक हुन् ।

**शरद्ग्रीष्म वसन्तेषु व्युत्क्रमात्तु द्विजन्मनाम् ।**

**मुख्यं साधारणन्तेषां तपो मासादि पञ्चषु ॥५॥**

भावार्थः- मुख्यतः शरद ऋतुमा वैश्यको, ग्रीष्म ऋतुमा क्षत्रियको र वसन्त ऋतुमा ब्राह्मणको उपनयन गर्नू । सामान्यतः द्विजको माघ, फागुन, चैत्र, वैशाख र जेठ महिनामा उपनयन गर्नू ।

**स्वकुलाचारधर्मज्ञो माघमासे तु फाल्गुने ।**
**विधिज्ञो ह्यर्थवाँश्चैत्रे वेदवेदाङ्ग पारगः ॥६॥**

भावार्थः- आफ्नो कुलाचार जान्नेले माघमा, विधि जान्ने र धनीले फागुनमा तथा वेदाङ्ग पारङ्गत हुन चाहनेले चैतमा उपनयन संस्कार गराउँदछन् ।

**बैशाखेधनवान्वेदशास्त्रविद्याविशारदः ।**
**उपनीतो बलाढ्यश्च ज्येष्ठे विधिविदां वरः ॥७॥**

भावार्थः- वैशाखमा उपनयन गराउनाले धनी, वेद र विद्यामा निपुण हुन्छ तथा जेठमा गरिने उपनयनले विविवेत्ता तथा बलशाली हुन्छ ।



**शुक्लपक्षे द्वितीया च तृतीया पञ्चमी तथा ।**
**त्रयोदशी च दशमी सप्तमी व्रतबन्धने ॥८॥**

भावार्थः- व्रतबन्धमा शुक्लपक्षका द्वितीया, तृतीया, पञ्चमी, त्रयोदशी, दशमी र सप्तमी तिथि ...।

**श्रेष्ठात्वेकादशी षष्ठी द्वादश्येतास्तु मध्यमाः ।**
**एका चतुर्थी सन्त्याज्या कृष्णपक्षे च मध्यमाः ॥९॥**

भावार्थः- ...उत्तम तथा षष्ठी, एकादशी र द्वादशी तिथि मध्यम हुन्छन् । कृष्णपक्षमा चतुर्थीलाई छोडी पञ्चमीसम्मका सबै तिथिहरु मध्यम... ।

**आपञ्चम्यास्तु तिथयः पराः स्युरतिनिन्दिता ।**
**श्रेष्ठान्यर्कत्रयान्त्येज्य रुद्रादित्युत्तराणि च ॥१०॥**
**विष्णुत्रयाश्वमित्राज योनिभान्युपनायने ।**
**जन्मभाद्दशमं कर्मैसङ्घातर्क्षं च षोडशम् ॥११॥**

**अष्टादशं सामुदायं त्रयोविशं विनाशनम् ।**
**मानसं पञ्चविंशर्क्षे नाचरेच्छुभमेवतु ॥१२॥**

भावार्थः- ...र अन्य अति निन्दित हुन्छन् । हस्ता, चित्रा, स्वाती, रेवती, पुष्य, आर्द्रा, पुनर्वसु, तीनै उत्तरा, श्रवण, धनिष्ठा, शतभिषा, अश्विनी, अनुराधा र पूर्वभाद्रपदा नक्षत्र उपनयन संस्कारमा शुभदायक भनिएको छ । जन्म नक्षत्रबाट दशौं र सोह्रौं नक्षत्र कर्मसङ्घात नक्षत्र, अठारौं सामुदायक, तेइसौं विनाशन र पच्चीसौं नक्षत्र मानस संज्ञक हुन् । यिनमा उपनयन गर्न निषेध छ ।

**आचार्यसौम्यकाव्यानां वाराः शस्ताः शशीनयोः ।**
**बारौतौ मध्यफलदावितरौ निन्दितौ व्रते ॥१३॥**

भावार्थः- बिही, बुध र शुक्रबार शुभफलदायक; सोम र आइतबार मध्यम फलदायक तथा अरु बार उपनयन संस्कारका लागि निन्दित बार हुन् ।

**दिनको कुन समय के गर्ने ?**



**त्रिधाविभज्य दिवसं तत्रादौ कर्मदैविकम् ।**
**द्वितीये मानुषं कार्यं तृतीयांशे च पैतृकम् ॥१४॥**

भावार्थः- दिनमानको तृतीयांश भागमध्ये पहिलो अंश देवकर्म, दोश्रो अंश मानवीय कर्म र तेश्रो अंश पितृ कर्मका लागि उत्तम हुन्छ ।

**व्रतबन्धको साइत**

**स्वनीचगे तदंशेवा स्वारिभे वा तदंशके ।**
**गुरौ भृगौ च शाखेशे कुलशीलविवर्जित ॥१५॥**
**स्वाधिशत्रुगृहस्थे वा तदंशस्थेऽथवा ब्रती ।**
**शाखेशे वा गुरौ शुक्रे महाघातककृद्भवेत् ॥१६॥**

भावार्थः- उपनयन संस्कारका समयमा बृहस्पति, शुक्र वा शाखेश यदि आफ्नो नीचराशिमा नीचराशिको नवांशमा; आफ्नो शत्रुराशिमा या शत्रुराशिको नवांशमा भए उपनित बालक

कुलशीलले रहित हुन्छ । यदि बृहस्पति, शुक्र वा शाखेश आफ्नो अधिशत्रुको घर वा नवांशमा भए त उपनीत बालक महाघाती हुन्छ ।

**स्वोच्चसंस्थे तदंशे वा स्वराशौ राशिगे गणे ।**
**शाखेशे वा गुरौ शुक्रे केन्द्रगे वा त्रिकोणगे ॥१७॥**

भावार्थः- आफ्नो उच्चराशिमा वा उच्चराशिको नवांशमा रहेको, आफ्नो राशिमा तथा राशिनवांशमा स्थित शाखेश हुँदा वा गुरु-शुक्र केन्द्र वा त्रिकोणमा हुँदा उपनयन शुभ हुन्छ ।

**अतीववलवाँश्चैव वेदवेदाङ्गपारगः ।**
**परमोच्चगते जीवे शाखेशे वाथवा सिते ॥१८॥**
**व्रती शिशुर्धनाड्यश्च वेदशास्त्रविशारदः ।**
**मित्रराशिगतेजीवे तदंशे वा स्वराशिगे ॥१९॥**

भावार्थः- श्लोक १७ अनुसार उपनयन भए उ अति नै बलशाली र वेदवेदाङ्गको ज्ञाता हुन्छ । शाखेश वा गुरु वा शुक्र परम उच्च राशिमा हुँदा व्रती बालक धनी र वेदविज्ञ हुन्छ । गुरु मित्र राशिमा वा मित्र नवांशमा वा स्वराशिमा भए तथा... ।



**शुक्रे वाचार्यसंयुक्ते तदा तत्र व्रतीशिशुः ।**
**स्व स्वमित्रगृहस्थेवा तस्योच्चस्थे तदंशके ॥२०॥**
**गुरौ भृगौ वा शाखेशे विद्याधनसमन्वितः ।**

भावार्थः- शुक्र र गुरु एउटै राशिमा भए उपनीत बालक विद्या धनले युक्त हुन्छ । आआफ्नो मित्रघरमा रहेको वा मित्रराशिको उच्च वा नवांशमा यदि गुरुशुक्र एवं शाखेश भए त्यो बालक विद्याधनले पूर्ण हुन्छ ।

**शाखाधिपतिवारश्च शाखाधिपवलं शिशो ॥**
**शाखाधिपतिलग्नश्च दुर्लभं त्रितयं ब्रते ॥२१॥**

भावार्थः- शाखाधिपतिको दिन, बालकका लागि शाखाधिपतिको बल तथा शाखाधिपतिको लग्न : यी तिनै कुरा मिल्नु व्रतबन्धमा दुर्लभ हुन्छ ।

**तस्माच्छुभांशगे चन्द्रे व्रती विद्याविशारदः ।**
**पापेष्टगे स्वांशगे वा दरिद्रो नित्यदुःखितः ॥२२॥**

भावार्थः- त्यसैले, चन्द्रमा शुभ राशिको नवांशमा हुँदा वटुक विद्यामा निपुण हुन्छ । यदि पापग्रह अष्टमस्थानमा भए वा आफ्नो राशिको नवांशमा भए वटुक दरिद्र हुन्छ र सधैं दुःखी हुन्छ ।

**श्रवणादिति नक्षत्रे कर्क्यंशस्थे निशाकरे ।**
**सदाब्रती वेदशास्त्रधनधान्यसमृद्धिमान् ॥२३॥**

भावार्थः- श्रवण वा पुष्य नक्षत्र त्यसमा पनि कर्कट राशिको चन्द्रमा हुँदा उपनीत बालक वेदशास्त्र र धनधान्यले समृद्ध हुन्छ ।

**शुभलग्ने शुभांशे च नैधने शुद्धिसंयुते ।**
**लग्नेत्वनैधने सौम्यैः संयुक्ते वा निरीक्षते ॥२४॥**

भावार्थः- शुभलग्न तथा नवांश, आठौं स्थान शुद्ध, आठौं स्थानमा शुभग्रहको योग वा शुभग्रहको दृष्टि,...।



**दृष्टैर्जीवार्कचन्द्राद्यैः पञ्चभिर्वलिभिर्ग्रहै ।**
**स्थानादिवलसम्पूर्णैश्चतुर्भिर्वा समन्वितै ॥२५॥**

भावार्थः- गुरु-सूर्य-चन्द्र आदि ५ शुभग्रहले हेरेको, स्थानादिबलले पूर्ण वा चार वटा शुभग्रहले युक्त वा दृष्ट, ।

**ईश्विते वा चैकविंशन्महादोष विवर्जिते ।**
**राशयः सकलाः श्रेष्ठा शुभ ग्रहयुतेक्षिताः ॥२६॥**

भावार्थः- २१ वटा महादोष नभएको अवस्था तथा सबै राशिलाई शुभग्रहले युक्त वा दृष्ट हुँदा शुभ फलदायी हुन्छ ।

**शुभा नवांशाश्च तथा गृह्यास्ते शुभराशयः ।**

**पापग्रहस्य लग्नांश शुभेक्षितयुतोऽपि वा ॥२७॥**

भावार्थः- शुभराशिको नवांश पनि शुभ हुन्छ । त्यस्तै पापग्रहको नवांश पनि शुभग्रहले दृष्ट वा युक्त छ भने शुभ हुन्छ ।

**तस्माद्गोमिथुनान्त्याश्च तुलाकन्यांशकाः शुभाः ।**
**एवं विधे लग्नगते नवांशे व्रतमीरितम् ॥२८॥**

भावार्थः- त्यसैले वृष, मिथुन, मीन, तुला र कन्याको नवांश शुभ हुन्छ । यसरी शुभ लग्न वा शुभलग्नको नवांशमा उपनयन संस्कार गर्नु पर्दछ ।

**त्रिषडायगतैः पापैः षडष्टान्त्यविवर्जितैः ।**
**शुभैः षष्टाष्टलग्नान्त्य वर्जितेन हिमांशुना ॥२९॥**

भावार्थः- पापग्रह ३।६।११ मा र शुभग्रह ६।८।१२ मा नहुन् तथा चन्द्रमा १।६।८।१२ मा नहोस् अनि उपनयन शुभ हुन्छ ।



**स्वोच्चसंस्थोपि शीतांशुर्व्रातिनो यदिलग्नगः ।**
**तं करोति शिशुं निःस्वं सततं क्षयारोगिणम् ॥३०॥**

भावार्थः- आफ्नो उच्चराशिमा भए पनि चन्द्रमा यदि उपनयन गरिने बालकको लग्नमा छ भने त्यो बालक निरन्तर दरिद्र र क्षयरोगी हुन्छ ।

**स्फूर्जितं केन्द्रगेभानौ व्रतिनो वंशनाशनम् ।**
**कूजितं केन्द्रगे भौमे शिष्याचार्यविनाशनम् ॥३१॥**

भावार्थः- उपनयन कालमा केन्द्रमा सूर्य छ र बादल गर्जेको सुनियो भने बटुकको वंश नाश हुन्छ । केन्द्रमा मङ्गल छ र व्रतबन्ध गर्दा चराको कलरव सुनिए शिष्य र आचार्यको नाश हुन्छ ।

**करोति रुदितं केन्द्रसंस्थे मन्देऽतुलान् गदान् ।**
**लग्नात्केन्द्रगते राहौ रन्ध्रे मातृविनाशनम् ॥३२॥**
**उपकेन्द्रगते केतौ तातवित्तविनाशनम् ।**
**पञ्चदोषैर्युतं लग्नं शुभदं नोपनायने ॥३३॥**

भावार्थः- केन्द्रमा शनि भई उपनयनकालमा रोएको सुनिए रोगप्रद हुन्छ । केन्द्रमा राहु वा अष्टम राहु भए मातृ कष्टकारक हुन्छ । उग्रकेन्द्रमा केतु भए पितालाई कष्टदिने र धनको हानी गर्ने हुन्छ । त्यसैले पाँच दोषयुक्त लग्नमा उपनयन गर्नु शुभ हुँदैन ।

**विना वसन्तऋतुना कृष्णपक्षे गलग्रहे ।**
**अनध्यायोपनीतश्च पुनः संस्कारमर्हति ॥३४॥**

भावार्थः- वसन्त बाहेकका ऋतुका कृष्णपक्षमा, गलग्रह योगमा र बेदपढ्न नहुने समयमा उपनयन संस्कार गरिए पुनः संस्कार गर्नुपर्दछ ।

**गलग्रह योग**

**त्रयोपश्यादि चत्वारि सप्तम्यादि दिनत्रयम् ।**
**चतुर्थी चैकतः प्रोक्ता ह्यष्टावेते गलग्रहाः ॥३५॥**

भावार्थः- त्रयोदशी, चतुर्दशी, औंसी, परेवा, सप्तमी, अष्टमी, नवमी र चतुर्थी : यी ८ तिथि गलग्रह योग संज्ञक तिथि हुन् ।



इति श्रीनारदीयसंहितायां उपनयनाध्यायश्चतुर्विंशतितमः

✷

नारदीय संहिता अन्तर्गत उपनयन सम्बन्धी कुरा बताइएको चौबिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चविंशोऽध्यायः

### क्षुरिका बन्धनाध्यायः

क्षत्रीयको छुरी बाँध्ने साइत

**छुरिकाबन्धनं वक्ष्ये नृपाणां प्राक्करग्रहात् ।**
**विवाहोक्तेषु मासेषु शुक्लपक्षेप्यनस्तगे ॥१॥**
**शुक्रेजीवे च भूपुत्रे चन्द्रतारा बलान्विते ।**
**मौञ्जीबन्धर्क्षातिथिषु कुजवर्जितवासरे ॥२॥**

भावार्थः- विवाहभन्दा पहिले क्षत्रियको छुरिकाबन्धन मुहूर्त बताईंदैछ । विवाहका महिनामा शुक्लपक्षमा, गुरु-शुक्र-मङ्गलको उदयकालमा, चन्द्रतारा बलवान हुँदा उपनयन कालमा बताइएका नक्षत्र र तिथिमा, मङ्गलबार बाहेकका बारमा,... ।

**तेषां लग्नोदये कर्तुरष्टमोदय वर्जिते ।**
**शुद्धेऽष्टमे तिथौलग्नात्षडष्टान्त्यविवर्जिते ॥ ३॥**



भावार्थः- यी शुद्ध लग्नमा, कर्ताको जन्मराशिबाट अष्टमस्थान ग्रहरहित हुँदा, वर्तमान लग्नबाट आठौं स्थान शुद्ध रहँदा अर्थात चन्द्रमा नहुँदा, लग्नबाट ६।८।१२ मा चन्द्रमा हुँदा, ...।

**धनत्रिकोणकेन्द्रस्थैः शुभैस्त्र्यायारिगैः परैः ।**
**छुरिकाबन्धनं कार्यमर्चयित्वामरानपितृन् ॥४॥**

भावार्थः- ...शुभग्रह २।५।९।१।४।७।१० स्थानमा तथा पापग्रह ३।६।११ स्थानमा भएका अवस्थामा देवता र पितृलाई विधिपूर्वक पूजा गरी छुरिकाबन्धन गर्नु पर्दछ ।

**अर्चयेत्क्षुरिकां सम्यक् देवतानाञ्च सन्निधौ ।**
**तत्तं सुलग्ने बध्नीयात् कटां लक्षणसंयुताम् ॥५॥**

भावार्थः- देवताको पूजा गरे पछि देवताका सामु बेग्लै छुरीको पूजा गरी शुभ लग्नमा लक्षणको छुरी कमरमा बाँध्नु पर्दछ ।

### क्षत्रीयको साइतमा बाँध्ने छुरी बनाउने विधि

**तस्यास्तुलक्षणं वक्ष्ये यदुक्तं ब्रह्मणा पुरा ।**
**सम्मितं छुरिकायामविस्तारेणैवताडयेत् ॥६॥**

भावार्थः- जस्तो पहिले ब्रह्माले बताएका छन् त्यो लक्षण बताउँदछु । आफ्नो इच्छा अनुसार फलाम पिटेर लामो-फराकिलो बनाउनू ।

**भाजितं गजसङ्ख्यैश्च अङ्गुलीन्परिकल्पयेत् ।**
**आयामार्द्धाग्रविस्तार प्रमाणेनैव छेदयेत् ॥७॥**

भावार्थः- फलाममलाई पिटेर चाहेजति लम्बाई र चौडाईमा चिह्न लगाउनू र नापेर आठ भाग बनाउनू । लम्बाईको आधा लामो तथा चौडाईको आधा भाग बराबर टुप्पोको चिनो लगाई काट्नू ।

**तच्छेदखण्डान्यायाः स्युर्ध्वजाये रिपुनाशनम् ।**
**धूम्राये मरणं सिंहे जयश्चाश्वे निरोगिता ॥८॥**
**धनलाभो वृषेत्यन्तं दुःखी भवति गर्दभे ।**
**गजायेत्यन्तसम्प्रीतिर्ध्वांक्षेवित्तविनाशनम् ॥९॥**

भावार्थः- फेरी त्यो काटेको फलामको भागबाट पिण्ड साधन गर्नू । यो ८ प्रकारको आयको फल क्रमैले यस्तो जान्नू । ध्वज आयमा शत्रुको नाश, धूम्र आयमा मरण, सिंह आयमा विजय, अश्व आयमा निरोगिता, बृष आयमा धनलाभ, गर्दभ आयमा अत्यन्त दुःख, गज आयमा अत्यन्त प्रीति र ध्वांक्ष आयमा विनाश हुन्छ ।

### क्षत्रीयको साइतमा बाँध्ने छुरीको नापो अनुसारको फल

**खड्गपुत्रिकयोर्मानं गणयेत्स्वाङ्गुलेन तु ।**
**मानाङ्गुले तु पर्यायानेकादशमितांस्त्यजेत् ॥१०॥**
**शेषाणामङ्गुलानाञ्च फलानि स्युर्यथाक्रमात् ।**
**पुत्रलाभः शत्रुवृद्धिः स्त्रीलाभो गमनं शुभम् ॥११॥**
**अर्थहानिश्चार्थवृद्धिः प्रीतिः सिद्धिर्जयःस्तुतिः ।**
**धूमगर्द्धभयोर्नैव व्रणं श्रेयोन्त्यभागकम् ॥१२॥**

भावार्थः- तरबार वा छुरीलाई आफ्नो औंलाले नापी ११ ले भाग गर्नू । १ शेष भए पुत्रलाभ, २ भए शत्रुवृद्धि, ३ भए स्त्रीलाभ, ४ भए यात्राशुख, ५ भए शुभ, ६ भए अर्थहानी, ७ भए अर्थवृद्धि, ८ भए प्रीति, ९ भए सिद्धि, १० भए जय र ११ भए स्तुति हुन्छ । यसमा धूम अधम, गर्द्धभ व्रण र अन्त्य भागमा कल्याण हुन्छ ।

इति श्रीनारदीयसंहितायां क्षुरिका बन्धनाध्यायः पञ्चविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत छुरी बाँध्ने सम्बन्धी कुरा बताइएको पच्चिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# षड्विंशोऽध्यायः

## समावर्त्तनाध्यायः

### केशान्त संस्कार गर्ने साइत

**अथोत्तरायणे शुक्रजीवयोदृश्यमानयोः ।**
**द्विजातीनां गुरोर्गेहान्निवृत्तानां यतात्मनाम् ॥१॥**

भावार्थः- गुरुकुलमा पढिरहेका द्विजले गुरु र शुक्रको उदयकालमा उत्तरायण भएपछि समावर्तन संस्कार गर्नु उत्तम हुन्छ ।

**चित्रोत्तरादितीज्यान्त्य हरिमैत्रेन्दुभात्रिषु ।**
**भेष्वर्केन्द्वीज्य शुक्रज्ञवारलग्नांशकेषु च ॥२॥**

भावार्थः- चित्रा, तीनै उत्तरा, पुनर्वसु, पुष्य, रेवती, श्रवण, अनुराधा, मृगशिरा र आर्द्रा नक्षत्रमा आइत, सोम, बिही, शुक्र र बुधबारमा तथा यिनको राशि-नवांशमा पनि समावर्तन उत्तम हुन्छ ।



**अथवा वस्त्र नक्षत्र वार लग्नांशकेष्वपि ।**
**पैतिपत्सर्वरिक्तात्मा अष्टमी च दिनत्रयम् ॥**
**हित्वान्य दिवसे कार्यं समावर्तन मण्डनम् ॥३॥**

भावार्थः- अथवा वस्त्रधारण नक्षत्र-दिन र लग्न नवांशमा समावर्तन गर्नू । परेवा, सङ्क्रान्ति, रिक्तातिथि, औंसी, अष्टमी, नवमी र दशमीलाई छोडी समावर्तन र सजावटको काम गर्नु पर्दछ ।

इति श्रीनारदीयसंहितायां समावर्त्तनाध्यायः षड्विंशतितमः

✷

नारदीय संहिता अन्तर्गत समावर्तन सम्बन्धी कुरा बताइएको छब्बिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## सप्तविंशोऽध्यायः

### विवाह प्रश्नलग्नाध्यायः

विवाह तत्कालीन लग्नको अधिनमा हुन्छ

**सर्वाश्रमाणामाश्रेयं गृहस्थाश्रममुत्तमम् ।**
**यतस्तदपि योषाणं शीलवत्यां स्थितस्ततः ॥१॥**
**तस्यास्तच्छीललब्धिस्तु सुलग्नवशतः खलु ।**
**पितामहोक्तां सम्वीक्ष्य लग्नशुद्धिं प्रवच्म्यहम् ॥२॥**

भावार्थः- सबै आश्रममध्येको उत्तम आश्रम गृहस्थाश्रम नै सबै आश्रमको आधार हो ता पनि सफल गृहस्थ जीवन शिलवती गृहिणीमा भर पर्दछ । गृहिणी शिलवती हुनमा राम्रो लग्नले प्रभाव पारेको हुन्छ । त्यसैले म ब्रह्माले बताएको वैवाहिक लग्नशुद्धिका बारेमा बताउँदछु ।

ज्योतिषलाई गएर प्रश्न सोध्ने विधि



**पुण्येऽह्नि लक्षणोपेतं सुखासीनं सुचेतसम् ।**
**प्रणम्य देववत्पृच्छेदैवज्ञं भक्तिपूर्वकम् ॥३॥**

भावार्थः- शुभलक्षण भएको शुभ दिनमा स्वस्थ चित्तले आनन्दसँग बसिरहेका ज्योतिषीलाई देवता समान मानी नमस्कार गर्दै भक्तिपूर्वक (विवाह सम्बन्धी) प्रश्न गर्नू ।

**ताम्बूलफलपुष्पाद्यैः पूर्णाञ्जलिरूपाग्रतः ।**
**कर्तानिवेद्य दम्पत्योर्जन्मराशिं स जन्मभम् ॥४॥**

भावार्थः- प्रश्न सोध्नेले पहिले पान, फलफूल र पैसा राखी ज्योतिषीलाई देओस् । त्यसपछि केटा र केटीको जन्मराशि, जन्मनक्षत्र आदि जुराउन चिना देओस् वा यी कुरा बताओस् ।

ज्योतिषबाट प्रश्नकालको स्थिति हेरी गरिने भविष्यवाणि

**पृच्छकस्य भवेलग्नादिन्दुः षष्ठाष्टगोऽपि वा ।**
**दम्पत्योर्मरणं वाच्यमष्टमर्क्षान्तरे यदि ॥५॥**

भावार्थः- प्रश्नकर्ताको प्रश्नलग्नबाट छैटौं वा आठौं स्थानमा चन्द्रमा भएमा अथवा प्रश्नकालीन नक्षात्रबाट आठौं नक्षात्रमा चन्द्रमा भए विवाह गर्न आँटिएका स्त्रीपुरुष दुवैको मृत्यु हुन्छ भनी बताउनू ।

चन्द्र-मङ्गलको स्थिति र भविष्यवाणि

**यदिलग्नगतश्चन्द्रस्तस्मात्सप्तमगः कूजः ।**
**विज्ञेयं भर्तृमरर्णत्वष्टमेब्दे न संशयः ॥६॥**

भावार्थः- प्रश्नलग्नमा चन्द्रमा छ र सातौं घरमा मङ्गल छ भने आठौं वर्षमा पतिको निःसन्देह मृत्यु हुन्छ भनी सम्झिनू ।

पापग्रहको स्थिति र भविष्यवाणि

**लग्नात्पञ्चमगः पापः शत्रुदृष्टः स्वनीचगः ।**
**मृतपुत्रा तु सा कन्या कुलटा न तु संशयः ॥७॥**



भावार्थः- लग्नबाट पाँचौ घरमा पापग्रह शत्रुग्रहबाट दृष्ट आफ्नो नीच राशिका भए त्यो स्त्री मृतवत्सा (जन्मेका सन्तान सानैमा मर्ने) र व्यभिचारिणी हुन्छे ।

**तृतीय पञ्चसप्तायकर्मश्च निशाकरः ।**
**लग्नात्करोति सम्बन्धं दम्पत्योर्गुरुवीक्षितः ॥८॥**

भावार्थः- ३।५।७।११ तथा १० औं स्थानमा चन्द्रमा भए तथा गुरुले देख्ने भए विवाह सम्बन्ध उत्तम हुन्छ ।

वृष-तुला र कर्कटको स्थिति र भविष्यवाणि

**तुलागो कर्कटे लग्ने संस्थाः शुक्रेन्दु संयुताः ।**
**वीक्षिताःस्त्रीग्रहा नृणां कन्या लाभो भवेत्तदा ॥९॥**

भावार्थः- तुला, कर्कट वा वृष लग्नमा स्त्रीग्रह बसेको र शुक्र तथा चन्द्रमाले युक्त वा दृष्ट भए मानिसलाई कन्यालाभ हुन्छ ।

चन्द्र-शुक्रको स्थिति र भविष्यवाणि

**शुक्रेन्दू युग्मराशिस्थौ युग्मांशकगतौ तदा ।**
**बलिनौ वीक्षितौ लग्नं कन्यालाभो भवेत्तदा ॥१०॥**

भावार्थः- प्रश्न समयमा शुक्र र चन्द्रमा जोर राशिमा वा जोर राशिको नवमांशमा भई पूर्ण बलियो भएर लग्नलाई हेर्दछन् भने कन्यालाभ हुन्छ ।

**स्त्रीनिवासो युग्म लग्नं यदि चेत्स्यात्समागमः ।**
**वीक्षितश्चन्द्र शुक्राभ्यां कन्या लाभो भवेत्तदा ॥११॥**

भावार्थः- सातौं घरमा जोर राशि छ र त्यसमा चन्द्र-शुक्र बसेको वा यिनले हेरेको छ भने कन्यालाभ हुन्छ ।

**अयुग्म राशिगौ चेत्तौ शुक्रेन्दू बलिनौ तथा ।**
**पश्यतो लग्नमेतौ चेद्वरलाभो भवेत्तदा ॥१२॥**



भावार्थः- यदि शुक्र र चन्द्र विषम राशिमा छन् र बलवान् छन् तथा लग्नलाई हेर्दछन् भने कन्यालाई बरलाभ हुन्छ ।

**एवं स्त्रीणां भर्तृलब्धिः पुंग्रहैरवलोकिते ।**
**कृष्णपक्षे प्रश्नलग्नाद्युग्म राशौ शशी यदि ॥**
**पापदृष्टेऽथ वा रन्ध्रे न सम्बन्धो भवेत्तदा ॥१३॥**

भावार्थः- यसरी पुरुष ग्रहले हेर्दा स्त्रीलाई पतिलाभ हुन्छ भनी बताउनु पर्दछ । कृष्णपक्षमा प्रश्नलग्नबाट जोर राशिमा चन्द्रमा भए वा आठौं स्थानमा भए वा पापग्रहले हेरेको भए सम्बन्ध कायम (राम्रो) हुँदैन ।

साईत र भविष्यवाणि

**पुण्यैर्निमित्त शकुनै प्रश्नकाले तु मङ्गलम् ।**
**दम्पत्योरशुभैरेतैरशुभं सर्वतो भवेत् ॥१४॥**

भावार्थः- प्रश्नकालमा शुभ साइत भए दम्पत्तिको कार्यसिद्धि र अशुभ साइत भए कार्यहानी हुन्छ ।

इति श्रीनारदीयसंहितायां प्रश्नलग्नाध्यायः सप्तविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत विवाहपूर्व ज्योतिषसँग लिइने परामर्श सम्बन्धी कुरा बताइएको सत्ताइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## अष्टाविंशोऽध्यायः

### कन्यावरणाध्यायः

कन्या-वरणको साइत

**पञ्चाङ्गशुद्धिदिवसे चन्द्रतारावलान्विते ।**
**विवाहभस्योदये वा कन्यावरणमिष्यते ॥१॥**

भावार्थः- चन्द्रतारा जब बलियो हुन्छ त्यस्तो पञ्चाङ्ग शुद्धिका दिन वा विवाहमा बताइएको नक्षत्र-लग्नमा कन्याको वरण गर्नु उत्तम हुन्छ ।

कन्या-वरणको विधि

**भूषणैः पुष्पताम्बूलैः फलगन्धाक्षतादिभिः ।**
**(शुभ्रा)शुक्लाम्बरैर्गीत वाद्यैर्विप्राशिर्वचनैः सह ॥२॥**
**कारयेत्कन्यकागेहे वरः प्रणव पूर्वकम् ।**
**तदा कुर्यात् पिता तस्याः प्रदानं प्रीतिपूर्वकम् ॥३॥**

भावार्थः- आभूषण, फूल, पान, फल, चन्दन, अक्षता आदिका साथ सुन्दर वस्त्र आदिले सिँगारेर नृत्य-वाद्यका साथ स्वस्तिवाचन गर्दै कन्याका घर गई (केटाका बाबुले) प्रेमपूर्वक कन्यालाई (वधूका रूपमा) वरण गर्नू र त्यसपछि कन्याका पिताले प्रेमपूर्वक कन्यादान गर्नू ।

**कुलशील वयोरूप वित्तविद्यायुताय च ।**
**वराय रूप सम्पन्ना कन्यां दद्यात्यवीयसीम् ॥४॥**

भावार्थः- कुल, शील, उमेर, रूप, धन र विद्याले युक्त वरका लागि उमेर पुगेकी रूप सम्पन्न कन्याको दान गर्नू ।

दुष्ट योगको शान्ति

**सम्पूज्य प्रार्थयित्वा तां शचीं देवीं गुणाश्रयाम् ।**
**त्रैलोक्यसुन्दरीं दिव्यां गन्धमाल्याम्बरावृताम् ॥५॥**
**सर्वलक्षणसंयुक्तां सर्वाभरणभूषिताम् ।**

**अनर्घ्यं मणिमालाभिर्भासयन्तीं दिगन्तराम् ॥६॥**
**विलासिनीसहस्राद्यैः सेव्यमानामहर्निशम् ।**
**एवं विधां कुमारीं तां पूजान्ते प्रार्थयेदिति ॥७॥**
**देवीन्द्राणि नमस्तुभ्यं देवेन्द्र प्रियभाषिणी ।**
**विवाहं भाग्यमारोग्यं पुत्रलाभञ्च देहि मे ॥८॥**

भावार्थः- गुणको आश्रयका लागि इन्द्राणी देवीको पूजा गरी प्रार्थना गर्नू । त्रैलोक्य सुन्दरी, दिव्या, गन्ध-माला-वस्त्र आदिले सजिएकी, सबै लक्षण भएकी, सबै आभूषणले सुशोभिता, बहुमूल्य मालाले दिशाको अन्तसम्म प्रकाशित पार्ने भएकी तथा स्वर्गका अप्सराले पूजित तथा रातदिन बन्दनीय कुमारीको पूजा गरी अन्तमा प्रार्थना गर्नू । हे देवी ! हे इन्द्राणी ! हे देवेन्द्र प्रिय भाषिणी ! तिमिलाई नमस्कार छ । हे देवी ! हजुर मलाई विवाह, सौभाग्य, आरोग्य तथा पुत्रलाभ गराउनुहोस् ।

इति श्रीनारदीयसंहितायां कन्यावरणाध्यायोऽष्टाविंशतितमः

✷

नारदीय संहिता अन्तर्गत वरण सम्बन्धी कुरा बताइएको अठ्ठाइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# एकोनत्रिंशत्तमोऽध्यायः

## विवाहाध्याय

### विवाह गर्न उपयुक्त वर्ष

**युग्मेब्दे जन्मतः स्त्रीणां प्रीतिदं पाणिपीडनम् ।**
**एतत्पुंसामयुग्मेऽब्दे व्यत्यये नाशनन्तयोः ॥१॥**

भावार्थः- जन्मबाट जोर वर्षमा केटीको र बिजोर वर्षमा पुरुषको विवाह शुभ हुन्छ । यसको उल्टो भए दुवैको नाश हुन्छ ।

### विवाह गर्न नहुने महिना

**माघफाल्गुनवैशाखज्येष्ठमासाः शुभप्रदाः ।**
**मध्यमः कार्तिको मार्गशीर्षो वै निन्दिताः परे ॥२॥**

भावार्थः- विवाहमा माघ, फागुन, वैशाख र जेठ महिना शुभप्रद कार्तिक र मार्ग मध्यम तथा बाँकी महिना अधम फल दिने हुन्छन् ।

### विवाह गर्न नहुने नक्षत्र

**न कदाचिद्दशर्क्षेषु भानोरार्द्राप्रवेशनात् ।**
**विवाहं देवतानाञ्च प्रतिष्ठाञ्चोपनायनम् ॥३॥**

भावार्थः- सूर्य आर्द्रा नक्षत्रमा प्रवेश गरेदेखि त्यसपछिका १० नक्षात्र सम्म विवाह, देवप्रतिष्ठा तथा उपनयन कहिल्यै नगर्नू ।

### शुक्र र बृहस्पति ग्रहको स्थिति र मङ्गलकार्य

**नास्तङ्गते सितेजीवे न तयोर्बालवृद्धयोः ।**
**न गुरौ सिंहराशिस्थे सिंहांशकगतेऽपि वा ॥४॥**

भावार्थः- शुक्र र बृहस्पति अस्त र यिनको बाल वा वृद्ध अवस्थामा तथा बृहस्पति सिंह राशिमा वा सिंहको नवांशमा हुँदा विवाहादि मङ्गल कार्य नगर्नू ।

**पश्चात् प्रागुदितः शुक्रः पञ्च सप्तदिनं शिशुः ।**
**अस्तकाले तु वृद्धत्वं तद्वदेव गुरोरपि ॥५॥**

भावार्थः- शुक्र उदाउँदा बालदोष र अस्ताउँदा वृद्धदोष हुन्छ । पश्चिममा उदाउँदा सात दिनसम्म तथा पूर्वमा उदाउँदा पाँच दिनसम्म वालदोष रहन्छ । यसैगरी पश्चिममा पाँच दिनसम्म र पूर्वमा सात दिनसम्म वृद्धदोष रहन्छ । यस्तै बृहस्पतिका बारेमा पनि जान्नू ।

विवाह गर्न नहुने तिथि

**अप्रवुद्धो हृषिकेशो यावत्तावन्न मङ्गलम् ।**
**उत्सवे वासुदेवस्य दिवसे नान्यमङ्गलम् ॥६॥**

भावार्थः- हरिशयन दोष रहेसम्म (हरिशयनी एकादशी) मङ्गल कार्य गर्नु हुँदैन । हरिबोधिनी एकादशीमा पनि मङ्गल कार्य नगर्नू ।

विवाह गर्दा केटाकेटीको जन्ममास, जन्मनक्षत्र र जन्मतिथि बारना

**न जन्ममासेजन्मर्क्षे न जन्मदिवसेऽपि च ।**
**नाद्यगर्भसुतस्याऽथ दुहितुर्वा करग्रहम् ॥७॥**

भावार्थः- पहिलो गर्भबाट जन्मने केटाकेटीको विवाह तिनको जन्म महिना, जन्मनक्षत्र र जन्मदिनमा गर्नु हुँदैन ।

गर्भले जेठाजेठीको विवाह जेठमा गर्न नहुने

**नैवोद्वाहो ज्येष्ठपुत्रीपुत्रयोश्च परस्परम् ।**
**ज्येष्ठमासजयोरेकज्येष्ठे मासे हि नान्यथा ॥८॥**

भावार्थः- जेठा सन्तानका बीचमा विवाह नगर्नू । जेठ महिनामा जन्मने सन्तानको विवाह जेठ महिनामा नगर्नू ।

### विवाहआदि गर्न नहुने ग्रहण आदि योग

**उत्पात ग्रहणादुर्ध्वं सप्ताहमखिलग्रहे ।**
**नाखिले त्रिदिनं मात्र तदानेष्टं ऋतुत्रयम् ॥९॥**

भावार्थः- वज्रपात आदि उत्पात तथा खग्रास ग्रहण लागे पछिका ७ दिनसम्म तथा खण्डग्रास ग्रहण र ऋतुकालीन उत्पात हुँदा ३ दिन पछिसम्म विवाह आदि शुभकार्य नगर्नू ।

**ग्रस्तास्ते त्रिदिनं पूर्वं पश्चात् ग्रस्तोदये तथा ।**
**सन्ध्याकाले त्रित्रिदिनं निःशेषे सप्त सप्त च ॥१०॥**

भावार्थः- ग्रहण लागी लागी अस्ताउने खालको ग्रहण भए तीन दिन पहिलेदेखि, ग्रहण लागी लागी उदाए तीन दिन पछिसम्म, बिहान वा बेलुकीको सन्ध्याकालमा ग्रहण लागे तीन दिन अगाडीदेखि तीन दिन पछिसम्म र सामान्य ग्रहणको सात दिनअघिदेखि सात दिन पछिसम्म विवाह आदि मङ्गल कर्म गर्न हुँदैन ।



### विवाह गर्न नहुने योग

**मासान्ते पञ्चदिवसाँस्त्यजेद्रिक्तान्तथाष्टमीम् ।**
**षष्ठीञ्च परिघाद्यर्द्धं व्यतीपातं सवैधृतिम् ॥११॥**

भावार्थः- मसान्तपछिका पाँच दिन; रिक्ता, अष्टमी र षष्ठी तिथि; परिघ योगको पूर्वार्द्ध तथा वैधृति र व्यतिपात योगमा विवाह आदि जस्ता सबै मङ्गल कर्म त्याग गर्नुपर्दछ ।

### विवाहआदि गर्न हुने नक्षत्र

**पौष्णधात्र्युत्तरामैत्रमरुच्चन्द्रार्क पैतृभम् ।**
**समूलभैरविद्धैव स्त्री करग्रह इष्यते ॥१२॥**

भावार्थः- विद्ध सहितको रेवती, रोहिणी, तीनै उत्तरा, अनुराधा, स्वाती, मृगशिरा, हस्ता, मघा र मूल : यी नक्षत्रमा विवाह गर्नू ।

ग्रह बल नभएका अवस्थामा शान्ति गर्नुपर्ने

विवाहे बलमावश्यं दम्पत्योर्गुरुसूर्ययोः ।
तत्पूजा यत्नतः कार्या दुष्फलप्रदयोस्तयोः ॥१३॥

भावार्थः- विवाहमा स्त्रीका लागि बृहस्पतिको बल तथा पुरुषका लागि सूर्यको बल आवश्यक छ । त्यसैले यो कुरा विचार गरेर यी ग्रह बलिया नभए अनिष्ट फल हटाउन शान्ति गर्नु पर्दछ ।

विवाहमा विभिन्न थरी बल जुराउने काम

गोचरं वा वेधजञ्चाष्टकवर्गरूपजं बलम् ।
यथोत्तरं बलाधिक्यं स्थूलं गोचरमार्गजम् ॥१४॥

भावार्थः- गोचर बल, वेध र अष्टक वर्ग बल : यी तीन क्रमशः बलिया हुन्छन् । गोचर स्थूल हो ।

चन्द्रताराबलं वीक्ष्य ग्रहपश्वाङ्गजं बलम् ।
तिथिरेक गुणा वारो द्विगुणस्त्रिगुणं च भम् ॥१५॥

भावार्थः- चन्द्रताराबल, ग्रहबल, पशु आदि साइत बल तथा अङ्गस्फुरणको बल हेर्नु पर्दछ । तिथिको १ गुणा, बारको २ गुणा र नक्षत्र ३ गुणा फल दिने हुन्छ ।

योगश्चतुर्गुणः पञ्चगुणन्तिथ्यर्ध संज्ञकम् ।
ततो मुहूर्त्तो बलवाँस्ततो लग्नं बलाधिकम् ॥१६॥

भावार्थः- योग ४ गुणा, करण ५ गुणा, मुहूर्त ६ गुणा र लग्न ७ गुणा फल दिने हुन्छ । अर्थात तिथि, बार, नक्षत्र, योग, करण, मुहूर्त्त र लग्न क्रमशः बढी फल दिने हुन्छन् ।

ततोऽति बलिनी होरा द्रेष्काणोतिबली ततः ।
ततो नवांशो बलवान् द्वादशांशो बली ततः ॥१७॥
त्रिशांशो बलवांस्तस्माद्वीक्ष्यते तद्‌बलाबलम् ।

भावार्थः- लग्नभन्दा होरा, होराभन्दा द्रेष्काण, द्रेष्काणभन्दा नवांश, नवांशभन्दा द्वादशांश र द्वादशांश भन्दा त्रिंशांश बलियो हुन्छ । यसरी बलको विचार गर्नु पर्दछ । शुभग्रहले युक्त र दृष्ट राशिहरु विवाह आदि मङ्गल कार्यमा शुभ फल दिने हुन्छन् ।

विवाह तत्कालीन लग्नको अधिनमा हुन्छ

**शुभयुक्तेक्षिताः शस्ता विवाहेऽखिल राशयः ॥१८॥**

भावार्थः- शुभग्रहले युक्त र दृष्ट राशिहरु विवाहादि मङ्गल कार्यमा शुभ हुन्छन् ।

**चन्द्रार्केज्यादयः पञ्च यस्य राशेस्तु खेचराः ।**
**इष्टास्तच्छुभदं लग्नं चत्वारोऽपि बलान्वितः ॥१९॥**

भावार्थः- चन्द्र, सूर्य र गुरु आदि ५ ग्रह जुन राशिका स्वामी छन् ती लग्न तथा लग्नमा ४ बलिया ग्रह हुने लग्न बलवान हुन्छ ।



२१ महादोष

**जामित्र शुद्ध्येकविंशन्महा दोष विवर्जितम् ।**
**एकविंशति दोषाणां नामरूपफलानि च ॥२०॥**
**पितामहोक्तान् सम्वीक्ष्य तान्वक्ष्येत्र समासतः ।**
**पञ्चाङ्गशुद्धिरहितो दोषस्त्वाद्यः प्रकीर्तितः ॥२१॥**

भावार्थः- जामित्र शुद्धि गरी २१ महादोष नभएको शुभ विवाह मुहूर्त हेर्नु पर्दछ । यहाँ २१ महादोषका नाम-रूप-फललाई ब्रह्माको कथनानुसार बताउँदछु । पञ्चाङ्गशुद्धि नहुनु पहिलो दोष हो ।

**उदयास्त शुद्धिहीनो द्वितीयः सूर्यसङ्क्रमः ।**
**तृतीयः पापषड्वर्गो भृगुः षष्ठे कुजोऽष्टमे ॥२२॥**
**गण्डान्तः कर्तरीरिःफषडष्टेन्दुश्च सङ्ग्रहः ।**
**दम्पत्योरष्टमं लग्नं राशिर्विषघटी भवः ॥२३॥**
**दुर्मुहूर्तो  वारदोषः खार्जुरीकः समाङ्घ्रिजः ।**
**ग्रहणोत्पातभं क्रूरविद्धर्क्षं क्रूरसंयुतम् ॥२४॥**

**कुनवांशो महापातो वैधृतिश्चैकविंशतिः ।**
**तिथिवारर्क्षयोगानां करणस्य च मेलनम् ॥२५॥**
**पञ्चाङ्गमस्य संशुद्धिः पञ्चाङ्गं समुदाहृतम् ।**
**यस्मिन् पञ्चाङ्ग दोषोऽस्ति तस्मिन् लग्नं निरर्थकम् ॥२६॥**

भावार्थः- पञ्चाङ्गशुद्धि, उदयास्तशुद्धि, सूर्य सङ्क्रमण, पाप षड्वर्ग, षष्ठ शुक्र, अष्टम मङ्गल, गण्डान्त दोष, कर्त्तरी योग, ६।८।१२ का चन्द्रमा, स्त्रीपुरुषको आठौं लग्न, सङ्ग्रह दोष, राशि दोष, विषघडी, दुष्ट मुहूर्त, वार दोष, खार्जुरिक (एकार्गल) दोष, ग्रहण लागेको नक्षत्र, पापग्रह वेध, पापग्रह युक्त, दुष्ट नवांश र वैधृति वा व्यतिपात योग गरी २१ महादोष भनी बताइएको छ । तिथि, बार, नक्षत्र, योग र करण गरी ५ थरीलाई पञ्चाङ्ग भनिन्छ । यसको शुद्धिलाई पञ्चाङ्गशुद्धि भनिन्छ । जुन लग्नमा पञ्चाङ्ग शुद्धि हुँदैन त्यो लग्न अशुभ फल दिने वा निरर्थक हुन्छ ।

### लग्नको स्थिति र विवाह

**लग्नलग्नांशकौ स्वस्वपतिना विक्षितौ शुभौ ।**

**न चेद्वान्योन्यपतिना शुभमित्रेण वा तथा ॥२७॥**
**वरस्य मृत्युः परमो सप्तसप्तोदयांशकौ ।**
**एवं तैर्वीक्षितयुतौ मृत्युर्वध्वाः वरस्य तु ॥२८॥**

भावार्थः- लग्न तथा लग्नको नवांश आआफ्नो स्वामीले हेरेको भए विवाह शुभ हुन्छ । अथवा यदि एकअर्कालाई आपसमा हेर्दछन् वा आफ्नो मित्र ग्रहले हेर्दछन् भने विवाह शुभ हुन्छ । लग्न वा लग्न नवांशका मालिक आफ्नो घरलाई देख्दैन तथा मित्रग्रह पनि देख्दैनन् भने वरको मृत्यु हुन्छ । यदि सातौं या सातौं नवांशका मालिक आफ्नो घरलाई देख्दैन भने तथा मित्र ग्रहको पनि दृष्टि छैन भने वधूको मृत्यु हुन्छ ।

### विवाह गर्न नहुने याम

**त्याज्या सूर्यस्य सङ्क्रान्तिः पूर्वतः परतः सदा ।**
**विवाहादिषु कार्येषु नाड्यः षोडश षोडश ॥२९॥**

भावार्थः- सूर्य सङ्क्रान्ति अघिपछिका १६-१६ घडीलाई विवाह आदि कार्यमा सधैं त्याग दिनु पर्दछ (यसलाई सङ्क्रान्ति दोष भनिन्छ) ।

### लग्न, होरा, द्रेष्काण र नवांश

**त्रिंशद्भागात्मकं लग्नं होरा तस्यार्धमुच्यते ।**
**लग्नत्रिभागो द्रेष्काणो नवमांशो नवांशकः ॥३०॥**

भावार्थः- ३० अंशको लग्न हुन्छ । त्यसको आधा अर्थात १५ अंशको एक होरा हुन्छ । लग्नको तृतीयांशलाई द्रेष्काण भनिन्छ । लग्नको नवौं भागलाई (३।२०) लाई नवांश भनिन्छ ।

### द्रेष्काण बुझाउने तालिका

| राशि | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| प्र.१-१० अंश | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. |
| द्वि.११-२० अंश | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. |
| द्वि.२१-३० अंश | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. |



### नवांश जान्ने तरिका र तालिका

मेष राशिमा मेषदेखि धनुसम्मका ९ नवमांश, वृष राशिमा मकरदेखि कन्यासम्म ९ नवमांश, मिथुन राशिमा तुलादेखि मिथुनसम्म ९ नवमांश, कर्कट राशिमा कर्कटदेखि मीनसम्म ९ नवमांश हुन्छन् । फेरी सिंहभन्दा पछाडि सबै राशिमा यसैगरी गन्नु पर्दछ । अर्थात् मेष, सिंह र धनु राशिमा मेषदेखि धनुसम्म ९ नवमांश वृष, कन्या, र मकर राशिमा मकरदेखि कन्यासम्म ९ नवमांश मिथुन, तुला र कुम्भराशिमा तुलादेखि मिथुनसम्म ९ नवमांश तथा कर्कट, वृश्चिक र मीन राशिमा कर्कटदेखि मीनसम्म ९ नवमांश हुन्छन् । प्रत्येक राशिमा ३० अंश हुन्छ । नवमांश नवौं भागलाई भनिन्छ । यसैले ३० अंशको नवौं भाग ३ अंश २० कलाको प्रत्येक नवमांश हुन्छ ।

| १-नवांशसारणी | | | | | | | | | | | | नवांश | २-नवांशसारणी | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन | अंशकाल | मे.सि.ध. | वृ.कं.म. | मि.तु.कुं. | क.वृ.मी. |
| मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | ३।२० | १ मं. | १० श. | ७ शु. | ४ चं. |
| वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | ६।४० | २ शु. | ११ श. | ८ मं. | ५ सू. |
| मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | १०।०० | ३ बु. | १२ बृ. | ९ बृ. | ६ बु. |
| कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | १३।२० | ४ चं. | १ मं. | १० श. | ७ शु. |
| सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | १६।४० | ५ सू. | २ शु. | ११ श. | ८ मं. |
| कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | २०।०० | ६ बु. | ३ बु. | १२ बृ. | ९ बृ. |
| तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | तुला | कर्कट | मेष | मकर | २३।२० | ७ शु. | ४ चं. | १ मं. | १० श. |
| वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | वृश्चिक | सिंह | वृष | कुम्भ | २६।४० | ८ मं. | ५ सू. | २ शु. | ११ श. |
| धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | धनु | कन्या | मिथुन | मीन | ३०।०० | ९ बृ. | ६ बु. | ३ बु. | १२ बृ. |
| चर | स्थिर | द्विस्वभाव | चर | स्थिर | द्विस्वभाव | चर | स्थिर | द्विस्वभाव | चर | स्थिर | द्विस्वभाव | - | - | - | - | - |

## द्वादशांश र त्रिंशांश

# द्वादशांशो द्वादशांशस्त्रिंशांशस्त्रिंशदंशकः ।

**भावार्थः-  राशिको १२ औं भागलाई द्वादशांश र राशिको ३० औं भागलाई त्रिंशांश भनिन्छ ।**

## द्वादशांश बुझाउने तालिका



| राशि | मेष | वृष | मिथुन | कर्क६ | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| २।३० | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. |
| ५।० | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. |
| ७।३० | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. |
| १०।० | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. |
| १२।३० | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. |
| १५।० | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. |
| १७।३० | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. |
| २०।० | ८ मं. | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. |
| २२।३० | ९ बृ. | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. |
| २५।० | १० श. | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. |
| २७।३० | ११ श. | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. |
| ३०।० | १२ बृ. | १ मं. | २ शु. | ३ बु. | ४ चं. | ५ सू. | ६ बु. | ७ शु. | ८ मं. | ९ बृ. | १० श. | ११ श. |

## त्रिंशांश तालिका

| मेष, मिथुन, सिंह, तुला, धनु र कुम्भ | वृष, कर्क६, कन्या, वृकि, मकर र मीन |
|---|---|
| ५ अंश मङ्गल (५ अंश मेष) १-५ | ५ अंश शुक्र (५ अंश वृष) १-५ |
| ५ अंश शनि (५ अंश कुम्भ) ६-१० | ७ अंश बुध (७ अंश कन्या) ६-१२ |
| ८ अंश बृहस्पति (८ अंश धनु) ११-१८ | ८ अंश बृहस्पति (८ अंश मीन) १३-२० |
| ७ अंश बुध (७ अंश मिथुन) १९-२५ | ५ अंश शनि (५ अंश मकर) २१-२५ |
| ५ अंश शुक्र (५ अंश तुला) २६-३० | ५ अंश मङ्गल (५ अंश वृश्चिक) २६-३० |

### राशि स्वामी

**सिंहस्याधिपतिर्भानुश्चन्द्रः कर्कटकेश्वरः ॥३१॥**
**मेषवृश्चिकयोर्भौमः कन्यामिथुनयोर्बुधः ।**
**धनुर्मीन द्वयोर्मन्त्री शुक्रो वृषतुलेश्वरः ॥३२॥**
**शनिमर्कर्रकुम्भेश इत्येते राशि नायकाः ।**

भावार्थः- सिंह राशिको मालिक सूर्य तथा कर्कटको चन्द्रमा हुन्छ । मेष र वृश्चिक राशिका मालिक मङ्गल, कन्या र मिथुनका बुध, धनु र मीनका बृहस्पति तथा वृष र तुलाका मालिक शुक्र हुन्छन् ।  मकर र कुम्भका मालिक शनि हुन्छ । राशि-मालिक यिनै हुन् ।

### होरा

**होरार्करोजराशौ च समभे चन्द्रसूर्ययोः ॥३३॥**

भावार्थः- होरा चन्द्‌ र सूर्यको १५-१५ अंशको हुन्छ । जोर राशिमा पहिलो १५ अंश चन्द्रमाको र त्यसपछिको १५ अंश सूर्यको होरा हुन्छ । बिजोर राशिमा यसको उल्टो हुन्छ

### द्रेष्काण

**स्युर्द्रेष्काँणा लग्न पञ्च नन्द राशीश्वराः क्रमात् ।**

भावार्थः- ३ भागमा बाँडिएका राशिमा १० अंशसम्म प्रथम द्रेष्काण त्यही राशिको, ११-२० अंश सम्म दोश्रो द्रेष्काण पाँचौं राशिको तथा २१-३० अंशसम्म तेश्रो द्रेष्काण नवौं राशिको हुन्छ ।

### द्वादशांश

**आरभ्य लग्नराशेस्तु द्वादशांशेश्वराः क्रमात् ॥३४॥**

भावार्थः- द्वादशांश राशिको १२ औं भागलाई भनिन्छ जुन आफ्नो राशिबाट क्रमैले शुरु भई १२ राशिको हुन्छ ।

### त्रिंशांश

**कुजार्कीज्यज्ञशुक्राणां वाणेष्वष्टाद्रिमार्गणाः ।**
**भागाः स्युर्विषमे ते तु समराशौ विपर्ययात् ॥३५॥**

भावार्थः- विषम राशिमा मङ्गल, शनि, गुरु, बुध र शुक्रको क्रमैले ५,५,८,७,५ अंश त्रिंशांश हुन्छ भने सम राशिमा यसको उल्टो हुन्छ ।

### शुक्रको स्थिति र विवाह

**भृगुः षष्ठाह्वयो दोषो लग्नात्षष्ठगते सिते ।**
**उच्चगे शुभसंयुक्ते तल्लग्नं सर्वदा त्यजेत् ॥३६॥**

भावार्थः- विवाह लग्नबाट छैटौं स्थानमा शुक्र बसेको अवस्थाको 'भृगु षष्ठाह्वय' दोषको लग्नमा उच्च वा शुभ ग्रहले युक्त भएपनि कहिल्यै विवाह सम्पन्न गर्न हुँदैन ।



### मङ्गलको स्थिति र विवाह

**कुजाष्टमे महादोषो लग्नादष्टमगे कुजे ।**
**शुभत्रययुतं लग्नं त्यजेत्तुङ्ग गते यदि ॥३७॥**

भावार्थः- लग्नबाट आठौं स्थानमा मङ्गल बसेको कुजाष्टम नामक महादोष लग्नमा ३ वटा शुभ वा उच्च ग्रहले युक्त लग्न भए पनि विवाह नगर्नू ।

### विवाहमा नक्षत्र गण्डान्त जुराउने काम

**पूर्णानन्दाख्ययोस्तिथ्योः सन्धिनाडीद्वयं सदा ।**
**गण्डान्तं मृत्युदं जन्मयात्रोद्वाहव्रतादिषु ॥३८॥**

भावार्थः- पूर्णा तिथिका र नन्दा तिथिका शुरुका १-१ घडी सन्धि गण्डान्त हुन् । यिनमा जन्म, यात्रा, विवाह तथा व्रत आदि हुनु मृत्युकारक हुन्छ ।

**कुलीरसिंहयोः कीटचापयोर्मीन-मेषयोः ।**

**गण्डान्तमन्तरालं स्याद्घटिकार्धं मृतिप्रदम् ॥३९॥**

भावार्थः- कर्कट-सिंह, वृश्चिक-धनु र मीन-मेषका बिचको आधा घडीलाई पनि गण्डान्त भनिन्छ । यसमा पनि शुभकार्य मृत्युदायी हुनाले निषेध छ ।

**सार्पेन्द्रपौष्णभेष्वन्त्यनाडीयुग्मन्तथैव च ।**
**तदग्रभेष्वाद्यपाद भानां गण्डान्त संज्ञकाः ॥४०॥**

भावार्थः- अश्लेषा, ज्येष्ठा र रेवतीको अन्तिम २-२ घडी तथा मघा, मूल र अश्विनीको शुरुका २-२ घडीलाई नक्षत्र गण्डान्त भनिन्छ ।

**उग्रश्च सन्धि त्रितयं गण्डान्त त्रितयं महत् ।**
**मृत्युप्रदं जन्मयानविवाहस्थापनादिषु ।४१।**

भावार्थः- यी तीन थरीका गण्डान्त उग्र हुन्छन् । जन्म, यात्रा, विवाह र प्रतिस्थापनमा यिनलाई परित्याग गर्नु पर्दछ ।



**विवाहमा कर्तरी लग्न बार्नु पर्दछ**

**लग्नस्य पृष्ठाग्रगयोरसाध्वोः साकर्तरी स्यादृजुवक्रगत्योः ।**
**तावेव शीघ्रं यदि वक्रचारौ नो कर्तरीति न्यगदन्मुनीन्द्रैः ॥४२॥**

भावार्थः- १२ औं स्थानमा यदि कुनै पापग्रह क्रमशः वक्री र मार्गी भई बसेको छ भने कर्तरीदोष हुन्छ । यदि ती दुवै ग्रह द्रुतगतिका हुन् भने त कर्तरीयोग हुँदैन भनी पहिले पहिलेका आचार्यहरुले बताएका छन् ।

**लग्नाभिमुखयोः पापग्रहयोरुभयस्थयोः ।**
**साकर्त्तरीति विज्ञेया दम्पत्योर्मृत्तिकर्तरी ॥४३॥**

भावार्थः- लग्नबाट दोश्रो र बाह्रौं स्थानमा यदि पापग्रह छन् भने पनि कर्तरीयोग हुन्छ जुन दम्पत्तिलाई मृत्युदायक हुन्छ ।

**अपि सौम्यग्रहैर्युक्तं गुणैः सर्वैः समन्वितम् ।**

**व्ययाष्टरिपुगे चन्द्रे लग्नदोषः स संज्ञितः ॥४४॥**

भावार्थः- सबै गुणसम्पन्न तथा सौम्यग्रहले युक्त हुँदा पनि कर्तरी योगमा तथा चन्द्रमा ६।८।१२ स्थानमा हुँदा लग्नदोष हुन्छ । त्यसैले यसमा विवाह गर्नु हुँदैन ।

शुक्र र बृहस्पतिको स्थिति र विवाहमा त्याज्य लग्न

**तल्लग्नं वर्जयेद्यत्नाज्जीवशुक्रसमन्वितम् ।**
**उच्चगे नीचगे वाऽपि मित्रगे शत्रुराशिगे ॥४५॥**

भावार्थः- चन्द्रमा ६।८।१२ मा उच्चराशि, निचराशि वा शत्रुराशि जस्तो सुकै अवस्थामा होस् बृहस्पति र शुक्रले युक्त लग्नलाई पनि त्याग्नू ।

**अपि सर्वगुणोपेतं दम्पत्योर्निधनप्रदम् ।**

भावार्थः- सबै गुणले सम्पन्न लग्न भए पनि यो लग्नमा विवाह गर्दा वर-कन्याको मृत्यु हुन्छ ।



विवाह लग्न र चन्द्रमाको स्थिति

**शशाङ्के पापसंयुक्ते दोषः सङ्ग्रह संज्ञकः ॥४६॥**

भावार्थः- चन्द्रमा यदि पापग्रहले युक्त भए सङ्ग्रह दोष हुन्छ ।

**तस्मिन्सङ्ग्रहदोषे तद्विवाहं नैवकारयेत् ।**
**सूर्येण संयुते चन्द्रे दारिद्र्यं भवति ध्रुवम् ॥४७॥**

भावार्थः- त्यो सङ्ग्रहदोषमा विवाह नगर्नू । सूर्य र चन्द्रको योग हुँदा गरिएको विवाहमा निश्चय नै दम्पत्ति दरिद्र हुन्छन् ।

**कुजेन मरणं व्याधिर्बुधेन त्वनपत्यता ।**
**दौर्भाग्यं गुरुणाच्चैव सापत्न्यं भार्गवेन तु ॥४८॥**

भावार्थः- चन्द्र र मङ्गलको योग हुँदा मरण वा रोग हुन्छ । चन्द्र र बुधको योग हुँदा अनपत्य दोष ( सन्तानहीनता) हुन्छ ।चन्द्र र गुरुको योग हुँदा दुर्भाग्यप्रद हुन्छ । चन्द्र र शुक्रको योग हुँदा सौता दोष हुन्छ ।

**प्रव्रज्या रविपुत्रेण राहुणा कलहः सदा ।**
**केतुना संयुते चन्द्रे नित्यं कष्टं दरिद्रता ॥४९॥**

भावार्थः- चन्द्रमा शनिका साथ भए परिव्राजक, राहुका साथ भए कलह तथा केतुका साथ भए नित्य कष्ट-दरिद्रता हुन्छ ।

**पापद्वययुते चन्द्रे दम्पत्योर्मरणं भवेत् ।**
**पापग्रहयुते चन्द्रे नीचस्थे राहुराशिगे ॥५०॥**

भावार्थः- दुई वटा पापग्रहले युक्त चन्द्रमा भए वरकन्याकै मृत्यु हुन्छ । पापग्रहले युक्त चन्द्रमा नीच राशि या राहुको राशी कन्यामा भए...।

**दोषायनं भवेल्लग्नं दम्पत्योर्मरणप्रदम् ।**
**स्वक्षेत्रगः स्वोच्चगो वा मित्रग्रहगतोविधुः ॥५१॥**
**युति दोषाय न भवेद्दम्पत्योः श्रेयसे तदा ।**

भावार्थः- यस्ता दोष लग्नदोषका त्यस्ता घर हुन जान्छन् जुन वरकन्याका लागि मरणप्रद हुन्छ । चन्द्रमा कर्कट वा वृष राशिको तथा आफ्नो मित्रघरमा छ वा मित्रग्रहसँग योग गर्दछ भने वरकन्याका लागि श्रेयस्कर हुन्छ ।

लग्नको स्थिति र विवाह पछिको भविष्यवाणि

**दम्पत्योरष्टगं लग्नं त्वष्टमो राशिरेव च ॥५२॥**
**यदि लग्नगतः सोऽपि दम्पत्योर्मरण प्रदः ।**
**स राशिः शुभयुक्तोऽपि लग्नं वा शुभसंयुतम् ॥५३॥**
**लग्नं विवर्जयेद्यत्नात्तदंशांश्च तदीश्वरान् ।**
**दम्पत्योर्द्वादशं लग्नं राशिर्वा यदि लग्नगम् ॥५४॥**

भावार्थः- स्त्रीपुरुषको लग्नबाट आठौं राशि विवाहलग्न भए वा तिनको राशिबाट आठौं राशीको लग्नमा यदि त्यो राशि शुभ ग्रहले युक्त भए वा लग्नमा शुभ ग्रह भएका अवस्थामा विवाह गर्दा त्यो विवाह वरकन्याका लागि मृत्युदायक हुन्छ । त्यो लग्नलाई प्रयासपूर्वक त्याग्नू । त्यसको नवांश तथा नवांशका मालिक पनि अशुभ हुन्छन् ।

**अर्थहानिस्तयोर्यस्मात्तदंशस्वामिनं त्यजेत् ।**
**जन्मराश्युद्गमे चैव जन्मलग्नोदये शुभा ॥५५॥**
**तयोरुपचयस्थाने यदा लग्नं गतं शुभम् ।**

भावार्थः- स्त्रीपुरुष दुवैको राशिकै लग्न छ वा लग्नबाट १२ औं राशिको लग्न छ भने अर्थको हानि हुन्छ । त्यसैले यी लग्नका नवांशका स्वामीका लग्नलाई त्याज्य जान । जन्मराशि वा जन्मलग्नमा शुभग्रह छन् र त्यसबाट ३।११।५ स्थानको लग्न भए शुभ हुन्छ । यसलाई राशिदोष भनिएको छ ।

विषघडी

**खमार्गणा वेदपक्षाः खरामाः शून्यसागराः ॥५६॥**
**वार्द्धिचन्द्रा रूपदस्राः खरामा व्योमवाहवः ।**
**द्विरामाः खाग्नयः शून्यदस्रकुञ्जरभूमयः ॥५७॥**
**रूपपक्षा व्योमदस्रा वेदचन्द्राश्चतुर्दश ।**
**शून्यचन्द्रा वेदचन्द्राः षट्पञ्च वेदवाहवः ॥५८॥**
**शून्यदस्राः शून्यचन्द्राश्शून्यश्चन्द्रा गजेन्दवः ।**
**तर्कचन्द्रा वेदपक्षाः खरामाश्चाश्विनी क्रमात् ॥५९॥**
**आभ्यः परा स्युश्चतस्रो नाडिका विष संज्ञिकाः ।**
**विवाहादिषु कार्येषु वर्ज्यास्ता विषनाडिका ॥६०॥**
**ऋक्षाद्यन्त घटिमितं विषमानेन ताडितः ।**
**षष्टिभिर्हरते लब्धं पूर्वं ऋक्षेण योजयेत् ॥६१॥**

भावार्थः- अब विषघडी दोष बताइन्छ । अश्विनीमा ५०, भरणीमा २४, कृत्तिकामा ३०, रोहिणीमा ४०, मृगशिरामा १४, आर्द्रामा २१, पुनर्वसुमा ३०, पुष्यमा २०, अश्लेषामा ३२, मघामा ३०, पू.फा.मा २०, उ.फा.मा १८, हस्तामा २१, चित्रामा २०, स्वातीमा १४, विशाखामा १४,

अनुराधामा १०, ज्येष्ठामा १४, मूलमा ५६, पू.षाढामा २४, उ.षा.मा २०, श्रवणमा १०, धनिष्ठामा १०, शतभिषामा १८, पू.भा.मा १६, उ.भा.मा २४ र रेवतीमा ३० घडी : यी नक्षत्रमा उल्लेखित घडी पछिका ४ घडीलाई विषघडी भनिन्छ । विषघडीलाई विवाह आदि काममा सधैं छोड्नू । बताइएका विषघडीको मानलाई सबै नक्षत्रको मान ६० मानेर दिइएको हो । नक्षत्रमान घटीबढी भए नक्षत्रमानलाई ध्रुवाङ्कले गुणन गरी ६० ले भाग गर्दा आउने भागफल वास्तविक ध्रुवाङ्क हुन्छ ।

### विवाहमा त्याज्य बार

**भास्करादिषु वारेषु ये मुहूर्ताश्च निन्दिताः ।**
**विवाहादि शुभे वर्ज्या अपि लग्न गुणैर्युताः ॥६२॥**
**ते वर्ज्या यदि तल्लग्नगुणैर्युक्ताश्चनिन्दिताः ।**

भावार्थः- आइत आदि बारमा जुन निन्दनीय मुहूर्त हुन्छन्, विवाह आदि शुभकार्यमा सर्वगुण सम्पन्न लग्न हुँदा पनि त्यो बार छाड्नू । यी दुष्ट मुहूर्त लग्न बलिया हुँदा पनि सर्वथा छाड्नु पर्दछ ।



### खर्जूर र एकार्गल दोष

**वारमध्ये तु ये दोषाः सूर्य वारादिषु क्रमात् ॥६३॥**
**अपि सर्वगुणोपेतास्ते वर्ज्याः सर्वमङ्गले ।**
**एकार्गलः समांघ्रिश्चेत्तत्र लग्नं विवर्जयेत् ॥६४॥**

भावार्थः- बारदोष विवाह आदि शुभकार्यमा निन्दित हुन्छ । यसैगरी एकार्गल दोष समाङ्घ्रिज भए अर्थात सूर्य र चन्द्र योगबाट एकार्गल हुन आए त्यस्तो नक्षत्र पनि छाड्नू । विवाहका बेला व्याघात, गण्ड, व्यतीपात, विष्कुम्भ, शूल, वैधृति, वज्र, परिघ र अतिगण्ड योग भई सूर्यनक्षत्रबाट बिजोर नक्षत्रमा चन्द्रमा भए एकार्गल (खार्जूरिक) दोष हुन्छ ।

**ईशाजपादहिर्बुध्न्यपूषाश्वियमवह्नयः ।**
**धातृचन्द्रादितीज्याख्य विष्ण्वर्कत्वष्टवायवः ॥६५॥**

भावार्थः- शिव, अजपाद, अहिर्बुध्न्य, पूषा, अश्विनीकुमार, यम, अग्नि, ब्रह्मा, चन्द्र, अदिति, बृहस्पति, विष्णु, सूर्य, त्वष्टा र मरुत् यि रातका १५ मुहूर्त हुन् । (रात्रिमानलाई १५ ले भागगरी एक मुहूर्तको मान लेराइन्छ) ।

**अपि शुक्रेज्यसंयुक्ता विषसंयुक्तदुग्धवत् ।**

भावार्थः- एकार्गल दोषको लग्नलाई गुरु र शुक्रले युक्त लग्न भएपनि त्यो लग्नलाई विष मिसिएको दूध छाडे जसरी नै छाड्नू ।

| मुहूर्त संख्या | दिवा मुहूर्त | | रात्रि मुहूर्त | |
|---|---|---|---|---|
| | नक्षत्र | स्वामी | नक्षत्र | स्वामी |
| १ | आर्द्रा | गिरिश | आर्द्रा | शिव |
| २ | अश्लेषा | सर्प | पूर्वभाद्रपदा | अजपाद |
| ३ | अनुराधा | मित्र | उत्तरभाद्रपदा | अहिर्बुध्न्य |
| ४ | मघा | पितृगण | रेवती | पूषा |
| ५ | धनिष्ठा | वसु | अश्विनी | अश्विनीकुमार |
| ६ | पूर्वाषाढा | जल | भरणी | यम |
| ७ | उत्तराषाढा | विश्वेदेव | कृत्तिका | अग्नि |
| ८ | अभिजित | ब्रह्मा | रोहिणी | ब्रह्मा |
| ९ | रोहिणी | ब्रह्मा | मृगशिरा | चन्द्रमा |
| १० | ज्येष्ठा | इन्द्र | पुनर्वसु | अदिति |
| ११ | विशाखा | इन्द्राग्नी | पुष्य | जीव |
| १२ | मूल | निर्ऋति | श्रवण | विष्णु |
| १३ | शतभिषा | वरुण | हस्ता | अर्क |
| १४ | उत्तराफाल्गुनी | अर्यमा | चित्रा | त्वष्ट्र |
| १५ | पूर्वाफाल्गुनी | भग | स्वाती | मरुत् |



### ग्रहण र उत्पातका नक्षत्र बार्नू

**ग्रहणोत्पातभं त्याज्यं मङ्गलेषु त्रिधाऽशुभम् ॥६६॥**

भावार्थः- ग्रहण र उत्पातका नक्षत्र मङ्गल काममा त्याज्य हुन्छ ।

### विवाह गर्न नहुने नक्षत्र

**यावच्चरविणा भुक्त्वा मुक्तं तं दग्धकाष्ठवत् ।**
**मङ्गलेषु त्यजेत् क्रूरं विद्धं भं क्रूरसंयुतम् ॥६७॥**

भावार्थः- विवाह आदि मङ्गल काममा क्रूर नक्षत्र, क्रूरविद्ध नक्षत्र, क्रूरयुक्त नक्षत्र तथा रविभुक्त नक्षत्रलाई आधा जलेको दाउरालाई छोडेझैं छोडिदिनु पर्दछ ।

**अखिलर्क्षं पञ्चगव्यं सुराविन्दुयुतन्तथा ।**
**पादमेव शुभैर्विद्धमशुभं नैव कृत्स्नभम् ॥६८॥**

भावार्थः- एक पाउ मात्रै विद्ध छ भने पनि यस्तो नक्षत्र मङ्गल काममा मदिराको थोपा परेको पञ्चगव्य अशुद्ध भएझैं अशुद्ध हुन्छ ।

**क्रूरविद्धयुतं धिष्ण्यं निखिलं चैव पादतः ।**

भावार्थः- क्रूरग्रहले विद्ध वा युक्त नक्षत्र चरणवेधले नै सबै त्याज्य हुन्छ ।

शुभ र अशुभ नवमांश

**तुलामिथुनकन्यांशं धनुरंशैश्च संयुताः ॥६९॥**
**एते नवांशाः सङ्ग्राह्या अन्ये तु कु नवांशकाः ।**
**कुनवांशकलग्नं यत्तयाज्यं सर्वगुणान्वितम् ॥७०॥**

भावार्थः- तुला, मिथुन, कन्या र धनुको नवांश शुभ हुन्छ त्यसैले लिन हुन्छ । बाँकी कुनवांश भनिएका छन् । शुभ गुणका भए पनि कुनवांश छाड्नू ।

विवाहआदि गर्न नहुने योग

**यस्मिन्दिने महापातस्तद्दिनं वर्जयेद्बुधः ।**
**अपि सर्वगुणोपेतं दम्पत्योर्मृत्युदं यतः ॥७१॥**

भावार्थः- जुन दिन महापात (व्यतिपात) योग हुन्छ त्यो दिन सर्व गुणसम्पन्न दिन भएपनि बुद्धिमानले त्याग्नू, किनकि त्यो दम्पत्तिका लागि मृत्युकारक हुन्छ ।

### विवाह गर्न नहुने याम

**अनुक्ताः स्वल्प दोषाः स्युर्विद्युन्नीहारवृष्टयः ।**
**प्रत्यर्क परिवेषेन्द्र चापाम्बुघन गर्जनम्॥७२॥**
**एवमाद्यस्ततस्तेषां व्यवस्था क्रियतेऽधुना ।**
**अकाले सम्भवेन्त्येते विद्युन्नीहारवृष्टयः॥७३॥**
**पत्यर्क परिवेषेन्द्र चापाभ्रघनयोर्यदि ।**
**दोषाय मङ्गले नूनमदोषायैव कालजा॥७४॥**

भावार्थः- बिजुली चम्कनु, कुहिरो लाग्नु र वर्षा हुनु : यी नबताएका अल्पदोषी हुन्छन् । सूर्यसामुको बादलमा अर्को सूर्य देखिनु, बादल गर्जनु, इन्द्रेणी देखिनु, बिजुली चम्कनु, कुहिरो लाग्नु, परिवेष इन्द्रचाप, बादलको गर्जन कुसमयमा भए दोष दिने र वर्षकालमा भए दोष नदिने हुन्छन् ।

### शुभग्रहको स्थिति

**वृहस्पतिः केन्द्रगतः शुक्रो वा यदि वा बुधः ।**
**एकोपि दोषविलयं करोत्येव सुशोभनम्॥७५॥**

भावार्थः- केन्द्रमा बसेका एक्ला बृहस्पति, शुक्र वा बुधले हरेक दोष नष्ट पारी शुभ गर्दछन् ।

### विद्ध नक्षत्रमा विवाह नगर्नू
### पञ्चशलाका वेध

**तिर्यक् पञ्चोर्ध्वगाः पञ्च रेखे द्वे द्वे च कोणयोः ।**
**द्वितीयं शम्भुकोणेऽग्निं भचक्रं तत्र विन्यसेत्॥७६॥**
**भान्यतः साभिजत्येकरेखा खेटेन विद्धभम् ।**

भावार्थः- ५ ठाडा र ५ रेखा तेर्सो काटिने गरी तथा कुनाबाट छड्के पारेर २-२ रेखा कोर्दा २८ बिन्दु सहितको पञ्चशलाका चक्र बन्दछ । यसमा ईशान कुनाको दोश्रो बिन्दुबाट कृत्तिका देखि शुरु गरी अभिजित समेत २८ नक्षत्रको स्थापना गर्नू । यदि एउटै रेखामा दुईवटा ग्रहका नक्षत्र परे त्यसलाई वेध भनिन्छ । यो नै वेध-दोष हो ।

**पञ्चशलाका नक्षत्र वेधवोधक-चक्र**




**श्री गणेशाय नमः**

लत्ता दोष



**पुरतः पृष्ठतोर्काद्यादिनर्क्षं लत्तयन्ति च ॥७७॥**
**अर्कात् कृति गुणागर्तु वाणाष्टनव सङ्ख्चभम् ।**
**सूर्यभात् सार्पपित्र्यन्त्यत्वाष्ट्रमित्रेन्दु विष्णुभम् ॥७८॥**

भावार्थः- सूर्य आदि ग्रह अगिल्ला र पछिल्ला नक्षत्रलाई यातना दिन्छन् । यसलाई लत्ता दोष भनिन्छ । सूर्यबाट ४।३।७।६।५।८।९ औं स्थानमा यदि अश्लेषा, मघा, रेवती, चित्रा, अनुराधा, मृगशिरा र श्रवण नक्षत्र भए त्यो पाद दोष हुन्छ ।

स्थान अनुसार दोष

**सौराष्ट्रशाल्व देशेषु लत्तितं भं विवर्जयेत् ।**
**कलिङ्गवङ्गदेशेषु पातितं भमुपग्रहम् ॥७९॥**
**बाह्लिके कुरुदेशे चान्यस्मिन्देशे न दूषणम् ।**
**तिथयोमासदग्धाख्या दग्धलग्नानि तान्यपि ॥८०॥**
**मध्यदेशे विवर्ज्याणि न दूष्याणीतरेषु च ।**

**पंग्वन्धकाणलग्नानि मासशून्याश्चराशयः ॥८१॥**
**गौडमालवयोस्त्याज्याश्चान्यदेशे न गर्हिताः ।**
**दोष दुष्टः सदा कालोवर्जनीयः प्रयत्नतः ॥८२॥**

भावार्थः- लत्तादोष सौराष्ट्र र शाल्वदेशमा, पातदोष कलिङ्ग र बङ्ग देशमा तथा उपग्रह दोष बाह्लिक र कुरुदेशमा त्याग गर्नू । अन्यत्र यसको दोष हुँदैन । मास, दग्धतिथि, दग्ध लग्न मध्य देशका लागि वर्जित छ अन्यत्र दोष हुँदैन । पङ्गु, अन्ध, काण, लग्न तथा मास शून्य एवं शून्य राशि गौढ तथा मालव देशमा वर्जित छ अन्यत्र होइन । दोष दुष्टकाललाई यत्नपूर्वक परित्याग गरेर मात्र शुभ कार्य गर्नु पर्दछ ।

विवाहमा जुराउने कुराहरु

**अपिभूरि गुणोऽन्यार्थे दोषाल्पत्वं गुणोदयः ।**
**परित्यज्य महादोषाज्छेषयोर्गुणदोषयोः ॥८३॥**
**गुणाधिकः स्वल्पदोषः सकलो मङ्गल प्रदः ।**
**दोषो न प्रभवत्येको गुणानां परिसञ्चये ॥८४॥**



भावार्थः- जहाँ गुण र दोषमध्ये दोष धेरै हुन्छ त्यहाँ गुणलाई छाडेर शुभ गर्न गर्न हुँदैन । गुणभन्दा दोष कम भए मङ्गलकारी हुन्छ । गुणको समूहमा थोरै दोषको गणना हुँदैन ।

**एको यथा तोयबिन्दुरुदचिर्षि हुताशने ।**
**एवं सञ्चिन्त्य गणितशास्त्रोक्तं लग्नमानयेत् ॥८५॥**
**तल्लग्नं जलयन्त्रेण दद्याज्ज्योतिषिकोत्तमः ।**

भावार्थः- पानीको एक थोपाले बलिरहेको आगोलाई निभाउन सक्दैन भन्ने कुरा सोची गणितशास्त्रमा बताएका विधिले लग्न निकाल्नु पर्दछ ।उत्तम खालको ज्योतिष जलयन्त्र मार्फत थाहा पाइने समयबाट लग्न निकाल्ने गर्दछन् ।

समय निकाल्ने जल यन्त्र

**षडङ्गुलमितोत्सेधं द्वादशाङ्गुलमायतम् ॥८६॥**
**कुर्यात्कपालवत् ताम्रपात्रं तद् दशभिः पलैः ।**

**पूर्णं षष्टिर्जलपलैः षष्टिर्मज्जति वासरे ॥८७॥**

भावार्थः- चालीस तोला तामाबाट एउटा चार अमल अग्लो र बाह्र अमल फराकिलो खप्पर आकारको भाँडो बनाउनू । यो भाँडो २४० तोला पानी हाल्दा भरिने होस् । यो भाँडो पानीमा राख्दा दिनको साठी पटक डुब्दछ ।

**माषमात्रत्र्यंशयुतं स्वर्णवृत्तशलाकया ।**
**चतुर्भिरङ्गुलैरापस्तथा बिद्धं परिस्फुटम् ॥८८॥**

भावार्थः- यो भाँडोको पिँधमा सुनको किलाले मासको गेडाको तीन भागको एक भाग जत्रो प्वाल बीचमा खोप्नू र भाँडोमा चार अमल पानी भर्नू ।

**कार्येणाभ्यधिकः षड्भिः पलैस्ताम्रस्य भाजनम् ।**
**द्वादशं मुखविष्कम्भ उत्सेधः षड्भिरङ्गुलैः ॥८९॥**
**स्वर्णमासेन वै कृत्वा चतुरङ्गुलकात्मकः ।**
**मध्यभागे तथा विद्धा नाडिका घटिका स्मृता ॥९०॥**



भावार्थः- ६ अमल अग्लो र १२ अमल फराकिलो २४ तोलाको तामाको भाँडोमा स्वर्णमास (?) चार अमल नापोको नाडीको चिनो बनाई बीचमा प्वाल पार्नाले पनि जलयन्त्र बन्दछ ।

**ताम्रपात्रे जलैः पूर्णे मृत्पात्रे वाऽथवा शुभे ।**
**गन्धपुष्पाक्षतैः सार्द्धैरलङ्कृत्य प्रयत्नतः ॥९१॥**
**तन्दुलस्थे स्वर्णयुते वस्त्रयुग्मेन वेष्टिते ।**
**मण्डलार्द्धोदयं वीक्ष्य रवेस्तत्र विनिःक्षिपेत् ॥९२॥**

भावार्थः- चन्दन, फूल, अक्षता आदिले राम्ररी सिँगारिएको र दुईवटा वस्त्र बेरिएको स्वर्णयुत (?) चामलमाथि राखिएको पानी भरिएको यस्तो तामा वा माटाको भाँडामा आधा सूर्य उदाएपछि घटी-यन्त्र हालिदिनू ।

**मन्त्रेणानेन पूर्वोक्तलक्षणं यन्त्रमुत्तमम् ।**
**मुख्यं त्वमसि यन्त्राणां ब्रह्मणानिर्मितं पुरा ॥९३॥**

**भावाभवाय दम्पत्योः कालसाधनकारणम् ।**
**द्वादशोङ्गुलकं प्रोक्तमिति शङ्कुप्रमाणकम् ॥९४॥**

भावार्थः- "ब्रह्माले दम्पत्तिको शुभ-अशुभ कुरा थाहा पाउन समय ज्ञानका लागि हजुरलाई बनाएका थिए । हे यन्त्र ! हजुर सबै यन्त्रमा उत्तम यन्त्र छौ" यस्तो मन्त्र पढ्दै जलले भरिएको भाँडोमा घटी-यन्त्र हाल्नू । यस्तो यन्त्र नहुँदा १२ अमलको किलाको छायाबाट समयका बारेमा जानकारी लिई लग्न निकालेर शुभ-अशुभ फल बताउनु पर्दछ ।

**अन्ययन्त्रप्रयोगा ये दुर्लभाः कालसाधने ।**
**एवं सुलग्ने दम्पत्योः कारयेत् सम्यगीक्षणम् ॥९५॥**

भावार्थः- समयज्ञानका अन्य अनेक प्रयोग मार्फत असल एवं शुभच लग्न निकाली वरवधूको सम्बन्ध गाँस्नू पर्दछ ।

विवाह-मण्डप



**हस्तोच्छ्रितां चतुर्हस्तैश्चतुरस्रां समन्ततः ।**
**स्तम्भैश्चतुर्भिः श्लक्ष्णैर्वा वामभागे स्वसद्मनः ॥९६॥**

भावार्थः- घरको देब्रेतिर एक हात अग्लो, चार हात लामो र चार हात चौडा चार कुनामा चार वटा खम्बा सहितको बलियो विवाह-मण्डप बनाउनु पर्दछ ।

**समण्डलं चतुर्दिक्षु सोपानैरति शोभनम् ।**
**प्रागुदक् प्रवणारम्भास्तम्भा हयशुकादिभिः ॥९७॥**

भावार्थः- चारै तिर अति सुन्दर सिँढी सहितको घोडा, सुँगा आदिको आकृति सहितको मण्डप ईशान कुनुबाट बनाउन शुरु गर्नुपर्दछ ।

**विचित्रितां चित्रकुम्भैर्विविधैस्तोरणाङ्कुरैः ।**
**भृङ्गारपुष्पनिचयैर्वर्णकैः समलङ्कृताम् ॥९८॥**
**विप्राशीर्वचनैः पुण्यस्त्रीभिर्दीपैर्मनोरमाम् ।**
**वादित्रनृत्यगीताद्यैर्हृदयानन्दिनीं शुभाम् ॥९९॥**

भावार्थः- चित्रविचित्र रङले रङ्गाइएका कलश, अनेक थरी अस्थायी खालका ढोकाले युक्त, बान्नादार अनेक रङ्गका फूलका गुच्छाले सिँगारिएको, ब्राह्मणका स्वस्तिवाचनले आशिर्वाद दिइएको, मङ्गलिनी स्त्रीको समूहले दीपमाला बालिएको, बाजा बजाउँदै र नाच्दै गरिएको : यस्तो परिवेशमा मनलाई आनन्द दिने खालको विवाह मण्डप बनाउनु पर्दछ ।

**एवं विधां तामारोहेन्मिथुनं साग्निवेदकम् ।**
**त्रिषडायगताः पापाः विना षष्टाष्टमं विधुः ॥१००॥**

भावार्थः- यसरी सजाइएको वेदीमाथि अग्नि देवतालाई साक्षी राखी वैदिक मन्त्र सहित लग्नबाट ३।६।११ स्थानमा पापग्रह र ६।८ स्थानमा चन्द्रमा नभएको बेला (तोकिएको वा निकालिएको लग्नमा) विवाहकार्य गर्नू ।

**विभिन्न स्थानमा बसेका ग्रह र तिनले दिने फल**

**कुर्वन्त्यायुर्धनारोग्यं पुत्रपौत्रसमन्विताः ।**
**त्रिकोणकेन्द्रखत्र्याये शुभं कुर्वन्ति खेचराः ॥१०१॥**

भावार्थः- ३।६।११ स्थानमा भएका पापग्रहले शुभ गर्दछन् । ९।५।१।४।७।१०।३।११ मा बसेका ग्रहले आयु, धन, आरोग्य गर्दछन् तथा छोरानातीले सहित बनाई शुभ गर्दछन् ।

**द्यूनकेन्द्रभगः शुक्रं हित्वा पुत्रधनान्विताम् ।**
**धनत्रिबन्धुतनयधर्मज्ञायेषु चन्द्रमाः ॥१०२॥**

भावार्थः- सातौँलाई छोडी केन्द्रमा बसेको शुक्रले तथा २।३।४।५।९।१०।११ औं स्थानमा बसेको चन्द्रमाले दम्पत्तिलाई पुत्र र धनयुक्त बनाउँदछ ।

**करोति सुतसौभाग्य भोगयुक्तां विवाहिताम् ।**
**अस्तगा नीचगाः शत्रुराशिगाश्च पराजिताः ॥१०३॥**

भावार्थः- माथि बताइएको १।४।१० स्थानमा रहेको शुक्र तथा २।३।४।५।९।१०।११ स्थानमा रहेको चन्द्रमाले दम्पत्तिलाई पुत्र, सौभाग्य र भोगले युक्त बनाउँदछ । अस्त-नीचराशि र शत्रुराशिगत ग्रह पराजित ग्रह हुन्छ ।

**नाशक्तास्ते फलं दातुं दानमश्रोत्रिये यथा ।**
**गुरुरेकोऽपि लग्नस्थः सकलं दोषसञ्चयम् ॥१०४॥**
**विनाशयतिधर्मांशुरुदितस्तिमिरं यथा ।**
**एकोऽपि लग्नगः काव्यो वुधो वा यदि लग्नगः ॥१०५॥**

भावार्थः- अश्रोत्रियलाई दिइएको दान जस्तै पराजित ग्रहले पनि फल दिँदैनन् । लग्नमा रहेको बृहस्पति एक्लैले दोषहरुलाई सूर्योदयका बेला अन्धकारलाई उदाएका सूर्यले नष्ट पारेझैं नष्ट पार्दछ । लग्नमा गएको शुक्र वा बुधले पनि एक्लै दोषको समूहलाई नाश गर्दछ ।

**नाशयत्यखिलान्दोषाँस्तूलराशिमिवानलः ।**
**गुरुरेकोऽपि केन्द्रस्थः शुक्रो वा यदि वा बुधः ॥१०६॥**



भावार्थः- आगोले कपासको थुप्रोलाई नष्ट पारे जसरी केन्द्रमा वा लग्नमा बसेको बृहस्पति वा बुधले दोषका थुप्रोलाई नष्ट पार्दछन् ।

**दोषसङ्घान्निहन्त्येव केसरीवेभसंहतिम् ।**
**दोषाणां शतकं हन्ति बलवान् केन्द्रगो बुधः ॥१०७॥**
**शुक्रोपहाय वै द्यूनं द्विगुणं लक्षमङ्गिराः ।**
**लग्नदोषाश्च दोषा ये दोषाः षड्वर्गजाश्च ये ॥१०८॥**

भावार्थः- बृहस्पतिले दोषका समूहलाई सिंहले हात्तीको समूहलाई नष्ट गरेझैं नष्ट गर्दछ । यस्गरी केन्द्रमा रहेको बलियो बुधले पनि सैयौं दोषलाई नष्ट गर्दछ । सप्तम भाव बाहेकको केन्द्र ( १।४।१०) मा रहेको शुक्रले बुधको भन्दा दोबर दोषलाई नष्ट गर्दछ । बृहस्पतिले लग्नगत तथा षड्वर्ग जन्य लाखौं दोषलाई नाश गर्दछ ।

**हन्तिताँल्लग्नगोजीवो मेघसङ्घमिवानिलः ।**
**केन्द्र त्रिकोणगे जीवे शुक्रो वा यदि वा बुधः ॥१०९॥**

भावार्थः- लग्नमा रहेको बृहस्पतिले सबै दोषलाई हावाले बादललाई नष्ट पारेझैं नष्ट पार्दछ । केन्द्र वा त्रिकोण रहेका गुरु, शुक्र (सातौं स्थान बाहेक) वा बुधले सबै दोष नष्ट पार्दछन् ।

**दोषा विनाशमायान्ति पापानीव हरिस्मृतेः ।**
**गुरुर्बली त्रिकोणस्थः सर्वदोषविनाशकृत् ॥११०॥**

भावार्थः- जसरी विष्णुको नाम सम्झनाले नै सबै पाप नासिन्छन् त्यसरी नै त्रिकोणमा बलियो भई बसेको बृहस्पतिबाट सबै दोष नाश हुन्छन् ।

**निहन्ति निखिलं पापं प्रणाममिव शूलिनः ।**
**मुहूर्त्तपाप-षड्वर्गकुनवांश-ग्रहोत्थिताः ॥१११॥**

भावार्थः- मुहूर्त्त दोष तथा षड्वर्ग र कुनवांश मा रहेका ग्रह-दोष शिवजीलाई नमस्कार गर्दा सबै पाप नष्ट भएझैं गरी गुरु त्रिकोणमा रहनाले नष्ट हुन्छन् ।

**ये दोषास्तान्निहन्त्येव यत्रैकादशगः शशिः ।**
**नाशयत्यखिलान्दोषान्यत्रैकादशगो रविः ॥११२॥**

भावार्थः- लग्नबाट एघारौं घरमा रहेको चन्द्रमाले सबै दोष हटाउँदछ । लग्नबाट एघारौं स्थानमा रहेका सूर्यले पनि सबै दोष नाश गर्दछन् ।

**गङ्गायाः स्नानतो भक्त्या सर्वपापानिवाचिरात् ।**
**वायूपसूर्यनीहारमेघगर्जन सम्भवाः ॥११३॥**
**दोषा नाशं ययुः सर्वे केन्द्रऽस्थाने वृहस्पतौ ।**
**ये दोषा मासदग्धास्तिथिलग्नसमुद्भवाः ॥११४॥**

भावार्थः- वायु, सूर्यको प्रति, कुहिरो, बादलको गर्जन आदि दोष केन्द्रको बृहस्पति हुँदा त्यसरी नै नष्ट हुन्छन् जसरी भक्तिपूर्वकको गङ्गास्नानले तुरुन्त सबै पाप नष्ट हुन्छन् । यस बाहेक मासदग्ध, लग्नदग्ध आदि दोष पनि केन्द्रस्थ गुरु भए नष्ट हुन्छन् ।

**ते सर्वे विलयं यान्ति केन्द्रस्थाने वृहस्पतौ ।**

**वलवान् केन्द्रगो जीवः परिवेषोत्थ दोषहा ॥११५॥**

भावार्थः- केन्द्रमा गुरु हुँदा पूर्वोक्त सबै दोष नष्ट हुन्छन् । यसबाहेक बलिया भई केन्द्रमा बसेका बृहस्पतिले सूर्यमण्डलजन्य दोष पनि नष्ट गर्दछन् ।

**एकादशस्थः शुक्रो वा वलवाञ्छुभवीक्षितः ।**
**त्रिविधोत्पातजान् दोषान् हन्ति केन्द्रगतो गुरुः ॥११६॥**

भावार्थः- बलिया शुभग्रहले हेरिएको शुक्र ११ औं स्थानमा छ भन् अथव गुरु केन्द्रमा छन् भने तिनले तीनै प्रकारका दोष नष्ट पार्दछन् ।

**स्थानादिवलसम्पूर्णः पिनाकी त्रिपुरं यथा ।**
**लग्न लग्नांश सम्भूतान् बलवान् केन्द्रगो गुरुः ॥११७॥**

भावार्थः- स्थानादि बलले पूर्ण बलिया केन्द्रका गुरुले लग्न र लग्न नवांश जनित सबै दोष त्यसरी नै नष्ट पारिदिन्छन् जसरी शिवजीले त्रिपुरासुर नष्ट पारे ।



**भस्मी करोति तान्दोषानिंधनानीव पावकः ।**
**अब्दायनर्तुमासोत्था ये दोषा लग्न संभवाः ॥**
**सर्वे ते विलयं यान्ति केन्द्रस्थाने वृहस्पतौ ॥११८॥**

भावार्थः- केन्द्रमा रहेका बृहस्पतिले वर्ष, अयन, ऋतु र महिनाजन्य सबै दोष त्यसरी नै नष्ट पारिदिन्छन् जसरी अग्निले इन्धनका समूहलाई नष्ट पार्दछन् ।

**उक्तानुक्ताश्च ये दोषास्तान्निहन्ति बलीगुरुः ।**
**केन्द्रसंस्थः सितो वापि भुजङ्गं गरुडो यथा ॥११९॥**

भावार्थः- केन्द्रमा रहेका बलिया बृहस्पति वा शुक्रले बताएका-नबताइएका सबै दोषलाई गरुडले सर्पलाई नष्टपारेझैं नष्ट पार्दछ ।

**वर्गोत्तम गतेलग्ने सर्वे दोषालयं ययुः ।**
**परमाक्षर विज्ञाने कर्माणीव न संशयः ॥१२०॥**

भावार्थः- लग्न आफ्नो वर्गोत्तम नवमांशको भएमा त सबै दोष यसरी नष्ट हुन्छन् जसरी ब्रह्मको ज्ञान भएपछि कर्मवासना नष्ट हुन्छन् ।

**दुःस्थानस्थ ग्रहकृताः पापखेटसमुद्भवाः ।**
**ते सर्वेलयमायान्ति केन्द्रस्थाने वृहस्पतौ ॥१२१॥**

भावार्थः- केन्द्रमा बृहस्पति रहेमा दुष्टस्थानमा रहेका ग्रहदोष तथा पापग्रहजन्य दोष नष्ट हुन्छन् ।

**उच्चस्थो गुरुरेकोऽपि लग्नगो दोष सञ्चयम् ।**
**हन्तिदोषान् हरिदिने चोपवास ब्रतं यथा ॥१२२॥**

भावार्थः- आफ्नो उच्च राशि (कर्कट) मा बसी लग्नमा रहेका बृहस्पति एक्लैले सबै दोष त्यसरी नै नष्ट गर्दछन् जसरी एकादशीको उपवासले अशेष पाप नष्ट गर्दछ ।

**अष्टधा राशिकूटञ्च स्त्रीदूरगणराशयः ।**

**राशीशयोनिवर्णाख्य शुद्धाश्चेद् पुत्र पौत्रदाः ॥१२३॥**

भावार्थः- आठथरिका राशिकूट, स्त्रीदूर, गण राशि, राशिस्वामी, योनी तथा वर्ण : यी शुद्ध भएमा त छोरानातीको सुख दाता हुन्छ ।

विवाहमा वरवधूको नक्षत्र जुराउने काम

**एकराशौ पृथक् धिष्ण्ये दम्पत्योः पाणिपीडनम् ।**
**उत्तमं मध्यमं भिन्नराश्यैकर्क्षजयोस्तयोः ॥१२४॥**
**एकर्क्षेत्वेकराशौ च विवाहः प्राणहानिदः ।**
**स्त्रीधिष्ण्यादाद्यनवके स्त्रीदूरमति निन्दितः ॥१२५॥**
**द्वितीयं मध्यमं श्रेष्ठं तृतीये नवके भृशम् ।**

भावार्थः- नक्षत्र बेग्लै र एकै राशि भए विवाह उत्तम, एकै नक्षत्र र फरक राशि भए विवाह सम्बन्ध मध्यम तथा दुवैको राशि र नक्षत्र एउटै भए प्राणनाशक हुन्छ । स्त्रीको नक्षत्रबाट पुरुषको

नक्षत्र पहिलो नवौं भित्र परे निन्दनीय, दोश्रो नवौं भित्र परे मध्यम र तेश्रो नवौं भित्र परे श्रेष्ठ हुन्छ । यो अति निन्दनीय 'स्त्रीदूर' लाई विवाहमा विचार गर्नू ।

### विवाहमा गण जुराउने काम

**तिस्रः पूर्वोत्तराधातृयाम्यमाहेशतारकाः ॥१२६॥**
**इति मर्त्यगणोज्ञेयः स्यादमर्त्यगणः परः ।**
**हयादित्यर्क वाय्विज्य मित्रेन्दु विष्णु चान्त्यभम् ॥१२७॥**
**रक्षोगणः पितृत्वाष्ट्र द्विदैवानीन्द्रतारकाः ।**
**वसुतोयेश मूलाहि तारकाभियुतोऽनलः ॥१२८॥**

भावार्थः- तीनै पूर्वा, तीनै उत्तरा, रोहिणी, भरणी र आर्द्रा यी मनुष्यगण हुन् । अश्विनी, पुनर्वसु, हस्ता, स्वाती, पुष्य, अनुराधा, मृगशिरा, श्रवण र रेवती देवगण हुन् । मघा, चित्रा, विशाखा, ज्येष्ठा, धनिष्ठा, शतभिषा, मूल, अश्लेषा र कृत्तिका नक्षत्र राक्षस गण हुन् ।

**दम्पत्योर्जन्मभे चैकगणे प्रीतिरनेकधा ।**

**मध्यमा देवमर्त्यानां राक्षसानां तयोर्मृतिः ॥१२९॥**

भावार्थः- एउटै गणमा स्त्रीपुरुष दुवैको नक्षत्र भए अनेक थरीको माया प्राप्त हुन्छ । देव र मनुष्य गणमा परे मध्यम स्नेह र मनुष्य र राक्षस गणमा परे मृत्यु हुन्छ ।

### राशि वा भकुट जुराउने कार्य

**मृत्युः षडाष्टके पञ्च नवके त्वनपत्यता ।**
**नेष्टं द्विर्द्वादशेऽन्येषु दम्पत्योः प्रीतिरुत्तमा ॥१३०॥**

भावार्थः- स्त्रीपुरुष दुवैको राशि यदि ६-८ भए मृत्यु, ९-५ भए सन्तानरहित, २-१२ भए अशुभ तथा यसभन्दा बेग्लै भए दुवैका बीचमा उत्तम स्नेह रहन्छ ।

**एकाधिपे मित्रभावे शुभदं पाणिपीडनम् ।**
**द्विर्द्वादशे त्रिकोणे च न कदाचित्षडष्टके ॥१३१॥**

भावार्थः- एकाधिपत्य हुँदा तथा एकआपसमा मित्र राशि हुँदा पाणि ग्रहण गर्न शुभ हुन्छ । त्यस्तै २-१२, त्रिकोण र ६-८ को दोष हुँदा विवाह गर्न हुँदैन ।

**शत्रुषडाष्टके कुम्भकन्ययोर्घटमीनयोः ।**
**वामोक्षयो नृयुक्कीटभयोः कुम्भकुलीरयो ॥१३२॥**
**पञ्चास्यमृगयोश्चैव निन्दितं तदतीव तु ।**

भावार्थः- परस्पर शत्रु, ६-१२ र ९-५ राशिमा विवाह सम्बन्ध गर्नु उत्तम हुँदैन । जस्तैः-कुम्भ-कन्या, कुम्भ-मीन, कन्या-वृष, मिथुन-वृश्चिक, कुम्भ-कर्कट, सिंह-मकर आदि राशिमा विवाह सम्बन्ध अती निन्दनीय भनिएको छ ।

विवाहमा ग्रहमैत्री जुराउने कार्य

**सितार्कीज्येन्दुभौमास्ते रिपुमित्र समा रवेः ॥१३३॥**
**इन्दोर्नशत्रुरर्कज्ञौ कुजेज्यभृगुसूर्यजाः ।**
**कुजस्य ज्ञोर्कचन्द्रेज्याः शुक्रसूर्यसुतौ क्रमात् ॥१३४॥**

**ज्ञस्येन्दुरर्कशुक्रौ च कुजजीव शनैश्चराः ।**
**गुरोर्ज्ञशुक्रौ सूर्येन्दुकुजाः स्युर्भास्करात्मजः ॥१३५॥**
**शुक्रस्येन्दुरवीज्ञार्की कुजदेवेशपूजितौ ।**
**शनेरर्केन्दुभूपुत्राज्ञशुक्रौ देवपूजितः ॥१३६॥**

भावार्थः- सूर्यका शुक्र-शनि शत्रु, गुरु-चन्द्र-मङ्गल मित्र र बुध सम हुन्छन् । चन्द्रमाका कुनै शत्रु छैनन् । उसका सूर्य-बुध मित्र र मङ्गल-गुरु-शुक्र-शनि सम हुन् । मङ्गलको शत्रु बुध, सूर्य-गुरु-चन्द्र मित्र र शुक्र-शनि सम हुन् । बुधका चन्द्रमा शत्रु, सूर्य-शुक्र मित्र र मङ्गल-गुरु-शनि सम हुन् । बृहस्पतिका बुध-शुक्र शत्रु, सूर्य-चन्द्र-मङ्गल मित्र र शनि सम हुन् । शुक्रका चन्द्र-सूर्य शत्रु, बुध-शनि मित्र तथा मङ्गल-गुरु सम हुन् । त्यस्तै शनिका सूर्य-चन्द्र-मङ्गल शत्रु, बुध-शुक्र मित्र तथा गुरु सम हुन् ।

## ग्रह मैत्री तालिका

| ग्रह | रवि | सोम | भौम | बुध | गुरु | शुक्र | शनि |
|---|---|---|---|---|---|---|---|
| मित्र ग्रह | चं.मं.बृ. | सू.बु. | सू.च.बृ. | सू.शु. | सू.च.मं. | बु.श. | बु.शु. |
| सम ग्रह | बुध | मं.बृ.शु.श. | मं.शु.श. | मं.बृ.श. | श. | मं.बृ. | बृ. |
| शत्रु ग्रह | शु.श. | - | बु. | च. | बु.शु. | सू.च. | सू.च.मं. |
| राशि | सिंह | कर्कट | मेष, वृश्चिक | मिथुन, कन्या | धनु, मीन | वृष, तुला | मकर, कुम्भ |

### विवाहमा योनि जुराउने कार्य

**अश्वेभ्यमेषसर्पाहिश्वोतुमेषोतु मूषकाः ।**
**आखुर्गोमहिषव्याघ्राश्वद्विड् व्याघ्रो मृगद्वयम् ॥१३७॥**
**श्वानः कपिर्बभ्रुयुग्मं कपिसिंहतुरङ्गमा ।**
**सिंहगोहस्तिनो भानामेषां योनिर्यथाक्रमम् ॥१३८॥**
**वैरं वभ्रूरङ्गमेषवानरं सिंहदन्तिनम् ।**
**गोव्याघ्रमाखुमार्जारं महिषाश्वञ्च शात्रवम् ॥१३९॥**

भावार्थः- अश्विनी आदि २८ नक्षत्रका क्रमशः घोडा, हात्ती, भेडा, सर्प, सर्प, कुकुर, बिरालो, भेडो, बिरालो, मुसो, मुसो, गाई, राँगो, बाघ, राँगो, बाघ, मृग, मृग, कुकुर, वानर, न्याहुरी मुसो, न्याहुरी मुसो, वानर, सिंह, घोडा, सिंह, गाई र बाख्रो योनी हुन् भनी सम्झिनू । न्याहुरी मुसा-सर्प, भेडा-वानर, सिंह-हात्ती, गाई-बाघ, मुसो-बिरालो राँगो-घोडामा परस्पर शत्रुता हुन्छ ।

### विवाहमा वर्ण जुराउने कार्य

**झषालिकर्कटा विप्रास्तदूर्ध्वाः क्षत्रिपादयः ।**
**पुंवर्णराशौ स्त्रीराशौ समेहीने तथा शुभम् ॥१४०॥**

भावार्थः- मीन, वृश्चिक र कर्कट राशि ब्राह्मण वर्णका हुन् । यस पछिका (३-३) राशिको वर्ण क्रमशः क्षत्रिय, वैश्य र शुद्र हो । कन्याको वर्ण वरको भन्दा बराबर वा कम भए शुभ हुन्छ ।

| वर्ण जान्ने तालिका र गुण संख्या | | | | |
|---|---|---|---|---|
| कन्यावर्ण | वरवर्ण | | | |
| | ब्राह्मण (मीन,कर्कट र वृश्चिक) | क्षत्रिय (मेष, सिंह र धनु) | वैश्य (वृष, कन्या र मकर) | शूद्र (मिथुन, तुला र कुम्भ) |
| ब्राह्मण (मीन,कर्कट, वृश्चिक) | १ (शुभ) | ० (अशुभ) | ० (अशुभ) | ० (अशुभ) |
| क्षत्रिय (मेष, सिंह र धनु) | १ (शुभ) | १ (शुभ) | ० (अशुभ) | ० (अशुभ) |
| वैश्य (वृष, कन्या र मकर) | १ (शुभ) | १ (शुभ) | १ (शुभ) | ० (अशुभ) |
| शूद्र (मिथुन, तुला र कुम्भ) | १ (शुभ) | १ (शुभ) | १ (शुभ) | १ (शुभ) |

### विवाहमा नाडी जुराउने काम

**चतुः त्रिधं त्रिधोत्थाय कन्याया स्वस्तिभाक्रमात् ।**
**वह्निभादिन्दुभान्नाडी त्रिचतुः पन्नपर्वसु ॥१४१॥**

भावार्थः- अश्विनी आदि नक्षत्रका तीन तीन भागले क्रमशः उल्टोसुल्टो तरिकाले आदि, मध्य र अन्त्य नाडी गणना गरिएको छ । त्रिचरण नक्षत्र छ भने कृत्तिकाबाट र द्विचरण राशि नक्षत्र योगमा कन्याको जन्म भए नाडी गन्दा मृगशीर्ष नक्षत्रबाट अभिजित समेत गन्नु पर्दछ ।

**गणयेत् सङ्ख्चया चैकनाड्यां मृत्युर्न पार्श्वयोः ।**
**प्राजापत्य ब्राह्मदैवा विवाहार्षकसंयुताः ॥१४२॥**

भावार्थः- उपरोक्त विधिले गणना गरी नाडी थाहा पाउनु पर्दछ । स्त्री तथा पुरुषको एउटै नाडी भएमा मृत्यु हुन्छ । पार्श्वनाडी शुभ हुन्छ । प्राजापत्य, ब्राह्म, दैव र आर्ष : यी विवाहमा नाडी विचार गर्नु पर्दछ ।

### विवाहका विधि र फल

**उक्तकाले तु कर्त्तव्याश्चत्वारः फलदायकाः ।**
**आसुरो द्रविणादानात् पैशाचः कन्यका छलात् ॥१४३॥**

भावार्थः- प्राजापत्य, ब्राह्म, दैव र आर्ष : यी ४ विवाह शुभ मुहूर्तमा गर्नाले उत्तम फलदायक हुन्छ । धन लिएर गरिने आसुर विवाह हो । कन्यालाई छल गरी गरिने विवाह पैशाच विवाह हो ।

**राक्षसो युद्धहरणाद्गान्धर्वः समयान्मिथः ।**

**गान्धर्वासुरपैशाचराक्षसाख्यास्तु नोत्तमाः ॥१४४॥**

भावार्थः- युद्ध जितेर गरिने राक्षस विवाह हो । आपसमा प्रेमबसी गरिने गान्धर्व विवाह हो । गान्धर्व, आसुर, पैशाच र राक्षस : यी चार थरीको विवाह उत्तम हुँदैन ।

अभिजित र गोधुलि लग्न

**चतुर्थमभिजिल्लग्नमुदयर्क्षात्तु सप्तमम् ।**
**गोधूलिकं तदुभयं विवाहे पुत्रपौत्रदम् ॥१४५॥**

भावार्थः- सूर्यको उदय लग्नबाट चतुर्थ लग्न अभिजित लग्न तथा सप्तम लग्नलाई गोधुलि लग्न भनिन्छ । यिनमा विवाह गर्नाले छोरानाती र सुख दिने हुन्छ ।

**प्राच्यानां च कलिङ्गानां मुख्यं गोधूलिकं स्मृतम् ।**
**अभिजित्सर्वदेशेषु मुख्यं दोषविनाशकृत् ॥१४६॥**

भावार्थः- गोधूलि लग्न पूर्वतिरका देशतिर तथा कलिङ्ग देशमा बस्नेहरुलाई विशेष लाभप्रद र दोषनाशक हुन्छ । अभिजित लग्न सबै देशका लागि बराबर रुपमा सबै खाले विघ्न नाशक हुन्छ ।

**मध्यन्दिनगते भानौ मुहूर्तोऽभिजिदाह्वयः ।**
**नाशयत्यखिलान्दोषान्पिनाकी त्रिपुरं यथा ॥१४७॥**

भावार्थः- सूर्य मध्याह्नमा हुँदा अर्थात दिनको मध्य भागमा अभिजित लग्न हुन्छ । यसले त्यसैगरी सबै दोषलाई नष्ट पार्दछ जसरी शिवजीले त्रिपुरको नष्ट गरेथे ।

**मध्यंदिनगतेभानौ सकलं दोष सञ्चयम् ।**
**करोति दोषमभिजित्तूलराशिमिवानलः ॥१४८॥**

भावार्थः- मध्याह्नकालीन अभिजित लग्नले सबै दोषलाई त्यसरी नै नष्ट पार्दछ जसरी कपासको थुप्रोलाई हावाले नष्ट पार्दछ ।

**हन्त्येकश्च महादोषो गुणलक्षमपीह सः ।**
**पावने पञ्चगव्यं तु पूर्णकुम्भं सुरालयम् ॥१४९॥**

भावार्थः- एउटा पनि ठूलो दोषले लाखौं गुणलाई त्यसरी नै नष्ट पार्दछ जसरी पञ्चगव्यको पवित्र कलशलाई मदिराको एक थोपाले नष्ट पार्दछ ।

विवाहका अन्य नियम

**पुत्रोद्वाहात्परं पुत्री विवाहो न ऋतुत्रये ।**
**न तयोब्रतमुद्वाहान्मङ्गले नान्यमङ्गलम् ॥१५०॥**

भावार्थः- छोराको विवाह गरेको ६ महिना(३ ऋतु)सम्म कन्याको विवाह नगर्नू । छोराछोरीको विहेपछि ६ महिनासम्म व्रत आदि मङ्गल कार्य पनि नगर्नू ।

**विवाहश्चैकजन्यानां षण्मासाभ्यन्तरे यदि ।**
**अशंसयं त्रिभिर्वर्षैस्तत्रैका विधवा भवेत् ॥१५१॥**



भावार्थः- ६ महिनाका बीचमा दुई वटी एउटै गर्भबाट जन्मेका केटीको विवाह गरिए दुईमध्ये एउटी ३ वर्ष भित्र विधवा हुन्छे ।

**प्रत्युद्वाहो नैव कार्यो नैकस्मै दुहितुर्द्वयम् ।**
**न चैक जन्मनोः पुंसोरेकजन्ये तु कन्यके ॥१५२॥**

भावार्थः- एउटा विवाहका साथ अर्को विवाह नगर्नू । एउटै वरका लागि एकैपटक दुई वटी कन्या नदिनू । सहोदर दाजुभाईको विवाह सहोदरा दीदिबहिनीसँग नगर्नू, अमङ्गल हुन्छ ।

**नैवं कदाचिदुद्वाहो नैकदा मुन्डनद्वयम् ।**

भावार्थः- एकै पटक दुई विवाह तथा मुण्डन कर्म नगर्नू ।

मूलमा जन्मिएकाको फल

**दिवाजातस्तु पितरं रात्रौ तु जननी तथा ॥१५३॥**

**आत्मानं सन्ध्ययोर्हन्ति नास्ति गण्डे विपर्ययः ।**
**सुतः सुतावा नियतं श्वसुरं हन्ति मूलजाः ॥१५४॥**

भावार्थः- मूलको बालक यदि दिनमा जन्मिए पितालाई, रातमा जन्मिए मातालाई र सन्ध्यामा जन्मिए स्वयंलाई मार्दछ । गण्डान्तमा अरु विपर्यय छैन । मूलोत्पन्न बालबालिकाले आफ्ना ससुरालाई नास्दछन् ।

**तदन्त्यपादजो नैव तथाश्लेजाद्यपादजः ।**
**ज्येष्ठान्त्य पादजो ज्येष्ठं हन्ति वालो न वालिका ॥१५५॥**

भावार्थः- मूलको अन्तिम चरणमा जन्म भए दोष हुँदैन । अश्लेषाको पहिलो चरणमा जन्म भए दोष हुँदैन । ज्येष्ठाको चौथो चरणमा जन्मने बालकले जेठो दाजुलाई नष्ट पार्दछ तर कन्या जन्मिए दोष हुँदैन ।

**वालिका मूल ऋक्षे तु मातरं पितरन्तथा ।**
**ऐन्डी धवाग्रजं हन्ति देवरन्तु द्विदैवजा ॥१५६॥**



भावार्थः- मूलमा जन्मिने बालिकाले मातापिता दुवै नास्दछे । ज्येष्ठा नक्षत्रमा जन्मने बालिकाले आफ्नो जेठो जेठाजूलाई नास्दछे । विशाखामा जन्मिने बालिकाले देवरलाई नास्दछे ।

लग्नको परिभाषा

**स्वस्थे नरे सुखासीने यावत्स्पन्दतिलोचनम् ।**
**तस्यत्रिंशत्तमो भागस्तत्परः परिकीर्तितः ॥१५७॥**

भावार्थः- स्वस्थ पुरुष सुखले यदि बसेको छ भने त्यसबखत उसका आँखा झिमिक्क गर्न लाग्ने समयको ३० औं भागलाई तत्पर भनिन्छ ।

**तत्पराच्छतगो भागस्त्रत्रुटिरित्यभिधीयते ।**
**त्रुटेः सहस्रगो योंऽशो लग्नकालः स उच्यते ॥१५८॥**

भावार्थः- तत्परको सय भागको एक भागलाई त्रुटि भन्दछन् । त्रुटिको हजार भागको एक भागलाई लग्न काल भन्दछन् ।

**देवोपि तन्न जानाति किं पुनः प्राकृतो जनः ।**
**स कालोऽथान्यकालोवा पूर्वकर्मवशाद्भवेत्॥१५९॥**
**निमित्तमात्रं दैवज्ञस्तद्वशान्नशुभाशुभम् ।**

भावार्थः- त्यसलाई देवता पनि जान्दैनन् भने साधारण व्यक्तिको के कुरा ? । त्यो लग्न, काल वा अरु कुनै पनि काल जन्मान्तरका कर्मको वशमा हुन्छ । ज्योतिषी त निमित्त मात्र हो उसको नियन्त्रणमा शुभ-अशुभ केही पनि छैन भनिन्छ ।

**शङ्कु**

**न्यग्रोध खदिराश्वत्थ रक्तचन्दनवृक्षजाः ॥१६०॥**
**श्रीखण्डागरुदन्तोत्थं शुभशङ्कुमकल्मषम् ।**
**द्वादशाङ्गुमुत्सेधं परिणाहे षडङ्गुलम् ॥१६१॥**

**एवं लक्षणसंयुक्तं कल्पयेत् कालसाधने ।**
**आरभ्योद्वाहदिवसात् षष्ठे वाप्यष्टमे दिने ॥१६२॥**

भावार्थः- बर, खयर, पीप्पल, रक्तचन्दन, श्रीखण्ड र धूपीका अथवा हात्तीका दाँतका १२ अमल लामा र ६ अमल मोटा शुभ एवं पवित्र शङ्कु बनाई त्यसलाई सर्व लक्षण सम्पन्न बनाउनू । यो बनाउने काम विवाह सम्बन्धी माङ्गलिक कार्य शुरु भएको छैटौं वा आठौं दिन उत्तम समय निकाल्नका लागि गर्नू ।

**वधूप्रवेशको साइत**

**वधूप्रवेशः सम्पत्त्यै दशमेऽथ समे दिने ।**
**ह्ययनं द्वितयं जन्ममासाग्रदिवसानपि ॥**
**सन्त्यज्य प्रतिशुक्रोऽपि यात्रा वैवाहिकी शुभा ॥१६३॥**

भावार्थः- विवाहका दिनबाट दशौं दिन वा जोर दिन, दुवै अयन, वर र कन्याको जन्म नक्षत्र तथा दिन एवं सन्मुख शुक्र छाडी वधू प्रवेश शुभकारक हुन्छ ।

इति श्रीनारदीयसंहितायां विवाहाध्यायः एकोनत्रिंशतमः

✷

नारदीय संहिता अन्तर्गत विवाह सम्बन्धी कुरा बताइएको उनन्तिसौँ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# त्रिंशत्तमोऽध्यायः

## प्रतिष्ठाध्यायः

देवप्रतिष्ठाको लागि उपयुक्त ग्रहको उदयकाल, महिना र तिथि

**श्रीपदं सर्वगीर्वाणस्थापनं चोत्तरायणे ।**
**गीर्वाणपूर्वं गीर्वाणमन्त्रिणोर्दृश्यमानयोः ॥१॥**

भावार्थः- उत्तरायण तथा शुक्र र वृहस्पतिको उदयकालमा सबै देवताको स्थापना गर्नु पर्दछ ।

**विचैत्रेष्वेवमासेषु माघादिषु च पञ्चसु ।**
**शुक्लपक्षेषु कृष्णेषु तदादि पञ्चसु स्मृतम् ॥२॥**

भावार्थः- चैतलाई छोडी माघ आदि पाँच महिनाका शुक्लपक्षमा तथा कृष्णपक्षका शुरुका पाँच तिथिसम्म देव प्रतिष्ठा हुन्छ ।



**दिनेषु यस्य देवस्य या तिथिस्तत्र तस्य च ।**
**द्वितीयादिद्वयोः पञ्चम्यादितस्तिसृषु क्रमात् ॥३॥**
**दशम्यादेश्चतसृषु पौर्णमास्यां विशेषतः ।**

भावार्थः- जुन देवताको जुन तिथि हो त्यही तिथिमा त्यो देवता स्थापना गर्नु पर्दछ । द्वितीयाबाट दुई तथा पञ्चमीबाट तीन तिथिहरु प्रतिष्ठाका लागि शुभ हुन् । दशमीबाट चार तिथिहरु तथा पूर्णिमा विशेषतः स्थापना कार्यमा उत्तम तिथि हुन् ।

देवप्रतिष्ठाको लागि उपयुक्त नक्षत्र र बार

**त्रिरुत्तरादितिश्चान्त्यहस्तत्रयगुरूडुषु ॥४॥**
**साश्विधातृजलाधीश हरिमित्रवसुष्वपि ।**
**कुजवर्जित वारेषु कर्त्तुः सूर्यबलप्रदे ॥५॥**

भावार्थः- तीनै उत्तरा, पुनर्वसु, रेवती, हस्ता, चित्रा, स्वाती, पुष्य, अश्विनी, रोहिणी, शतभिषा,श्रवण, अनुराधा र धनिष्ठा नक्षत्रमा; मङ्गलबार बाहेकका बारमा र कर्ताको सूर्यबल उत्तम हुँदा देवताको प्रतिस्थापन गर्नु उत्तम हुन्छ ।

देवप्रतिष्ठाको लागि उपयुक्त लग्न

**चन्द्रतारा बलोपेतेपूर्वाह्णे शोभने दिने ।**
**शुभलग्ने शुभांशे च कर्त्तुर्न निधनोदये ॥६॥**

भावार्थः- चन्द्रतारा बलले युक्त दोपहर भन्दा पहिले शुभ दिन शुभ लग्नमा कर्ताको राशिबाट आठौँ लग्न शुद्ध हुँदा देवताको स्थापना गर्नु पर्दछ ।

**राशयः सकलाः श्रेष्ठाः शुभग्रहयुतेक्षिताः ।**
**शुभग्रहयुते लग्ने शुभग्रहयुतेक्षिते ॥७॥**

भावार्थः- सबै राशिहरु शुभग्रहका योगमा तथा दृष्टिमा उत्तम हुन्छन् । त्यस्तै शुभग्रहले सहित तथा दृष्ट लग्न पनि देव प्रतिष्ठामा शुभ फलदायक हुन्छन् ।



**राशिः स्वभावजं हित्वा फलं ग्रहजमाश्रयेत् ।**
**अनिष्टफलदः सोपि प्रशस्तफलदः शशी ॥८॥**
**सौम्यर्क्षगोधिमित्रेण गुरुणा वा विलोकितः ।**
**पञ्चेष्टिके शुभे लग्ने नैधने शुद्धिसंयुते ॥९॥**

भावार्थः- राशिले आफ्नो स्वाभाविक फललाई छाडी ग्रहको आश्रयबाट शुभ-अशुभ फल दिन्छ । चन्द्रमा अनिष्ट फल दिने भए पनि शुभग्रहको शुभ योग दृष्टिले गर्दा शुभ फलदायक हुन्छ । लग्न शुभग्रहको राशिको होस्, आफ्नो अधिमित्र मित्र वा बृहस्पतिले देखिएको होस् भने तथा पञ्चेष्ट शुद्ध भए एवं अष्टम भाव शुद्ध भए देवताको स्थापना शुभ हुन्छ ।

**लग्नस्थाः सुर्यचन्द्रारराहुकेत्वर्कसूनवः ।**
**कर्त्तुर्मृत्यु प्रदाश्चान्ये धनधान्यसुखप्रदाः ॥१०॥**

भावार्थः- लग्नमा रहेका सूर्य, चन्द्र, मङ्गल, राहु, केतु र शनि कर्ताको मृत्यु गर्ने तथा अरु ग्रह, धन, धान्य आदिको भने सुख दिने हुन्छ ।

**द्वितीये नेष्टदाः पापाः शुभाश्चन्द्रश्च वित्तदाः ।**
**तृतीये निखिलाः खेटाः पुत्रपौत्रसुखप्रदाः ॥११॥**

भावार्थः- दोश्रो स्थानमा पापग्रह अशुभ फल दिने तथा शुभ ग्रह र चन्द्रमा धन दिने हुन्छ । त्यस्तै, तेश्रो थानमा रहँदा सबै ग्रह पुत्र पौत्र सुख आदि दिने हुन्छ ।

**चतुर्थेसुखदाः सौम्याः क्रूराश्चन्द्रश्च दुःखदाः ।**
**हानिदाः पञ्चमे क्रूराः सौम्याः पुत्रसुखप्रदाः ॥१२॥**

भावार्थः- चतुर्थस्थानमा रहेका शुभग्रह शुभ फल दिने हुन्छन् तर क्रूर ग्रह र चन्द्रमा भए दुःख दिने हुन्छन् । पाँचौं स्थानमा यदि क्रूर ग्रह भए हानिकारक तर शुभ ग्रह भए पुत्र तथा सुख दिने हुन्छ ।

**पूर्णः क्षीणः शशीतत्र पुत्रदः पुत्रनाशनः ।**
**षष्ठे शुभाः शत्रुदाः स्युः पापाः शत्रुक्षयप्रदाः ॥१३॥**

भावार्थः- पञ्चमस्थानमा गएको पूर्ण चन्द्रमा पुत्र दायक तथा क्षीण चन्द्रमा पुत्र नाशक हुन्छ । तथा छैटौं स्थानका पाप ग्रह शत्रुनाशक र शुभग्रह शत्रु बढाउने हुन्छन् ।

**पूर्णः क्षीणोऽपि वा चन्द्रः षष्ठेऽखिलरिपुक्षयम् ।**
**करोति कर्त्तुरचिरादायुः पुत्रधनप्रदः ॥१४॥**

भावार्थः- पूर्ण वा क्षीण चन्द्रमा पनि छैटौं स्थानमा हुँदा शत्रु क्षय गर्दछ तथा प्रतिष्ठा गर्ने भएका पुरुषलाई चाँडै नै पुत्र, धन, यश, आयु आदि दिन्छ ।

**व्याधिदाः सप्तमेपापाः सौम्या सौम्य फलप्रदाः ।**
**अष्टमस्थानगाः सर्वे कर्त्तुर्मृत्युप्रदा ग्रहाः ॥१५॥**

भावार्थः- सातौं स्थानमा रहेका पापग्रह रोगदायक हुन्छन् तथा शुभग्रह उत्तम फलदायक हुन्छन् । तथा आठौं स्थानमा गएका सबै ग्रह कर्तालाई मृत्युदायक हुन्छन् ।

**धर्मेपापा घ्नन्ति सौम्याः शुभदाः शुभदः शशी ।**
**भङ्गदाः कर्मगाः पापाः सौम्याश्चन्द्रश्च कीर्तिदाः ॥१६॥**

भावार्थः- नवौं भावमा गएका पापग्रह मृत्युदायक तथा शुभग्रह एवं शुभ चन्द्रमा शुभफल दायक हुन्छन् । कर्मभावमा बसेका पापग्रह कार्य नष्ट गर्ने तथा शुभग्रह र पूर्ण चन्द्रमा शुभ फलदायक हुन्छन् ।

**लाभस्थानगताः सर्वे भूरिलाभप्रदाः ग्रहाः ।**
**व्ययस्थानगताः शश्वद्बहुव्ययकराग्रहाः ॥१७॥**

भावार्थः- लाभस्थानमा गएका सबै ग्रह लाभप्रद हुन्छन् । व्यय स्थानमा गएका ग्रह निरन्तर व्यय गराउने हुन्छन् ।

**गुणाधिकतरेलग्ने दोषाल्पत्वतरे यदि ।**
**सुराणां स्थापनं तत्र कर्त्तुरिष्टार्थ सिद्धिदम् ॥१८॥**

भावार्थः- धेरै गुण तथा थोरै दोष भएको लग्नमा देवताको प्रतिस्थापना यदि भएमा त कर्ताका चाहेको अर्थ सिद्धि दिने हुन्छ ।

देवप्रतिष्ठा अनुसारको फल

**हन्त्यर्थहीना कर्तारं मन्त्रहीना तुऋत्विजम् ।**
**श्रियंलक्षणहीना तु न प्रतिष्ठासमो रिपुः ॥१९॥**

भावार्थः- द्रव्यहीन वा कञ्जूसी तरिकाले गरिएको देव प्रतिष्ठाले यजमानलाई, मन्त्रहीन प्रतिष्ठाले आचार्यलाई तथा लक्षणहीन प्रतिष्ठाले लक्ष्मी नष्ट पार्दछ । त्यसैले विवेक नगरी प्रतिष्ठा गर्ने व्यक्तिलाई यही प्रतिष्ठा कार्यभन्दा ठूलो शत्रु अरु केही हुँदैन ।

इति श्रीनारदीयसंहितायां प्रतिष्ठाध्यायस्त्रिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत देव-प्रतिष्ठा सम्बन्धी कुरा बताइएको तिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# एकत्रिंशत्तमोऽध्यायः

### जग्गाको माटो जाँच

**निर्माणे पत्तनग्राम गृहादीनां समासतः ।**
**क्षेत्रमादौ परीक्षेत गन्धवर्णरसप्लवैः ॥१॥**
**मधुपुष्पाम्लपिशितगन्धान् विप्रानुपूर्वकम् ।**
**सितरक्तेश हरित कृष्णवर्णं यथा क्रमात् ॥२॥**
**मधुरं कटुकं तिक्तं कषायश्च रसाः क्रमात् ।**

भावार्थः- शहर, गाऊँ, तथा घर आदिको निर्माण गर्ने समयमा संक्षेपमा गन्ध-वर्ण-रस र समतलद्धारा पहिले जमिन जाँच्नू । ब्राह्मणका लागि सेतो र मह गन्ध भएको, क्षत्रियका लागि रातो र फूलझैं बास्ना आउने, वैश्यका लागि हरियो र अम्ल गनाउने तथा शुद्रका लागि कालो र मासु गनाउने जमिन शुभ हुन्छ । ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रका लागि क्रमशः मीठो, कटु, तीतो र टर्रो स्वादको जमिन शुभ हुन्छ ।



### जग्गाको बनौटको जाँच

**अत्यन्तं वृद्धिदं नृणामीशानप्रागुदक्प्लवम् ॥३॥**
**अन्य दिक्षुप्लवं तेषां शश्वदत्यन्त हानिदम् ।**

भावार्थः- ईशान (पूर्व र उत्तरको कुनु), पूर्व र उत्तर ढल्केको जमिन सबै वर्णका लागि उत्तम हुन्छ । अन्यतिर ढल्केको जमिन हानिकारक हुन्छ ।

### जग्गा जाँच्ने तरिका

**तत्रकर्ता हस्तमात्रं खनित्वा तत्र पूरयेत् ॥४॥**
**अत्यन्त वृद्धिरधिके हीने हानिः समेसमम् ।**
**तथानिशादौ कृत्वा तु पानीयेन प्रपूरयेत् ॥५॥**
**प्रातर्दृष्टेजलेवृद्धिः समं पङ्के व्रणे क्षयः ।**

भावार्थः- घर बनाउने जग्गामा धनीले १ हात लामो, १ हात चौडा र १ हात गहिरो खाल्टो खनी फेरी त्यही खनेर निकालिएको माटोले भर्नू । माटो बढी भए शुभ वृद्धिदायक, बराबर भए बराबर फलदायक तथा नपुगे हानी हुन्छ । फेरी त्यो माटो निकाली साँझमा पानी भर्नू । बिहान उठेर हेर्दा पानी बाँकी बचे त्यो जमिन उत्तम, हीलो बसे मध्यम तथा धाँजा फाटे त्यो जमिन बस्न योग्य हुँदैन भनी जान्नू ।

**शङ्कु स्थापना**

**एवं लक्षणसंयुक्ते क्षेत्रे सम्यक् समीकृते ॥६॥**
**दिक् साधनाय तन्मध्ये समे मण्डलमालिखेत् ।**
**पूर्वोक्तलक्षणसंयुक्ते तन्मध्ये स्थापयेत्ततः ॥७॥**

भावार्थः- माथि बताइएका लक्षण भएको समथर जग्गामा दिक् साधनका लागि एउटा मण्डल बनाउनू । तथा पहिले बताइएको लक्षण भएको उत्तम शङ्कु स्थापना गर्नू ।

**ततश्छायां स्पृशेद्यत्र वृत्ते पूर्वापराह्णयोः ।**
**तत्रकार्यावुभौविन्दू वृत्ते पूर्वापरा विधौ ॥८॥**
**रेखा या सोत्तरासाध्या तन्मध्येतिमिनास्फुटा ।**
**तन्मध्ये तिमिनारेखा कर्त्तव्या पूर्वपश्चिमा ॥९॥**

भावार्थः- पहिले जाँचिएको शङ्कुलाई समतल जमिनमा स्थापना गर्नू । शङ्कुको प्रातकाल र साँझको छाँयाको घेराले जहाँ छुन्छ त्यसबाट उत्तर दिशा पत्ता लगाई त्यसमाथि उत्तर-दक्षिणतिर मत्स्य आकारको रेखा खिच्नु पर्दछ ।

**तन्मध्यमत्स्यैर्विदितः साध्यासूचीमुखास्तदा ।**
**मध्याद्विनीर्गतैः सूत्रैश्चतुरस्रं लिखेद्वहिः ॥१०॥**

भावार्थः- फेरी बीचमा मत्स्याकार सियोको टुप्पो जस्तै मसिनो रेखा कोर्नू तथा त्यसैले उत्तर-दक्षिणको रेखा कोर्नू र फेरी पूर्ववत् रेखा साधना गरी दिशा थाहा पाउनु पर्दछ ।

**नक्सा बनाउने विधि**

**चतुरस्त्री कृते क्षेत्रे षड्वर्गपरिशोधिते ।**

**रेखामार्गे च कर्त्तव्यं प्राकारं सुमनोहरम् ॥११॥**

भावार्थः- षड्वर्गको तरिकाले भूमिको शोधन गरे पछि चार कुना पारिएको जमिनमा रेखामार्ग वा रेखाचित्रबाट सुमनोहर घर बनाउनु पर्दछ ।

**घरको ढोका**

**आयामेषु चतुर्दिक्षु प्रागादिषु च सत्स्वपि ।**
**अष्टाष्टौ च प्रतिदिशं द्वाराणि स्युर्यथाक्रमात् ॥१२॥**

भावार्थः- त्यो विस्तार वा गृहपिण्डमा पूर्व आदि गरिएका चार दिशामा भाग लगाई पूर्व आदि दिशामा आठ-आठ वटा ढोका क्रमअनुसार बनाउनु पर्दछ ।

**प्रदक्षिणक्रमात्तेषाममूनि च फलानि वै ।**
**हानिर्नैस्वं धनप्राप्तिर्नृपपूजामहद्धनम् ॥१३॥**
**अतिचौर्यमतिक्रोधो भीतिर्दिशि शचीपतेः ।**



भावार्थः- पूर्व दिशामा प्रदक्षिणा क्रमले अर्थात् ईशानदेखि आग्नेय कोणसम्म क्रमैले आठ भागका ढोकाको फल हानि, दरिद्रता, धनलाभ, राज्यबाट लाभ, ठूलो धन प्राप्ति, ठूलो चोरी, अत्यन्त क्रोध र भय हुन्छन् ।

**निधनं बन्धनं भीतिरर्थाप्तिर्धनवर्द्धनम् ॥१४॥**
**अनातङ्कं व्याधिभयं निःसत्वं दक्षिणादिशि ।**

भावार्थः- दक्षिण दिशामा आग्नेयदेखि नैर्ऋत्यसम्म आठ भागमा घरको ढोका राख्नाले क्रमैले निधन, बन्धन, भय, द्रव्य प्राप्ति, धनवृद्धि, आरोग्य, व्याधिभय र दरिद्रता हुन्छ ।

**पुत्रहानिः शत्रुवृद्धिर्लक्ष्मीप्राप्तिर्धनागमः ॥१५॥**
**सौभाग्यमतिदौर्भाग्यं दुःखं शोकश्च पश्चिमे ।**

भावार्थः- पश्चिम दिशामा नैऋत्यबाट वायव्य कोणसम्मका ८ भागमा ढोका बनाउँदा क्रमैले पुत्रहानी, शत्रुवृद्धि, लक्ष्मीप्राप्ति, धनागम, सौभाग्य, अति दुर्भाग्य, दुःख र शोक फल हुन्छ ।

**कलत्रहानिनिःसत्वं हानिर्धान्यं धनागमः ॥१६॥**
**संपद्वृद्धिर्महाभीतिरामयो दिशि शीतगोः ।**
**एवं गृहादिषु द्वारं विस्ताराद्विगुणोच्छ्रितम् ॥१७॥**

भावार्थः- उत्तर दिशामा वायव्यबाट ईशान कोणसम्मका ८ भागमा ढोका बनाउँदा क्रमैले कलत्रहानि, दरिद्रता, हानि, धान्यलाभ, धनागम, सम्पत्तिको वृद्धि, महाभय र रोग : यी फल हुन्छ । यस्तै घरको ढोकाको निर्माण गर्दा चौडाइको दोबर उचाइ राख्नु पर्दछ ।

**इति प्रदक्षिणं द्वारं फलमीशानकोणतः ।**
**मूलद्वारस्य चोक्तानि तान्यत्रैवं वियोजयेत् ॥१८॥**

भावार्थः- ईशान कुनाबाट शुरुगरी ईशान कुनुसम्म प्रदक्षिणा क्रमले मुख्यद्वारको फल बताइएको छ । यी फललाई यसैगरी मूलढोकाका लागि समझिनु पर्दछ ।

**पश्चिमे दक्षिणे वापि कपाटं स्थापयेद् गृहे ।**
**प्रकारतः क्षितिं कुर्याद्....।**



भावार्थः- घरमा पश्चिम तथा दक्षिणमा पनि ढोका? (किवाड, फाटक) राख्नू । घर अनुसार ढोकाको उचाइ राख्नू ।

वास्तु चक्र

**...एकाशितिपदं यथा ॥१९॥**
**मध्ये नवपदं ब्रह्मस्थानं तदतिनिन्दितम् ।**
**द्वात्रिंशदंशाः प्रकाराः समीपांशाः समंततः ॥२०॥**
**पिशाचांशा गृहारम्भे दुःखशोकभयप्रदाः ।**
**शेषास्युर्गृहनिर्माणे पुत्रपौत्रधनप्रदाः ॥२१॥**

भावार्थः- वास्तुमा ८१ पदस्थान हुन्छन् । वास्तुचक्र बनाउन १० रेखा पूर्व-पश्चिम र त्यसै माथि १० रेखा सिधा उत्तर दक्षिण पारी कोरेमा ८१ कोठे वास्तुचक्र बन्दछ । बीचका ९ कोठा ब्रह्मस्थान हुनाले त्याज्य हुन्छ । चारैतिरका ३२ कोठा छोडी नगिचैका २४ कोठालाई

पिशाचांश भनिएकोले यसमा गृहारम्भ गरिए दुःख, शोक तथा भय हुन्छ । यस बाहेकका स्थानमा आरम्भ गरे पुत्रपौत्र, धन आदि प्राप्त हुन्छ ।

**शिरस्यर्वाक्तना रेखा दिग्विदिङ्मध्यसम्भवः ।**
**ब्रह्मभागपिशाचांशाः शिशूनां यत्र संहतिः ॥२२॥**

भावार्थः- बीचबाट चारै कुनामा जाने छड्के रेखाले जहाँ ब्रह्मभाग र पिशाचांश छुन्छ त्यो ब्रह्मभाग र पिशाचांशका शिशु-समूह रहने स्थान हो ।

**तत्रतत्रविजानीयाद्वसतो मर्मसन्धयः ।**
**मर्माणि सन्धयो नेष्टास्तेष्वेव विनिवेशने ॥२३॥**

भावार्थः- वास्तुमा बस्दा खेरी वास्तुका मर्मस्थान र त्यसका जोर्नीहरुको पनि ज्ञान राख्नु पर्दछ । त्यसमा पहिलो बास गरे मर्मस्थल र जोर्नीहरु शुभ हुँदैनन् ।

घर बनाउन प्रारम्भ गर्ने महिना



**सौम्यफाल्गुनवैशाखमाघश्रावणकार्तिकाः ।**
**मासाः स्युर्गृहनिर्माणे पुत्रारोग्यधनप्रदाः ॥२४॥**

भावार्थः- मंसिर, फागुन, वैशाख, माघ, श्रावण र कार्तिक महिनामा घर बनाउन शुरु गर्नाले पुत्र, आरोग्य र धन प्राप्त हुन्छ ।

वर्ग जुराउने कार्य

**अकारादिषु वर्गेषु दिक्षु प्रागादिषु क्रमात् ।**
**खगेशौतु हरिश्वाख्य सर्पाखुगजमूषकाः ॥२५॥**
**वर्गेशाः क्रमशो ज्ञेयाः स्ववर्गात्पञ्चमोरिपुः ।**
**स्ववर्गे परमा प्रीतिः कथ्यते गणकोत्तमैः ॥२६॥**

भावार्थः- अकारादि (अ,क,च,ट,त,प,य,श) वर्णमा पूर्व आदि ड दिशाका क्रमैले गरुड, बिरालो, सिंह, कुकुर, सर्प, मुसो, हात्ति वा मृग, भेडो वा सुँगुर स्वामी हुन्छन् । आफ्नो वर्गको पाँचौं शत्रु हुन्छ र आफ्नो वर्गमा परम माया हुन्छ । उत्तम गणितज्ञहरुले यो कुरा भनेका छन् ।

## आय-व्यय जुराउने काम

**विभजेदष्टभिः शेषं साधकस्य धनं भवेत् ।**
**व्यत्यये नाशकं तस्य ऋणमल्पं धनाच्छुभम् ॥**
**स्ववर्गं द्विगुणं कृत्वा परवर्गेण योजयेत् ।**
**अष्टभिस्तु हरेद्भागं योधिकःस ऋणी भवेत् ॥२७॥**

भावार्थः- आठले भाग गर्दा शेष रहने साधकको धन हुन्छ । थोरै ऋण र धेरै धन हुनु शुभ हुन्छ । उल्टो हुँदा अशुभ हुन्छ । आफ्नो नाम वर्गाङ्कलाई दोबर गरी त्यसमा अर्काको नामको वर्गाङ्क जोड्नु र ८ ले भाग गर्नु जसको वर्ग धेरै हुन्छ, त्यो ऋणी हुन्छ ।

**आरभ्य साधकं धिष्ण्यं साध्यं यावच्चतुर्गुणम् ।**
**विभजेत्सप्तभिः शेषे साधकस्य धनं तदा ॥२८॥**

भावार्थः- साधकको नक्षत्र संख्याले साध्य नक्षत्र संख्यालाई चारले गुणन गरी सातले भाग गर्दा साधकको धन थाहा हुन्छ ।



**विस्तारआयाम गुणो गृहस्य पदमुच्यते ।**
**तस्माद्धनधनायर्क्षबारांशाः संख्यया क्रमात् ॥२९॥**

भावार्थः- लम्बाई र चौडाइको गुणनफललाई क्षेत्रफल वा पिण्ड भनिन्छ । यसैबाट आय आदि ज्ञान हुन्छ ।

| | |
|---|---|
| गृहको क्षेत्रफल | (नक्षत्र संख्या—१)×१५२+(आयको संख्या—१)×८१+१७ |
| | २१६ |

**धनाधिक्यं गृहं वृध्यै ऋणाधिक्यमशोभनम् ।**
**विषमायं शुभायैव समायं निधनाय च ॥३०॥**

भावार्थः- धेरै धनयुक्त घर वृद्धिकारक तथा अधिक ऋणवाला घर अशुभ हुन्छ । विषम आय शुभ र सम आयमा निधन हुन्छ ।

### नक्षत्र र वास्तु

**धनक्षयंतृतीयर्क्षे पञ्चर्क्षे च यशः क्षयम् ।**
**आत्मक्षयं सप्तमर्क्षे भवत्येवं हि भर्तृभात् ॥३१॥**

भावार्थः- स्वामीको नक्षत्रबाट यदि गृहको नक्षत्र तेश्रो छ भने धनको नाश, पाँचौं भए यश नाश र सातौं भए निश्चय मृत्यु हुन्छ ।

### राशि जुराउने कार्य

**द्विर्द्वादशं निर्धनाय त्रिकोणमच्युताय च ।**
**षडाष्टकं मृत्यवे स्यात् शुभदा राशयः परे ॥३२॥**

भावार्थः- गृह र गृह मालिकको राशि एकआपसमा २-१२, ९-५ तथा ६-८ भए त्यो क्रमैले निर्धन, कलह र मृत्युकारक हुन्छ ।



### नवांश र गृहारम्भ

**सूर्याङ्गारकवारांशा वैश्वानरभयप्रदाः ।**
**इतरग्रहवारांशाः सर्वकामार्थसिद्धये ॥३३॥**

भावार्थः- सूर्य र मङ्गलबारमा तथा तिनको नवांशमा घर बनाए आगोको डर हुने हुन्छ । अरु ग्रहका वार र नवांशमा सबै काम पूर्ण हुन्छ र धन लाभ हुन्छ ।

### घरको ढोका

**नभस्यादिषु मासेषु त्रिषु त्रिषु यथा क्रमात् ।**
**उद्दिङ्मुखो वास्तुपुमान् कुर्यात्तद्दिङ्मुखं गृहम् ॥३४॥**

भावार्थः- भदौंदेखि शुरु गरी तीन तीन महिनासम्म पूर्व आदि दिशामा वास्तु-पुरुषका मुख हुन्छन् । अतः जुन दिशामा वास्तु-पुरुषको मुख हुन्छ त्यतैतिर फर्काएर घरको ढोका बनाउनु शुभ हुन्छ ।

**प्रतिकूलमुखं गेहं रोगशोकभयप्रदम् ।**
**सर्वतोमुखगेहानामेष दोषो न विद्यते ॥३५॥**

भावार्थः- वास्तु पुरुषको मुख भएको भन्दा बाहेकका दिशामा घरको ढोका बनाए रोग, शोक र भय हुन्छ तर चारैतिर ढोका राखिए यो दोष हुँदैन ।

शिलान्यास

**मृत्पेटिकाः स्वर्णरत्नधान्यशैवालसंयुताः ।**
**गृहमध्ये हस्तमात्रे गर्ते न्यासाय विन्यसेत् ॥३६॥**

भावार्थः- गृह शिलान्यास गर्दा माटोको बाकसमा सुन, रत्न, धान र लेउ हाली त्यसलाई १ हात तल राख्नु शुभ हुन्छ ।

शङ्कु



**वास्त्वायामदलं नाभिस्तस्मादव्ध्यङ्गुलत्रयम् ।**
**कुक्षिस्तस्मिन्न्यसेच्छङ्कुं पुत्रपौत्रप्रवर्द्धनम् ॥३७॥**

भावार्थः- वास्तुको विस्तारमा अर्द्धभागमा नाभि छ । नाभिबाट सात अङ्गुलसम्म कुक्षि छ । कुक्षि भागमा शङ्कु रोपणले पुत्र, पौत्र, धन आदि प्राप्त हुन्छ ।

**चतुर्विंशत्रयोविंशत्षोडशद्वादशाङ्गुलैः ।**
**विप्रादीनां शङ्कुमानं स्वर्णवस्त्राद्यलङ्कृतम् ॥३८॥**

भावार्थः- ब्राह्मण आदि वर्णका लागि क्रमैले चौबीस, तेईस र सोह्र अङ्गुलको शङ्कु हुन्छ । यसलाई सुन कपडा आदिले सजाएर राख्नू ।

**खदिरार्जुनशालोत्थं पूगपत्रतरुद्भवम् ।**
**रक्तचन्दनपालाश रक्तशालबिशालजम् ॥३९॥**
**नीपकादम्बकुटजं वैणवं विल्ववृक्षजम् ।**
**शङ्कुंञ्च त्रिधा विभज्याथ चतुरस्रन्ततः परम् ॥४०॥**

**अष्टांशञ्च तृतीयांशं अनस्रमृजुमव्रणम् ।**
**एवंलक्षणसंयुक्तं परिकल्प्य शुभेदिने ॥४१॥**

भावार्थः- खयर, अर्जुनवृक्ष, शाल, सुपारी, तेजपत्र, रक्तचन्दन, पलाँश, रक्तशाल, कुटज?, कदम्ब, बाँस वा बेलको रुखको शङ्कु बनाउनु पर्दछ । शङ्कुलाई तीन भाग गरी पहिलो माथिल्लो भाग चौकुना, दोश्रो बिचको भागलाई आठ कुने र तेश्रो भागलाई प्वाल नभएको सुन्दर गोलाकार बनाउनु पर्दछ । यस्तो लक्षणको शङ्कु शुभ दिनमा निर्माण गर्नू ।

**व्यर्कारवारलग्नेषु चापे चाष्टमवर्जिते ।**
**नैधने शुद्धिसंयुक्ते शुभलग्ने शुभांशके ॥४२॥**
**शुभेक्षितेऽथवा युक्ते लग्ने शङ्कुं विनिःक्षिपेत् ।**
**पुण्याहवाचैर्वादित्रैः पुण्यैः पुण्याङ्गनादिभिः ॥४३॥**

भावार्थः- आइत र मङ्गलवार नभएको, अष्टम भावमा धनु राशि नभएको तथा आठौं स्थानमा कुने ग्रह नभएको स्थितिमा शुभ लग्न तथा शुभ ग्रहको नवांशमा शुभ ग्रहले युक्त वा दृष्ट लग्नमा पुण्य बाचन, बाजा, गीत, एवं सौभाग्यवती स्त्रीहरुको मङ्गलगीतले सहित भई शङ्कु स्थापना गर्नुपर्दछ ।



**शिलान्यास**

**स्वकेन्द्रस्थैस्त्रिकोणस्थैः शुभैस्त्र्यायारिगैः परैः ।**
**लग्नात्षष्ठायचन्द्रेण दैवज्ञार्चनपूर्वकम् ॥४४॥**

भावार्थः- शुभग्रह आफ्नो राशिको भएर केन्द्रमा या त्रिकोणमा, पापग्रह ३।६।११ मा तथा चन्द्रमा लग्नबाट ६।११ मा बसेको बेला ज्योतिषको पूजा गरी शिलान्यास गर्नू ।

**घरका प्रकारहरु**

**एकद्वित्रिचतुःशाला सप्तशालाह्वयाः स्मृताः ।**
**ताःपुनःषड्विधाःशालाःप्रत्येकं दशषड्विधाः ॥४५॥**

भावार्थः- एक, दुई, तीन, चार र सातौं घरका पिण्ड बन्छ । यसको पनि ६-६ भेद छन् । १६ प्रकारका घर हुन्छन् ।

**ध्रुवं धान्यं जयं नन्दं खरं कान्तं मनोरमम् ।**
**सुमुखं दुर्मुखं  क्रूरं शत्रुस्वर्णप्रदं क्षयम् ॥४६॥**
**आक्रन्दं विपुलाख्यं च विजयं षोडशं गृहम् ।**
**गृहाणि षण्णवत्येव तेषां प्रस्तार भेदतः ॥४७॥**

भावार्थः- ध्रुव, धान्य, जय, नन्द, खर, कान्त, मनोरम, सुमुख, दुर्मुख, क्रूर, शत्रु, स्वर्णप्रद, क्षय, आक्रन्द, विपुल र विजय यि सोह्र प्रकारका घर हुन्छन् । प्रस्तार भेदले यिनका ९६ प्रकार हुन्छन् ।

**गुरोरधो लघुः स्थाप्यः पुरस्तादूर्ध्ववन्न्यसेत् ।**
**गुरुभिः पूजयेत्पश्चात्सर्वलब्धविधिर्विधिः ॥४८॥**

भावार्थः- गुरु स्थानको तल लघु राखी यही क्रमले माथितल भाग गर्दै गुणन गर्नु भागफल आउँदछ । (यसका बारेमा विस्तृत कुरा थाहा पाउन लीलावतीको श्रेणी व्यवहार हेर्नू) ।



**कुर्याल्लघुपदेलिन्दं गृहद्वारात्प्रदक्षिणम् ।**
**पूर्वादिगेस्वलिन्देषु गृहभेदास्तु षोडश ॥४९॥**

भावार्थः- गृहद्वारबाट दाहिने हुँदै थोरै पर चौतारो बनाउनू । पूर्व आदि दिशामा रहेका चौताराका क्रम अनुसार पनि १६ प्रकारका घर हुने गर्दछन् ।

घरमा भान्छा आदि कोठाको निर्माण

**स्नानागारं दिशि प्राच्यामाग्नेय्यां पचनालयम् ।**
**याम्यायां शयनागारं नैऋत्यां शस्त्रमन्दिरम् ॥५०॥**
**एवंकुर्यादिदंस्थानं क्षीरपानाज्यशालिकाः ।**
**शय्यामूत्रास्रतद्विद्याभोजनामङ्गलाश्रयाः ॥५१॥**
**धान्यस्त्रीभोगवित्तञ्च श्रृङ्गारायतनानि च ।**
**ईशान्यादिक्रमस्तेषां गृहनिर्माणकं शुभम् ॥५२॥**

**एतेस्वस्थानशस्तानि स्वस्वाय स्वस्वदिश्यपि ।**

भावार्थः- पूर्व दिशामा नुहाउने स्थान, आग्नेयमा भोजनालय, दक्षिण दिशामा शयन कक्ष, नैऋत्यमा हतियार कोठा, ईशानकोणमा दूध-जलपान-घिउ, आग्नेयमा शयन कोठा-शौचालय-शस्त्र र भोजन, नैऋत्यमा धान्य-स्त्रीभोग-धन तथा वायव्य कोणमा प्रसाधनको स्थान बनाउनू । उपरोक्त अनुसार घरमा वस्तु रहने स्थान आ-आफ्नो दिशामा आयका अनुसार सम्झिनु पर्दछ ।

**घरको अगाडि लगाउन नहुने रुख**

**प्लक्षोदुम्वरचूताख्या निम्वस्नुहीविभीतकाः ॥५३॥**
**येकण्टका दग्धवृक्षा वटाश्वत्थकपित्थकाः ।**
**अगस्त्यशिग्रुतालाख्य र्तितिणीकाश्च निन्दिताः ॥५४॥**

भावार्थः- घर अगाडि पाखरी, डुम्री, आँप, नीम, धारे सिउँडी, हर्रो, काँडेदार रुख, डढेको रुख, वर, पीपल, खयर, अगस्त, सहिजन, ताडी र ईमली लगाउन र राख्न निन्दनीय छ । यसले कष्ट हुन्छ ।



**दाजुभाईको घर कता बनाउने**

**पितृवत्स्वाग्रजं गेहं पश्चिमे दक्षिणेऽपिवा ।**

भावार्थः- बाबुकोझैं भाईको घर पनि आफ्नोभन्दा दक्षिण वा पश्चिममा बनाउनू ।

**घरको खम्बा र जग**

**गृहपादा गृहस्तम्भाः समाः शस्ताश्च नाऽसमाः ॥५५॥**

भावार्थः- घरको खम्बा वा जग बराबर हुनु पर्दछ, असमान शुभ हुँदैन ।

**घरको उचाई**

**नात्युच्छ्रितं नातिनीचं कुड्योत्सेधं यथारुचिः ।**

**गृहोपरि गृहादीनामेवं सर्वत्र चिन्तयेत्॥५६॥**

भावार्थः- घरको भित्ताको उचाइ धेरै अग्लो वा धेरै होचो नभई सामान्य राख्नु पर्दछ । यसै गरी घरको तल्ला थप्दा पनि विचार गर्नु पर्दछ ।

पानीको नाली

**गृहादीनां गृहे श्राव्यं क्रमशो विविधं स्मृतम् ।**
**पञ्चालमानं वैदेहं कौरवञ्चैव कन्यकाम्॥५७॥**
**मागधं शुरसेनञ्च वङ्गमेवं क्रमः स्मृतः ।**
**तञ्चतुर्भागविस्तारं संशोधय तदुच्यते ॥५८॥**

भावार्थः- घरबाट नाली बाहिर निकाल्ने बाटो अनेक प्रकारको हुन्छ । पन्जाब, विदेह, कुरु, कन्नौज, मगध, शूरसेन, वङ्ग आदिका अनुसार अनेक थरीको हुन्छ । यसको चौबर मान, मध्यममान वा मध्यदेशका लागि मान भनिएको छ ।



स्थान अनुसारको मान्यता

**पाञ्चालमानमतुलमुत्तरोत्तरवृद्धितः ।**
**वैदेहादीनि शेषाणि मानानिस्युर्यथा क्रमात्॥५९॥**
**पाञ्चालमानं सर्वेषां साधारणमतः परम् ।**
**अवन्तिमानं विप्राणां गान्धारं क्षत्रियस्य च ॥६०॥**
**कौजन्यमानं वैश्यानां विप्रादीनां यथोत्तरम् ।**
**यथोदितजलस्राव्यं द्वित्रिभूमिकवेश्मनः ॥६१॥**

भावार्थः- पन्जाबको मान अरु देशभन्दा बढी हुन्छ । पन्जाबको मान सर्वमान्य हुन्छ । उज्जैनको मान ब्राह्मणले, गान्धारको मान क्षत्रियले र कन्नौजको मान वैश्यले मान्नु पर्दछ वा ब्राह्मण आदिले यथोत्तर वृद्धिमानले परिमाण ग्रहण गर्नु पर्दछ । जुन घर दुई-तिन तल्लाको छ त्यसको पानीको बहाव आफ्नो सुविधा अनुसार बताइएको मध्ये कुनै तरिकाले बनाउन सकिन्छ ।

**पशुशाला**

**उष्ट्रकुञ्जरशालानां ध्वजायोऽप्यथवा गजे ।**
**पशुशालाश्वशालानां ध्वजायोऽप्यथवावृषे ॥**
**द्वारे शप्याशना मन्त्रेध्वजसिंहेवृषाः शुभाः ॥६२॥**

भावार्थः- ऊँट तथा हात्तीका घर बनाउन ध्वज वा गज आय, गाई आदि पशुका तथा घोडाको घर बनाउन ध्वज वा वृष आय दिनु पर्दछ। यसका साथै शैया, आसन, मन्त्र आदिमा ध्वज, सिंह र वृष आय शुभदायक हुन्छ ।

इति श्रीनारदीयसंहितायां वास्तुलक्षणनामैकत्रिंशोऽध्यायः

✷

नारदीय संहिता अन्तर्गत वास्तुसम्बन्धी कुरा बताइएको एकतिसौँ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## द्वात्रिंशोऽध्यायः

### वास्तुलक्षणाध्यायः

वास्तूपूजा

**वास्तुपूजामहं वक्ष्ये नववृश्म प्रवेशने ।**
**हस्तमात्रा लिखेद्रेखा दशपूर्वा दशोत्तराः ॥१॥**

भावार्थः- नयाँ घरमा प्रवेश गर्दा गर्नुपर्ने वास्तुपूजाका बारेमा म बताउँदछु । वास्तुचक्र बनाउन एक हात लामा दश रेखा पूर्वबाट पश्चिम तिर तथा दश रेखा उत्तरबाट दक्षिणतिर खिँच्नू ।

**गृहमध्येतण्डुलोपर्य्येकाशीतिपदं भवेत् ।**
**पञ्चोत्तरान्वक्ष्यमाणाँश्चत्वारिंशत्सु वा न्यसेत् ॥२॥**

भावार्थः- चामलमा कुङ्कुमले रेखा बनाएर वा चौकुने चौकीमा सेतो कपडा बिछ्याएर त्यसमा दश-दश रेखा पूर्वपश्चिम तथा उत्तरदक्षिण खिँची ८१ कोठाको चक्र चामलले भरेर तयार पार्नु पर्दछ । अथवा बताइएको ४५ कोठाको नै निर्माण गर्नुपर्दछ ।

**द्वात्रिंशद्वाह्यतः पूज्यास्तत्रान्तःस्थास्त्रयोदश ।**
**तेषाँस्थानानिनामानि वक्ष्यामि क्रमशोऽधुना ॥३॥**

भावार्थः- बाहिरबाट ३२ कोठामा ३२ देवताको स्थानस्वरुप तथा बीचका १३ कोठामा १३ देवताको बेग्लाबेग्लै नामबाट पूजा गर्नु पर्दछ । ती देवताका स्थान अनुसार नाम भन्दछु ।

**ईशानकोणतोवाह्या द्वात्रिंशस्त्रिदशा अमी ।**
**कृपीटयोनिः पर्जन्यो जयन्तः पाकशासनः ॥४॥**
**सूर्यसत्यो भृशाकाशौ वायुः पूषा च नैऋतः ।**
**गृहर्क्षतो दण्डधरो गान्धर्वो मृगराजकः ॥५॥**
**मृगः पितृगणाधीशस्ततो दौवारिकाह्वयः ।**
**सुग्रीवः पुष्पदन्तश्च जलाधीशस्तथासुरः ॥६॥**
**शेषश्च पापो रोगश्च भोगी मुख्यो निशाकरः ।**
**सोमः सूर्योऽदितिदिती द्वात्रिंशद्त्रिदशा अमी ॥७॥**

भावार्थ:- ईशान कोणबाट क्रमैले अग्नि, पर्जन्य, जयन्त, पाकशासन, सूर्य, सत्य, भृश, आकाश, वायु, पूषा, नैऋत, दण्डधर, गान्धर्व, मृगराजक, मृग, पितृ, गणाधीश, दौवारिक, सुग्रीव, पुष्पदन्तक, जलाधीश, असुर, शेष, पाप, रोग, भोगी, मुख्य, निशाकर, सोम, सूर्य, अदिति र दिति : यी ३२ देवता पूज्य हुन् ।

**अथेश्यान्यादि कोणस्थाश्चत्वारस्तत्समीपगाः ।**
**आपः सवितृसंज्ञश्च जयोरुद्रः क्रमादमी ॥८॥**
**मध्ये नवपदो ब्रह्मा तस्याष्टौ च समीपगाः ।**
**एकान्तराः स्युः प्रगाद्याः परितो ब्रह्मणः स्मृतः ॥९॥**
**अर्यमा सविता चैव विवस्वान्विबुधाधिपः ।**
**मित्रोऽथ राजयक्ष्मा च तथा पृथ्वीधराह्वयः ॥१०॥**

भावार्थ:- ईशान आदि चारै कुनाको नजिकै आप, सविता, जय र रुद्रको स्थापना गरी पूजा गर्नू । बीचका नौ कोठा ब्रह्माका हुन् तथा त्यसका चारैतिर पूर्वबाट क्रमैले एक-एक छोडी अर्यमा, सविता, विवस्वान्, विबुधाधिप, मित्र, राजयक्ष्मा, पृथ्वीधर र आपवत्स : यी आठ देवताका स्थान हुन् । यसरी जम्मा पैंतालीस देवस्थान पूज्य भए ।



**आपवत्सोष्टमः पञ्चचत्वारिंशत्सुरा अमी ।**
**आपश्चैवापत्सश्च पर्जन्योऽग्निर्दितिः क्रमात् ॥११॥**
**पदिकानाञ्च वर्गोऽयमेवं कोणेष्वशेषतः ।**
**तन्मध्ये विंशतिर्बाह्या द्विपदास्तेषु सर्वदा ॥१२॥**

भावार्थ:- आपवत्स आदि पहिला शब्दको सम्बन्ध पहिलेको श्लोकमा भइसक्यो । आप, आपवत्स, पर्जन्य, अग्नि र दिति : यी क्रमैले चार कुनामा रहन्छन् । यी पदिकामा आउँछन् र एकपदीय हुन् । पछिका एकपदीयका अतिरिक्त बाँकी बीस कोठामा हुने देवता द्विपदी हुन् ।

**अर्यमा च विवस्वाँश्च मित्रः पृथ्वीधराह्वयः ।**
**ब्रह्मणः परितो दिक्षुचत्वारस्त्रिपदाः स्मृताः ॥१३॥**

भावार्थ:- अर्यमा, विवस्वान्, मित्र, र पृथ्वीधर गरी ब्रह्माका चारैतिरका चार देवता त्रिपद हुन् ।

**ब्रह्माणञ्च तथैकद्वित्रिपदानर्च्चयेत्सुरान् ।**
**वास्तुमन्त्रेण वास्तुज्ञो दूर्वादध्यक्षतादिभिः ॥१४॥**

भावार्थः- ब्रह्मा नौ कोठामा, एक पदीय २०, द्विपदीय ४० तथा त्रिपदीय १२ गरी कूल ८१ कोठामा वास्तुमन्त्रले वास्तुशास्त्र जान्नेले दही र अक्षताले पूजा गर्नू ।

**ब्रह्ममन्त्रेण वा श्वेतवस्त्रयुग्मं प्रदापयेत् ।**
**ताम्बूलञ्च ततो दत्वा प्रार्थयेद्वास्तुपूरुषम् ॥१५॥**

भावार्थः- ब्रह्माका मन्त्रले दुई सेता कपडा चढाउनू । यस पछि पान चढाएर वास्तु पुरुषको विनम्रतापूर्वक प्रार्थना गर्नू ।

**आवाहनादि सर्वोपचारॉँश्च क्रमशस्तथा ।**
**नैवेद्यं विविधान्नेन वाद्याद्यैश्च समर्पयेत् ॥१६॥**

भावार्थः- आवाहन आदि सबै थरी पूजा क्रमैले गरेर अनेक नैवेद्य र वाद्य पनि चढाउनू ।



**वास्तुपुरुषनमस्तेऽस्तु भूशय्याभिरतः प्रभो ।**
**मद्गृहं धनधान्यादिसमृद्धं कुरु सर्वदा ॥१७॥**

भावार्थः- भूमिमा सुतेर आनन्दित हुने हे वास्तु प्रभु तपाईँलाई नमस्कार छ । प्रभु मेरो घरलाई सदा धनधान्यले समृद्ध पारि दिनुहोस् ।

**इति प्राथ्र्य यथाशक्तिः दक्षिणामर्चकाय च ।**
**दद्यात्तदग्रे विप्रेभ्यो भोजनञ्च स्वशक्तितः ॥१८॥**

भावार्थः- यसरी प्रार्थना गरी पूजा गर्ने ब्राह्मणलाई गच्छे अनुसार दक्षिणा दिनू तथा त्यस बेला शक्ति अनुसार ब्राह्मणलाई भोजन पनि गराउनू ।

**अनेन विधिना सम्यग्वास्तुपूजां करोति यः ।**
**आरोग्यं पुत्रलाभञ्च धनं धान्यं लभेन्नरः२ ॥१९॥**

भावार्थः- यो विधिले राम्रोसँग जसले वास्तुको पूजा गर्दछ त्यो मानिस आरोग्य, पुत्र, धन, धान्य आदिको लाभ गर्दछ ।

**अकपाटमनाच्छन्नमदत्तबलिभोजनम् ।**
**गृहन्न प्रविशेदेव विपदामाकारं हि तत् ॥२०॥**

भावार्थः- मूल ढोकाको छाँया नगरी तथा क्षेत्रपाल बलि र ब्राह्मण भोजन नगराई गृहप्रवेश नगर्नू किनकि यसले गर्दा त्यो घर आपत्तिको घर हुन्छ ।

इति श्रीनारदीयसंहितायां द्वात्रिंशत्तमः वास्तुलक्षणाध्यायः

नारदीय संहिता अन्तर्गत वास्तुसम्बन्धी कुरा बताइएको बत्तिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## वास्तुपूजाको ८१ कोठा

पूर्व



६१ (ईशान)    ५४ इन्द्र    ५५ अग्नि

४६ चरक्ये(धूम्र), ६२ ब्रह्मा    ५० स्कन्द (रक्त)    ४७ विदारकी (रक्त)

५३.पिलिपिञ्छ (पहेंलो) । ६०.सोम (उत्तर)

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| १. जयन्त (रातो) | २. पर्जन्य (पहेंलो) | ३. जयन्त (पहेंलो) | ४.इन्द्र (पहेंलो) | ५.सूर्य (पहेंलो) | ६.सत्य (सेतो) | ७.भृश (कालो) | ८.आकाश (कालो) | ९.वायु (धूम्र) |
| ३२.दिति (पहेंलो) | ३३.आप (सेतो) | ३.जयन्त (पहेंलो) | ४.इन्द्र (पहेंलो) | ५.सूर्य (पहेंलो) | ६.सत्य (सेतो) | ७.भृश (कालो) | ३४.सावित्र (सेतो) | १०.पू.षा. (रातो) |
| ३१.अदिति (पहेंलो) | ३१.अदिति (पहेंलो) | ४४.आपवत्स (सेतो) | ३७.अर्यमा (कालो) | ३७.अर्यमा (कालो) | ३७.अर्यमा (कालो) | ३८.सविता (रातो) | ११.वितथ (सेतो) | ११.वितथ (सेतो) |
| ३०.सर्प (कालो) | ३०.सर्प (कालो) | ४३.पृथ्वीघट (सेतो) | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ३९.विवस्वान (सेतो) | १२.गृहक्षत (पहेंलो) | १२.गृहक्षत (पहेंलो) |
| २९.सोम (सेतो) | २९.सोम (सेतो) | ४३.पृथ्वीघट (सेतो) | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ३९.विवस्वान (सेतो) | १३.यम (कालो) | १३.यम (कालो) |
| २८.मल्लाट (कालो) | २८.मल्लाट (कालो) | ४३.पृथ्वीघट (सेतो) | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ४५. ब्रह्मा वास्तुपुष्प,पृथ्वी | ३९.विवस्वान (सेतो) | १४.गन्धर्व (रातो) | १४.गन्धर्व (रातो) |
| २७.मुख्य (रातो) | २७.मुख्य (रातो) | ४२.राजयक्ष्मा (रातो) | ४१.मित्र (सेतो) | ४१.मित्र (सेतो) | ४१.मित्र (सेतो) | ४०.इन्द्र (रातो) | १५.भृंगराज (कालो) | १५.भृंगराज (कालो) |
| २६.अहि (रातो) | ३६.रुद्र (रातो) | २३.शोष (कालो) | २२.असुर (पहेंलो) | २१.वरुण (सेतो) | २०.पुष्पदन्त (रातो) | १९.सुग्रीव (सेतो) | ३५.जय (सेतो) | १६.मृग (पहेंलो) |
| २५.रोग (रातो) | २४.पाप (पहेंलो) | २३.शोष (कालो) | २२.असुर (पहेंलो) | २१.वरुण (सेतो) | २०.पुष्पदन्त (रातो) | १९.सुग्रीव (सेतो) | १८.दौवारिक (रातो) | १७.पितर (रातो) |

५१.अर्यमा (कालो) । ५६ यम(कालो) (दक्षिण)

४९. पूर्व राक्षसी (धूम्र)    ५२. जृम्भक(रातो)    ६३.अनन्त    ४८.पूतना (पहेंलो)

५९.वायु    ५८. वरुण (सेतो)    ५७. निर्ऋति

पश्चिम

## त्रयस्त्रिंशोऽध्यायः

### अथ यात्राप्रकरणम्

**अथ यात्रा तथा नृणामभीष्टफलसिद्धये ।**
**स्यात्तथा तां प्रवक्ष्यामि सम्यग्विज्ञातजन्मनाम्॥१॥**

अन्वयः - अथ विज्ञात जन्मनां नृणां अभीष्टफलसिद्धये यथा यात्रा स्यात् तथा तां प्रवक्ष्यामि ।

भावार्थः- अब जस्तो किसिमले गरिने यात्रा द्विजका लागि सोचे अनुसार फलदायक हुन्छ त्यस्तो यात्राको विधिलाई राम्ररी सोचेर बताउँदछु ।

**अज्ञातजन्मनां नृणां फलाप्तिर्घुणवर्णवत् ।**
**प्रश्नोदयनिमित्ताद्यैस्तेषामपि फलोदयः ॥२॥**

अन्वयः - अज्ञातजन्मनां नृणां फलाप्तिः घुणवर्णवत् (भवेत्), तेषां अपि फलः उदयः प्रश्नोदयनिमित्ताद्यैः (भवेत्) ।



भावार्थः- जन्मसमयको जन्मचक्र (चिना) नहुँदा पनि घुनले बनाउने अक्षरको सिद्धान्त (अनायाश) ले फल पाइने गर्दछ । तर यस्तो सधैं हुँदैन । यसैले प्रश्नकालीन लग्न मार्फत तिनलाई पनि फल प्राप्त हुन्छ ।

यात्रामा अशुभ तिथिहरु

**षष्ट्यष्टमीद्वादशी च रिक्तामापूर्णिमासु च ।**
**यात्रा शुक्लप्रतिपदि निधनायाधनाय च॥३॥**

अन्वयः षष्टी अष्टमी द्वादशी रिक्ता अमा पूर्णिमासु च शुक्लप्रदिपदि च यात्रा निधनाय अधनाय च (भवति) ।

भावार्थः- षष्ठी, अष्टमी, द्वादशी, रिक्ता (४, ९, १४), औंसी, पूर्णिमा र शुक्ल-परेवाको यात्राले निधन वा धनको हानी हुन्छ ।

### चन्द्रमा र यात्रा

**पौष्णेर्केन्द्वश्विमित्राग्निहरितिष्यवसूडुषु ।**
**नवसप्तपञ्चमाऽऽयेषु यात्राऽभीष्टफलप्रदा ॥४॥**

अन्वयः - पौष्ण अर्क इन्दु अश्वि मित्र अग्नि हरि तिष्य वसु उडुषु (तथा) नव सप्त पञ्चम आयेषु (चन्द्रे सति) यात्रा अभीष्ट फलप्रदा (भवति) ।

भावार्थः- रेवती, हस्ता, मृगशिरा, अश्विनी, अनुराधा, कृत्तिका, श्रवण, पुष्य र धनिष्ठा : यी नक्षत्रमा तथा जन्म राशिबाट नवौं, सातौं, पाँचौं तथा एघारौं स्थानमा चन्द्रमा हुँदा गरिने यात्राले सोचेको फल दिन्छ ।

### यात्रामा बार

**न मन्देन्दुदिने प्राचीं न व्रजेदक्षिणां गुरौ ।**
**सितार्कयोर्न प्रतीचीं नोदीचीं ज्ञारयोर्दिने ॥५॥**



अन्वयः - मन्द इन्दु दिने प्राचीं न (गच्छेत्), गुरौ दक्षिणां (दिशि) न व्रजे, सित अर्कयोः प्रतीचीं न (तथा) ज्ञ आरयोः दिने उदीचीं (च) न (गच्छेत्) ।

भावार्थः- शनिबार र सोमबार पूर्वतिर, बिहीबार दक्षिणतिर, शुक्रबार र आइतबार पश्चिमतिर तथा मङ्गलबार र बुधबार उत्तरतिरको यात्रा नगर्नू । (दिक्शूल हुने हुनाले यो यात्रा कष्ट एवं हानी दिने खालको हुन्छ) ।

### यात्राको दिशा

**इन्द्रोजपादचतुरास्यार्यमर्क्षाणि पूर्वतः ।**
**शूलानि सर्वद्वाराणि मैत्रार्केज्याश्विभानि च ॥६॥**

अन्वयः - इन्द्रः अजपाद चतुरास्य अर्यमा (एते) ऋक्षाणि पूर्वतः (क्रमेण) शूलानि, (तथा च) मैत्र अर्क इज्य अश्वि भानि च सर्वद्वाराणि (अस्ति) ।

भावार्थः- ज्येष्ठा, पूर्वभाद्रपदा, रोहिणी र उत्तराफाल्गुनी : यी नक्षत्र क्रमैले पूर्व आदि दिशाका शूल नक्षत्र हुन् । त्यस्तै अनुराधा, हस्ता, पुष्य र अश्विनी क्रमैले पूर्व आदि दिशाका लागि सिद्ध नक्षत्र हुन् । यी नक्षत्रमा गरिने यात्रा सधैं शुभद हुन्छ ।

**क्रमाद्दिग्द्वारभानि स्युः सप्तसप्ताग्निधिष्ण्यतः ।**
**वाय्यग्निदिग्गतं दण्डं परिघन्तु न लङ्घयेत् ॥७॥**

अन्वयः - अग्निधिष्ण्यतः सप्त सप्त क्रमात् दिग्द्वारभानि स्युः, वायु अग्नि दिग्गतं परिघं तु न लङ्घयेत् ।

भावार्थः- कृत्तिका नक्षत्रबाट सात-सात नक्षत्र पूर्व आदि दिशाका दिग्द्वार नक्षत्र हुन् । वायव्य र आग्नेय कोणमा दण्डझैं परिघदण्ड हुन्छ । यसको उल्लङ्घन हुनु हुँदैन ।

**आग्नेय्यां पूर्वदिग्धिष्ण्यैर्विदिशश्चैवमेव ही ।**
**दिग्राशयस्तु क्रमशो मेषाद्याश्च पुनः पुनः ॥८॥**

भावार्थः- पूर्वदिग्द्वार नक्षत्रमा आग्नेय दिशाको, दक्षिण दिग्द्वार नक्षत्रमा नैऋत्य दिशाको, पश्चिम दिग्द्वार नक्षत्रमा वायव्य दिशाको तथा उत्तर दिग्द्वार नक्षत्रमा ईशान दिशाको यात्रा गर्नु पर्दछ । मेष आदि राशिहरुमा यि क्रमशः पूर्वबाट शुभ हुन्छन् र यिनमा चन्द्रमाको वास बताइएको छ ।

**दिगीशाः सूर्यशुक्राररान्ह्वार्कीन्दुज्ञसूरयः ।**
**दिशीश्वरे ललाटस्थे यातुर्न पुनरागमः ॥९॥**

भावार्थः- पूर्वका सूर्य, आग्नेयका शुक्र, दक्षिणका मङ्गल, नैऋत्यका राहु, पश्चिमका शनि, वायव्यका चन्द्रमा, उत्तरका बुध र ईशानका अधिपति बृहस्पति हुन् । यी सामुन्ने हुँदा यात्रा शुरु गर्ने यात्री फर्कँदैन ।

ललाट योग र यात्रा

**लग्नस्थो भास्करः प्राच्यां दिशि यातुर्ललाटगः ।**
**द्वादशैकादशः शुक्रः आग्नेय्यान्तु ललाटगः ॥१०॥**
**दशमस्थो कुजो लग्नाद्याम्यायान्तु ललाटगः ।**

**नवमोऽष्टमगो राहुर्नैऋत्यान्तु ललाटगः ॥११॥**
**लग्नात्सप्तमगः सौरिः प्रतीच्यान्तु ललाटगः ।**
**षष्ठपञ्चमगश्चन्द्रो वायव्यान्तु ललाटगः ॥१२॥**
**चतुर्थस्थानगः सौम्य उत्तरस्यां ललाटगः ।**
**द्वित्रिस्थानगतो जीव ईशान्यान्तु ललाटगः ॥१३॥**
**ललाटगन्तु सन्त्यज्य जीवितेच्छुर्व्रजेन्नरः ।**

भावार्थः- यदि यात्रा कालको लग्नमा सूर्य भए पूर्व दिशामा जानेका लागि ललाट योग हुन्छ त्यसैले यसमा यात्रा नगर्नू । यसै गरी ११ र १२ को शुक्र हुँदा आग्नेयमा जानेका लागि, १० मा मङ्गल हुँदा दक्षिण जानेका लागि, ८ र ९ मा राहु भए नैऋत्यमा जानेका लागि, ७ मा शनि हुँदा पश्चिम जानेका लागि, ५ र ६ मा चन्द्रमा हुँदा वायव्य जानेका लागि, ४ मा बुध हुँदा उत्तर जानेका लागि तथा २ र ३ मा बृहस्पति हुँदा ईशानतिर जानेका लागि ललाट योग हुन्छ । लामो आयु चाहने व्यक्तिले उपरोक्त ललाट योगमा यात्रा गर्नु हुँदैन ।

राजाको यात्रा



**विलोमगो ग्रहो यस्य यात्रालग्नोपगो यदि ॥१४॥**
**तस्य भङ्गप्रदो राज्ञस्तद्वर्गोऽपि विलग्नगः ।**
**रवीन्द्वयनयोर्यानमनुकूलं शुभप्रदम् ॥१५॥**

भावार्थः- राजाका लागि जुन ग्रह जन्म लग्नमा अशुभ फल दिने छ त्यो ग्रह यात्रा गर्ने बेलामा लग्नमा छ भने यात्रा निष्फल हुन्छ । साथै, त्यो राशिको नवमांश पनि अशुभ हुन्छ । सूर्य र चन्द्रको अनुकूल अयनमा यात्रा गर्नु शुभ फलदायक हुन्छ ।

चन्द्रसूर्य र यात्रा

**तदभावे दिवारात्रौ यात्रा यातुर्वधोऽन्यथा ।**

भावार्थः- यदि चन्द्र र सूर्य फरकफरक अयनमा छ भने सूर्यको अयनमा दिनको र चन्द्रमाको अयनमा रातको यात्रा शुभ हुन्छ ।

**शुक्र ग्रह र यात्रा**

**मूढे शुक्रे कार्यहानिः प्रतिशुक्रे पराजयः ॥१६॥**
**प्रतिशुक्रकृतं दोषं हन्ति शुक्रो ग्रहा नहि ।**
**वशिष्ठः काश्यपेयोऽत्रिर्भरद्वाजः सगौतमः ॥१७॥**
**एतेषां पञ्चगोत्राणां प्रतिशुक्रो न विद्यते ।**
**एकग्रामे विवाहे च दुर्भिक्षे राजविप्लवे ॥१८॥**
**द्विजक्षोभे नृपक्षोभे प्रतिशुक्रो न विद्यते ।**
**नीचगोऽरिगृहस्थो वा वक्रगो वा पराजितः ॥१९॥**
**यातुर्भङ्गप्रदः शुक्रः स्वांशस्थे च जयप्रदः ।**
**स्वेष्टलग्नेष्टराशौ वा शत्रुभात्षष्ठगोऽपि वा ॥२०॥**
**तेषामीशस्य राशौ वा यातुर्मृत्युर्न संशयः ।**

भावार्थः- शुक्रास्तमा यात्रा गर्नाले कार्यहानी हुन्छ भने सम्मुख शुक्र भएको बेलाको यात्रामा पराजय हुन्छ । सम्मुख शुक्रको दोष शुक्रले नै हटाउन सक्दछ अरु ग्रहले सक्दैनन् । वशिष्ठ, कश्यप, अत्रि, भारद्वाज र गौतम : यी पाँच गोत्रीलाई सम्मुख शुक्र तथा दाहिने, देब्रे आदि दोष लाग्दैन । एउटै गाऊँमा, विवाहमा, अकाल, राजविप्लव, ब्राह्मणको श्राप र राजक्रोधसँग सम्बन्धित यात्रामा शुक्रको दोष हुँदैन । नीचराशिमा, शत्रुगृहमा, वक्रीमा तथा पराजित अवस्थामा शुक्रले यात्रीको कार्य नाश गर्दछ । तर यदि शुक्र आफ्नो नवांशमा छ भने त्यो जय दिने हुन्छ । आफ्नो इष्टलग्नबाट आठौं राशि वा षष्ठभावबाट छैटौं राशि वा षष्ठेश र अष्टमेशका राशिमा रहेको शुक्र यात्रुको मृत्युको निश्चय नै कारण बन्दछ ।

**यात्रा दोष**

**जन्मेशाष्टमलग्नेशौ मिथो मित्रव्यस्थितौ ॥२२॥**
**जन्मराश्यष्टमर्क्षेषु दोषा नश्यन्ति भावतः ।**
**क्रूरग्रहेक्षितो युक्तो द्विस्वभावोऽपि भङ्गदः ॥२२॥**
**याने शुभैरदृष्टश्च शुभयुक्तेक्षितः शुभः ।**
**वस्वन्त्याद्र्धादिपञ्चर्क्षे सङ्ग्रहे तृणकाष्ठयोः ॥**
**याम्यादिग्गमनं शय्यांकुर्यान्नोगृहगोपनम् ॥२३॥**
**जन्मोदये लग्नगते दिग्लग्ने लग्नगोऽपि वा ।**

**ताभ्याश्चत्वारि केन्द्रेषु याते शत्रुक्षयो भवेत्॥२४॥**
**शीर्षोदये लग्नगते दिग्लग्ने लग्नतोऽपि वा ।**
**शुभवर्गेऽत्र वा लग्ने यातुः शत्रुक्षयो भवेत्॥२५॥**
**शीर्षोदये जन्मराशे राशेर्वा निधनोदये ।**
**तयोराशिस्थिते राशौ यातुः शत्रुक्षयो भवेत्॥२६॥**

भावार्थः- परस्पर मित्रस्थानमा रहेका जन्मलग्नेश तथा जन्म लग्नबाट आठौँ स्थानको मालिक जन्मराशिबाट आठौँ भएर पनि सबै दोषलाई नष्ट गर्दछ । क्रूरग्रहले युक्त, दृष्ट तथा द्विस्वभाव राशिको लग्नले कार्यलाई नष्ट पार्ने हुन्छ । यात्रालग्नमा यदि शुभग्रहको दृष्टि छैन भने त अशुभ तथा शुभ ग्रहको दृष्टि वा योग शुभ हुन्छ । धनिष्ठा नक्षत्रको आधा भागदेखि रेवतीको अन्तसम्मलाई पञ्चक भनिन्छ । यसमा दक्षिण दिशाको यात्रा, शैया निर्माण वा घरको साजसज्जा, घाँसपात र दाउरा जम्मा गर्न राम्रो हुँदैन । जन्मलग्नमा, दिक्लग्नमा तथा तात्कालिक लग्न एवं चारै केन्द्रमा शुभग्रहको योग हुँदा यात्रा गर्नु विशेष लाभकारी हुन्छ । शीर्षोदय लग्न (५,६,७,८,११) भए वा दिग्द्वार लग्न भए वा शुभग्रहको राशिलग्न भए यात्रा गर्नेको शत्रुको नाश हुन्छ । शीर्षोदय राशिको जन्म भए त्यो राशिमा वा शुभ ग्रहको योग लग्नमा यात्रा यदि गरिए त्यसको शत्रुको नाश हुन्छ ।



युद्ध यात्रा

**शत्रुजन्मोदये जन्म राशिश्च निधनन्तयोः ।**
**यो राशिस्तत्र वै राशौ यातुः शत्रुक्षयो भवेत्॥२७॥**

भावार्थः- शत्रुको जन्मराशि (लग्न) तथा जन्मलग्नबाट आठौँ राशि यदि यात्रा कालमा छ भने शत्रुको क्षय हुन्छ ।

यात्रामा अशुभ लग्न

**वक्रे तथा मीनलग्ने यातुर्मीनांशकेऽपि वा ।**
**निन्द्यं निखिलयात्रासु घटलग्नं घटांशकम्॥२८॥**

भावार्थः- घटलग्न वा सोको नवमांश, मीन लग्न वा सोको नवांश तथा वक्री ग्रहको राशिलग्न यात्रामा सर्वथा त्याज्य हुन्छ ।

जलसम्बन्धी कार्यमा शुभ लग्न

जलोदये जलांशे वा जलजातेः शुभावहाः ।

भावार्थः- जलचर राशिको लग्न वा नवमांशमा जलसँग सम्बन्धित कार्य गर्नु लाभदायक हुन्छ ।

द्वादश भाव

मूर्तिः कोशोऽथ धानुष्कं वाहनं मन्त्रसंज्ञकम् ॥२९॥
शत्रुर्मार्गस्तथायुश्च भाग्यं व्यापारसंज्ञितः ।
प्राप्तिरप्राप्ति रुदयाद्भावाः स्युर्द्वादशैव तु ॥३०॥

भावार्थः- मूर्ति, कोष, धनुर्धारी, वाहन, मन्त्र, शत्रु, मार्ग, आयु, भाग्य, व्यापार प्राप्ति र व्यय यि लग्न आदि गरिएका बाह्र भावका नाम हुन् ।

भाव अनुसार ग्रहको फल



हन्ति पापस्त्वायवर्जं भावात् सूर्यमहीसुतौ ।
न निहन्तारिगेहञ्च सौम्याः पुष्यन्त्यरि विना ॥३१॥

भावार्थः- पापग्रह एघारौं भन्दा बाहेकका भावमा अशुभ फलदायक तथा सूर्य, मङ्गल शत्रु भावमा शुभ दाय हुन्छन् । शुभ ग्रह षष्ठ भन्दा बाहेकका स्थानमा शुभ भनी बताइएको छ ।

शुक्र, चन्द्र र यात्रा

शुक्रोऽस्तं चापि पुष्टोऽपि मूर्तिर्मृत्युश्च चन्द्रमाः ।
याम्यदिग्गमनं...।

भावार्थः- यात्रामा सातौं शुक्र भए लग्न तथा आठौं चन्द्र पूर्ण बलियो नै किन नहोस् अशुभ हुन्छ । यसबेला विशेषतः दक्षिणको यात्रा कष्टदायी हुन्छ ।

### रिक्ता तिथि र यात्रा

**...रिक्ता सर्वकाष्ठासु यायिनाम् ॥३२॥**

भावार्थः- रिक्तामा यात्रा गर्ने व्यक्ति चाहे जुन दिशामा जान चाहोस् सर्वथा निन्दित हुन्छ ।

### अभिजित योग र यात्रा

**अभिजित् क्षणयोगोऽयमभीष्टफलसिद्धिदः ।**
**पञ्चाङ्गशुद्धिरहिते दिवसेऽपि फलप्रदः ॥३३॥**

भावार्थः- यात्रामा अभिजितको योग हुँदा यात्रा गर्नु शुभद हुन्छ । पञ्चाङ्ग शुद्धि नभएका दिनमा पनि अभिजित लग्नको योग शुभदायक हुन्छ ।

**यात्रायोगे विचित्रास्तान्येन वक्ष्ये इतस्ततः ।**
**फलसिद्धिर्योगलग्नाद्राज्ञो विप्रस्य धिष्ण्यतः ॥३४॥**



भावार्थः- जुन योगमा गरिने यात्राले अनेक थरी फल दिन्छ अब त्यसका बारेमा बताइन्छ । योगलग्न मार्फत राजालाई र नक्षत्र मार्फत ब्राह्मणलाई सिद्धि प्राप्त हुन्छ ।

### योग, अतियोग र योगातियोगमा यात्रा

**मूर्तितः शक्तितोन्येषां शकुनैस्तस्करस्य च ।**
**कृन्द्रत्रिकोणेष्वेकेन योगः शुक्रेण सूरिणा ॥३५॥**
**अतियोगो भवेद्द्वाव्यां त्रिभिर्योगोऽधियोगकः ।**
**योगे यियासतां क्षेममतियोगे जयो भवेत् ॥३६॥**
**योगातियोगे क्षेमञ्च विजयाय विभूतयः ।**

भावार्थः- अरु वैश्य एवं शूद्रका लग्न तथा त्यसको बलको आधारमा चोरका शुभ साइतबाट सिद्धि हुन्छ । केन्द्र र त्रिकोणमा यदि बृहस्पति वा शुक्रको उत्तम योग भए योग, दुवैको योग भए अतियोग र ३ वटा शुभ ग्रह (शुक्र, बृहस्पति र बुध वा पूर्णचन्द्र) को योग भए त्यसलाई

अधियोग वा योगातियोग भनिन्छ । योगमा यात्रा गर्नाले कल्याण, अतियोगमा गर्नाले विजय र योगातियोगमा गर्नाले कल्याण, विजय र ऐश्वर्य लाभ हुन्छ ।

राजाको युद्ध यात्रा

**व्यापारशत्रुमूर्तिस्थैश्चन्द्रमन्ददिवाकरैः ॥३७॥**
**रणे गतस्य भूपस्य जयलक्ष्मी प्रमाणता ।**

भावार्थः- दशौं, छैटौं र लग्नमा क्रमशः चन्द्रमा, शनि र सूर्य छन् भने युद्धमा गएका राजाले अवश्य जित हासिल गर्नेछन् ।

**शुक्रयज्ञार्किभौमेषु लग्नं वास्तं त्रिशक्तिषु ॥३८॥**
**यातस्याग्रे वैरिचमू बहुला क्षयपेद्यतः ।**
**लग्नस्थे त्रिदशाचार्ये धनायस्थे परेग्रहे ॥३९॥**

भावार्थः- शुक्र, बुध, शनि र मङ्गल क्रमशः लग्न, सातौं, तेश्रो र दशौं स्थानमा हुँदा अथवा लग्नमा बहस्पति तथा धन र लाभ स्थानमा बाँकी ग्रह हुँदा यात्रा गर्ने राजाका सामु असङ्ख्य सेना हुने शत्रु पनि समाप्त हुन्छ ।



**लग्नस्थे त्रिदशाचार्ये धनायस्थे परे ग्रहे ।**
**गतस्य राज्ञोऽरिसेना प्रयाति यममन्दिरम् ॥**
**लग्ने शुक्रे रवौ लाभे चन्द्रे वन्धुस्थिते तदा ॥४०॥**

भावार्थः- लग्नमा शुक्र, एघारौंमा सूर्य र तेश्रोमा चन्द्रमा हुँदा युद्धयात्रामा निस्कने राजाका सेनाले शत्रुका सेनालाई यमपुरी पठाउँदछन् ।

**निहन्ति यातुः पृतनां केशवः पूतनामिव ।**
**त्रिकोणकेन्द्रगााः सौम्याः क्रूरास्त्र्यायगता यदि ॥४१॥**

भावार्थः- सौम्य ग्रह त्रिकोण र केन्द्रमा तथा क्रूरग्रह तेश्रो र एघारौं भावमा हुँदा यात्रा गर्नेले केशव भगवानले पूतनालाई मारेजस्तै शत्रुलाई मार्दछ ।

**यस्य यात्रारिलक्ष्मीस्तमुपैति चाभिसारिका ।**
**जीवार्कचन्द्राः लग्नारिरन्ध्रगााः यदिगच्छतः ॥४२॥**

भावार्थः- गुरु, सूर्य र चन्द्रमा क्रमशः लग्न, शत्रु र आठौं भावमा हुँदा युद्धयात्रामा निस्कने राजालाई कुनै नायकलाई अभिसारिका स्वतः प्राप्त भएजसरी शत्रुको लक्ष्मी प्राप्त हुन्छिन् । (अभिसारिका नायिका भनेकी साङ्केतिक स्थानमा आफैं जाने वा नायकलाई बोलाउने नायिका हुन्) ।

**तस्याग्रे स्वल्पमैत्रीव न स्थिरा रिपुवाहिनी ।**
**स्वोच्चस्थे लग्नगे जीवे चन्द्रे लाभगते यदि ॥४३॥**

भावार्थः- युद्धयात्राका समयमा उच्चराशिका गुरु लग्नमा र चन्द्रमा लाभ स्थानमा बसेका छन् भने त्यस्ता राजाका सामु क्षणिक मित्रतासमान शत्रु सेना टिक्न सक्दैन (भाग्दछ) ।

**त्रिषडायेषु सौरारौ बलवाँश्च शुभो यदि ।**
**यात्रायां नृपतेस्तस्य हस्ते स्याच्छत्रुमेदिनी ॥४४॥**



भावार्थः- ३।६ र ११ स्थानमा शनि र मङ्गल भई बाँकी ग्रह बलिया भएर शुभ स्थानमा हुँदा गरिएको युद्धयात्राले शत्रुको राज्य प्राप्त हुन्छ ।

**स्वोच्चस्थे लग्नगे जीवे चन्द्रे लाभगते यदि ।**
**गतो राजा रिपून् हन्ति पिनाकी त्रिपुरं यथा ॥४५॥**

भावार्थः- गुरु उच्चराशिका भई लग्नमा र चन्द्रमा लाभ स्थानमा बसेको समयमा युद्धयात्रामा निस्कने राजाले शिवले त्रिपुरासुरलाई मारे जसरी शत्रुलाई मार्दछ ।

**मस्तकोदये शुक्रे लग्नस्थे लाभगे गुरौ ।**
**गतो राजा रिपून् हन्ति कुमारस्तारकं यथा ॥४६॥**

भावार्थः- शुक्र उच्चराशिमा भई लग्नमा बसेको र गुरु लाभस्थानमा बसेको बेलामा युद्धयात्रामा राजाले शत्रुलाई कार्तिकेयले तारकासुरलाई मारे जसरी मार्दछ ।

**जीवे लग्नगते शुक्रे केन्द्रे वापि त्रिकोणगे ।**
**गतो जयत्यरीन् राजा कृष्णवत्यां यथा व्रणम् ।।४७।।**

भावार्थः- लग्नमा गुरु तथा केन्द्रमा वा त्रिकोणमा शुक्र भएका बखत युद्धयात्रामा निस्कने राजाले शत्रुलाई त्यसरी नै नाश नाश गर्दछ जसरी कृष्णवती (ओखती वा बूटी?) ले घाउखटिरालाई नाश गर्दछ ।

**लग्नगे ज्ञे शुभे केन्द्रे धिष्णे चोपकुले गते ।**
**नृपामुष्णन्त्यरीन् ग्रीष्मे ह्रदानि वार्करश्मयः ।।४८।।**

भावार्थः- लग्नमा बुध र शुभ ग्रहहरू केन्द्रमा अनि गुरु चौथो भावमा हुँदा युद्धयात्रामा निस्कने राजाले ग्रीष्म ऋतुमा सूर्यले पोखरीको पानी नष्ट गरे जसरी शत्रुलाई नष्ट गर्दछ ।

**शुभे त्रिकोणकेन्द्रस्थे लाभे चन्द्रेऽथवा रवौ ।**
**शत्रून् हन्ति गतो राजात्वन्धकारं यथा रविः ।।४९।।**



भावार्थः- त्रिकोण वा केन्द्रमा शुभ ग्रह र लाभ स्थानमा चन्द्रमा वा सूर्य हुँदा युद्धयात्रामा निस्कने राजाले अन्धकारलाई सूर्यले नाश गरे जसरी शत्रुलाई नाश गर्दछ ।

**स्वक्षेत्रगे शुभे चन्द्रे त्रिकोणायगते गते ।**
**विनाशयत्यरीन् राजा तूलराशिमिवानलः ।।५०।।**

भावार्थः- शुभग्रह आफ्ना राशिमा र चन्द्रमा त्रिकोण वा लाभ स्थानमा हुँदा युद्धयात्रामा निस्केको राजाले शत्रुलाई आगोले कपासको थुप्रो नाश गरेझैँ नाश गर्दछ ।

**इन्दौ खेस्थे गुरौ केन्द्रे मन्त्रीसप्तमगे गतः ।**
**नृपो हन्ति रिपून् सर्वान् पापं पञ्चाक्षरी यथा ।।५१।।**

भावार्थः- दशम स्थानमा चन्द्रमा, केन्द्रमा गुरु र सातौँ भावमा शुक्र भएका समयमा युद्धयात्रामा निस्कने राजाले “नमः शिवाय” यो पञ्चाक्षरी मन्त्रले पाप नाश गरे जसरी शत्रुलाई नाश गर्दछ ।

**वर्गोत्तमगते शुक्रेऽप्येकमिन्नेव लग्नगे ।**
**हरिस्मृतिर्यथा पापान् हन्ति शत्रून् गतो नृपः ॥५२॥**

भावार्थः- आफ्नो उत्तम वर्गको नवांशमा रही लग्नमा एक्लै बसेको शुक्र हुँदा युद्ध यात्रामा निस्केको राजाले हरिको नाम सम्झनाले पाप नाश गरे जसरी शत्रुलाई नाश गर्दछ ।

**शुभे केन्द्रत्रिकोणस्थे चन्द्रे वर्गोत्तमे गते ।**
**सगोत्रान् हि रिपून् हन्ति यथा गोत्राँश्च गोत्रभित् ॥५३॥**

भावार्थः- शुभग्रह केन्द्र वा त्रिकोणमा तथा चन्द्रमा वर्गोत्तम नवांशमा हुँदा युद्धयात्रामा निस्कने राजाले शत्रुलाई इन्द्रले पर्वत नष्ट पारेझैं नष्ट पार्दछ ।

**मित्रभस्थे गुरौ केन्द्रे त्रिकोणस्थेऽथवा सिते ।**
**शत्रून् हन्ति गतो राजा भुजङ्गं गरुडो यथा ॥५४॥**

भावार्थः- मित्रसँगै बसेको गुरु केन्द्रमा हुँदा अथवा शुक्र त्रिकोणमा हुँदा युद्धयात्रामा निस्केको राजवाले शत्रुलाई गरुडले सर्पलाई नाश गरेझैं नाश गर्दछ ।



**शुभे केन्द्रे त्रिकोणस्थे वर्गोत्तमगते गतः ।**
**विनाशयत्यरीन् राजा पापान् भागीरथी यथा ॥५५॥**

भावार्थः- शुभ ग्रह केन्द्रमा त्रिकोणमा वा आफ्नो वर्गोत्तम राशिमा हुँदा युद्धयात्रमा निस्कने राजाले भागीरथीले पाप नष्ट गरेझैं शत्रुलाई नष्ट गर्दछ ।

**ये नृपायान्त्यरीञ्जेतुं तत्र योगौ नृपाह्वयौ ।**
**उपैतिशान्तिं कोपाग्निः शत्रुयोषाश्रुविन्दुभिः ॥५६॥**

भावार्थः- माथि बताइएका दुई योग नृपयोग हुन् । यी योगमा जुन राजा युद्धयात्रामा निस्कन्छ उसको रिसको ज्वाला शत्रुका पत्नीहरुको आँशुको थोपाले मात्र शान्त हुन्छ ।

**वलक्षयप्रदश्चन्द्रः पूर्णः क्षीणः स्वभावतः ।**

**विजयस्तत्र यातृणां सन्धिः सर्वान् पराक्रमः ॥५७॥**

भावार्थः- स्वभावैले पूर्णचन्द्र बलप्रद र क्षीणचन्द्र क्षयप्रद हुन्छ । पूर्णचन्द्र हुँदा युद्धयात्रामा निस्कने राजाको जित, सन्धि र पराक्रम वृद्धि हुन्छ ।

मनमा धुकचुक गरेर यात्रा नगर्नू

**निमित्तशकुनादिभ्यः प्रधानेनोदयः स्मृतः ।**
**तस्मात्प्रसवनायुः स्यात्फलहेतुर्मनोदयः ॥५८॥**

भावार्थः- मुहूर्त र साईत आदि भाग्योदयमा ठूलो कुरो नमान्नू । त्यसैले प्रगतिका लागि अन्तस्करणको शुद्धि र मनको प्रसन्नता नै प्रमुखरूपमा फलको कारण हुने गर्दछ ।

यात्रा गर्न नहुने दिन आदि

**उत्सवोपनयोद्वाहे श्रुतिसौतकेषु च ।**

**ग्रहणे च न कुर्वीत यात्रां मर्त्यः सदा वधः ॥५९॥**

भावार्थः- उत्सव, उपनयन, विवाह, वेदारम्भ, सूतक तथा ग्रहणमा बुद्धिमान जनले यात्रा नगर्नू ।

यात्रामा साइत

**महिषी-मेषयोर्युद्धे कलत्रकलहान्तरे ।**
**वस्त्रादेस्खलिते क्रोधे दुरुक्ते न व्रजेत्क्षुतौ ॥६०॥**

भावार्थः- भैंसी र भेडा जुधेका बखत, आईमाईको झगडा हुँदा, वस्त्र खस्दा, रिसमा, नराम्रो वचन भन्दा र भोकै हुँदा यात्रा गर्नु उत्तम हुँदैन ।

**घृतान्नं तिलपिष्टान्नं मत्स्यान्नं घृतपायसम् ।**
**प्राणादिक्रमशो भुक्त्वा याति राजा जयत्यरीन् ॥६१॥**

भावार्थः- पूर्व आदि दिशातिरको यात्रामा निस्कँदा क्रमशः घिउ-अन्न, तिलको छोप र अन्न, माछा र अन्न तथा घिउ र खिर खाएर निस्कने राजाले शत्रुलाई जित्दछ ।

**मार्जितापरमान्नञ्च काञ्जिकञ्चच पयो दधि ।**
**क्षीरं तिलोदनं भुक्त्वा भानुवारादिषुक्रमात्॥६२॥**

भावार्थः- आइतवार श्रीखण्ड, सोमवार खीर, मङ्गलवार मोही, बुधबार दूध, बिहीवार दही, शुक्रवार काँचो दूध तथा शनिबार तिल र भात खाएर यात्रा गर्नु शुभ फलदायक हुन्छ ।

**कुल्माषाँश्च तिलान्नञ्च दधिक्षौद्रं घृतं पयः ।**
**मृगमांसञ्च तत्सारं पायसं चाषकं मृगम्॥६३॥**
**शशमांसञ्च षाष्टिक्यं प्रियङ्गुकमपूपकम् ।**
**चित्राण्डजं फलं कूर्मं सारीं गोधाञ्च शल्लकम्॥६४॥**
**हविष्यं कृसरान्नञ्च मुद्गान्नं यवपिष्टकम् ।**
**मत्स्यान्नं चित्रितान्नञ्च दध्यन्नं दस्रभात् क्रमात्॥६५॥**
**भुक्त्वा यायाञ्जयेच्छुर्यो भूमिनाथोजयत्यरीन् ।**



भावार्थः- गहत, तिलभात, दही, मह, घिउ, दूध, मृगको मासु, मृगको रक्ति, खीर, ठेउवा चराको मासु, मृगको मासु, खरायोको मासु, सठिया चामलको भात, कागुनु, मालपुवा, मयुरको फुल, फल, कछुवाको मासु, सारसको मासु, गोहोरोको मासु, दुम्सीको मासु, खीर, खिचडी, मुगी, जौको सातु, माछा, चित्रितान्न र दहीभातलाई क्रमशः अश्विनी नक्षात्रमा खाएर युद्धयात्रामा निस्कने राजाले शत्रुलाई जित्दछ ।

यात्रामा पूजा

**हुताशनं तिलैर्हुत्वा पूजयेत्तु दिगीश्वरम्॥६६॥**
**प्रणम्य देवभूदेवानाशीर्वादं नृपो लभेत् ।**
**कृत्वा होमं दारुणञ्च तन्मन्त्रेण कृतं व्रजेत्॥६७॥**

भावार्थः- यात्राको बेलामा दिशाका मालिकको पूजा गर्नु र तिनैको मन्त्रले तिलको होम हालेर देवता र ब्राह्मणलाई प्रणाम गरी आशिर्वाद लिनु तथा दिशाको मालिकको मन्त्रले फेरी होम हाली यात्रा गर्नु शुभ हुन्छ ।

**वस्त्रं तद्वर्णगन्धाद्यैरेवं भक्त्या दिगीश्वरम् ।**
**इन्द्रमैरावतारुढं शच्या सह विराजितम् ॥६८॥**
**वज्रैपाणिं स्वर्णवर्णं दिव्याभरणभूषितम् ।**
**सप्तहस्तं सप्तजिह्वं षडक्षं मेषवाहनम् ॥६९॥**
**स्वाहा प्रियं रक्तवर्णं स्रक् श्रुवायुधधारिणम् ।**

भावार्थः- यसरी माथि बताइएको विधिले दिशापतिको जुन वर्ण हो त्यसै अनुरुप वस्त्र एवं गन्ध आदि द्रव्यले भक्तिपूर्वक पूजा गर्नू । त्यसपछि शचीका साथ ऐरावत हातीमाथि बसेका तथा हातमा वज्र लिएका, सुनौला वर्णका दिव्यवस्त्र र आभूषणले युक्त इन्द्रको ध्यान गरी ७ हात र जिब्रो भएका, ६ आँखा भएका भेडामा चढेका स्वाहा शब्दले प्रसन्न रहने भएका स्रक् तथा श्रुवा रुपी आयुध धारण गर्ने भएका रक्तवर्णका अग्निदेवको पूजा गर्नू ।

**दण्डायुधं लोहिताक्षं यमं महिषवाहनम् ॥७०॥**
**श्यामलासहितं रक्तवर्णमूर्ध्वमुखं शुभम् ।**



भावार्थः- दण्ड आयुध लिने, राता आँखा भएका, भैंसी माथि चढेका, काला दूतले सहित, उर्ध्वमुख हुने रक्तवर्णले शुभ यमराजको दक्षिण दिशामा ध्यान गर्नू ।

**खड्गचर्मधरं नीलं निर्ऋतिं नरवाहनम् ॥७१॥**
**उर्ध्वकेशं विरुपाक्षं दीर्घग्रीवायुतं विभुम् ।**

भावार्थः- खड्ग तथा ढाल धारण गर्ने नीला वर्णका उर्ध्वकेशी, डरलाग्दा आँखा भएका नरवाहनले युक्त सर्व सामर्थ्यवान् निर्ऋति (राक्षस) को पूजा गर्नू ।

**नागपाशधरं पीतवर्णं मकरवाहनम् ॥७२॥**
**वरुणं कालिनाथञ्च रत्नाभरणभूषितम् ।**

भावार्थः- नागपाश धारण गर्ने भएका, पहेँला, गोहीमा चढेका, कालिनाथ तथा रत्नाभूषणले विभूषित वरुण देवताको ध्यान गर्नू ।

**प्राणिनां प्राणरुपञ्च द्विबाहुं दण्डपाणिनम् ॥७३॥**
**वायुं कृष्णमृगासीनं पूजयेदञ्जना पतिम् ।**

भावार्थः- प्राणिमात्रका प्राणस्वरुप भएका, २ हात भएका, दण्ड लिएका, कृष्णासार माथि चढेका अञ्जनापति वायुको ध्यान गर्नू ।

**अश्वासीनं कुन्तपाणिं द्विबाहुं स्वर्णसन्निभम् ॥७४॥**
**कुबेरं चित्रलेखेशं यक्षगन्धर्वनायकम् ।**

भावार्थः- घोडा चढेका, भाला लिएका, २ हात भएका, सुनौला, यक्ष र गन्धर्वका राजा तथा चित्रलेखास्वामी कुबेरको ध्यान गर्नू ।

**पिनाकिनं वृषारुढं गौरीपतिमनुत्तमम् ॥७५॥**
**श्वेतवर्णं चन्द्रमौलिं नागयज्ञोपवीतिनम् ।**
**अप्रमाणे स्वयं कार्याऽपेक्षया पूजनन्तथा ॥७६॥**



भावार्थः- पिनाकधारी, साँढेमा चढेका, अनुत्तम सेता, नागरुपी जनै लगाएका, गौरीपति शिवको ध्यान गर्नु । यात्रा समयमा यि दिक्पालको पूजा गर्नु उचित त छँदैछ यात्रा नगर्दा पनि कार्यसिद्धिका लागि दिक्पालको पूजा गर्नु पर्दछ ।

**राजाको यात्रा**

**कार्यं निर्गमनं छत्रध्वजाश्वाक्षतवाहनैः ।**

भावार्थः- ध्वजा, छत्र, घोडा तथा दोष नभएका बाहनले युक्त भई प्रस्थान गर्नु पर्दछ

**प्रस्थानको दूरी**

**स्वस्थानान्निर्गमस्थानं धनुषाञ्च शतद्वयम् ॥७७॥**
**चत्वारिंशद्वादशैव प्रस्थितो हि स्वगेहतः ।**

भावार्थः- आफ्नो ठाउँबाट जाने स्थान २०० धनुष हुनु उत्तम हुन्छ वा आफ्नो घरबाट ४० वा १२ धनुष दूरीमा प्रस्थान गर्नू ।

यात्रामा वास

**दिनान्येकत्र न वसेत्सप्त भूपः परोजनः ॥७८॥**
**पञ्चरात्रञ्च परतः पुनर्लग्नान्तरं ब्रजेत् ।**

भावार्थः- प्रस्थान पछि राजा एक स्थानमा बढिमा ७ र अरु ५ रात बस्नू । बढी बस्न परे फेरी लग्नान्तरमा उत्तम लग्न विचार गरेर यात्रा गर्नू ।

उत्पातमा यात्रा

**अकालजेषु नृपतिर्विद्युद्गर्जितवृष्टिषु ॥७९॥**
**उत्पातेषु त्रिविधेषु सप्तरात्रन्तु न व्रजेत् ।**



भावार्थः- कुबेलामा बिजुली गर्जनु, पानी पर्नु अनि भूकम्प जानु आदि जस्ता उत्पात हुँदा राजाले सात दिनसम्म यात्रा नगर्नू ।

यात्रामा साइत

**गमने तु शिवाकाककपोतानाङ्गिरः शुभाः ॥८०॥**
**वामाङ्गे कोकिला पल्ली पोतकी सूकरी रला ।**
**वानरःकाक ऋक्षःश्वा भासःस्युर्दक्षिणाःशुभाः ॥८१॥**
**चाषं त्यक्त्वा चतुष्पात्तु शुभदो वामतोगमः ।**
**कृष्णं त्यक्त्वा प्रयाते तु कृकलासो न वीक्षितः ॥८२॥**
**बराहशशगोधानां सर्पाणां कीर्तनं शुभम् ।**
**दृष्टमात्रेण यात्रायां व्यस्तं सर्वं प्रवेशने ॥८३॥**
**यात्रासिद्धिर्भवेद्दृष्टे शवे रोदनवर्जिते ।**
**प्रवेशो रोदनयुते शवे स्याच्च शुभप्रदः ॥८४॥**
**पतितक्लीवजटिलोन्मत्तवांतौषधादिभिः ।**

अभ्यक्तकाष्ठान्यस्थीनि चर्मांगारतुषाग्निभिः ॥८५॥
गुडकार्पासलवणवसातैलतृणोरगैः ।
वन्ध्याव्यथितकाणौ च मुक्तकेशो वुभुक्षितः ॥८६॥
प्रयाण समये लग्ने दृष्टे सिद्धिर्न जायते ।
प्रज्वलाग्निः शुभंवाक्यं कुसुमेक्षुसुरागणाः ॥८७॥
गन्धपुष्पाक्षतच्छत्रचामरान्दोलका नृपाः ।
भक्ष्यं शुभफलश्चैवेभोश्वाजौ दक्षिणे वृषः ॥८८॥
मत्स्यं मांसं सुधौतञ्च वस्त्रं श्वेतवृषध्वजः ।
पुण्यस्त्री पूर्णकलशरत्नश्रृङ्गारगोद्विजाः ॥८९॥
भेरीमृदङ्गपटहशङ्खरागादिनिस्वनाः ।
वेदमङ्गलघोषः स्युर्यायिनां कार्यसिद्धिदाः ॥९०॥
आदौ विरुद्धशकुनं दृष्ट्वा यायीष्टदेवताम् ।
स्मृत्वा द्वितीये विप्राणां कृत्वा पूजां निवर्तयेत् ॥९१॥
सर्वदिक्षु क्षुतं नेष्टं गोक्षुतं निधनप्रदम् ।
अफलं यद्वामवृद्धरोगीपीनसवत्कृतम् ॥९२॥

परस्त्री द्विजदेवाश्च नश्यन्ते द्विगजाश्वकान् ।
हननात्परमाप्नोत्यनार्तापन्नित्यनिरायुधान् ॥९३॥

भावार्थः- यात्रामा पोथी स्याल, काग र परेबीको स्वर शुभ हुन्छ । मयूर, माउसुली, पोतकी चरा, सुँगुर्नी तथा रला (?) देब्रेतिर देखिएको राम्रो । वानर, काग, भालु, कुकुर र भास (गिद्ध वा कुखुरो ?) चरा दाहिनेतिर देखिएको शुभ हुन्छ । चाष (?) लाई छोडी अन्य चौपाया देब्रे लाग्नु शुभ हुन्छ । कालो बाहेक अन्य रङका छेपारा देख्नु अशुभ हुन्छ । बराह, खरायो, गोही र सर्पको नाम लिनु यात्रामा शुभ हुन्छ । तर यी देख्नु प्रवेशमा शुभ हुन्छ यिनको आवाज अशुभ हुन्छ । रुवाइ रहित शव देख्नु यात्रामा कार्यसिद्धिको सूचक हुन्छ । प्रवेशकालमा रुवाइ सहितको शवको दर्शन शुभ हुन्छ । पतित, नपुंसक, जटाधारी, औषधी खाएर उन्मत्त वा जँडयाहा, काड, हाड, छाला, अँगार, भूष, पुतपुताइ रहेको आगो, सखर, कपास, नून, चरबी?, तेल, घाँस, सर्प, बाँझी स्त्री, रोगी, कानो, खुला कपाल भएको र भोको : यी सबै यात्रा कालमा देखिए भने त यात्राजन्य काम फत्ते हुँदैन । बलिरहेको आगो, शुभ वचन, फूल, ऊखुको फूल, मदिरा, चन्दन, फूल, अक्षाता, छाता, चमर, डोली (पालकी), राजा, भोजन सामग्री, शुभ फल, हाती, घोडा, दक्षिणतिरको साँढे, माछा, मासु, धोइएको कपडा, सेतो साँढे, ध्वजा, सौभाग्यवती स्त्री, जलले भरिएको कलश, रत्न, श्रृङ्गार, गाई,

ब्राह्मण, भेरी बाजा, मादल, ढोल, शङ्ख, राग, गीत, गाना र वेदध्वनी : यी सबै कुराहरुको दर्शन यात्रामा जानेका लागि सिद्धिदायक हुन्छ । यात्रामा निस्कँदा पहिलो अपशगुनमा इष्टदेवको नाम सम्झनु । फेरी अर्को अपशकुन आए ब्राह्मणलाई पूजा गरी यात्रा स्थगन गर्नु । सबै दिशामा हाच्छिऊँ अशुभ, गाईले हाच्छिऊँ गरेको मृत्युदायक तथा बालक, वृद्ध, रोगी वा पिनासी र कपटीको हाच्छिऊँ निष्फल हुन्छ । परस्त्री र देवता यी नित्य दुःख नदिने तथा निशस्त्र हुन्छन् । यिनको हननले राजाका हात्ती र घोडाको नाश हुन्छ ।

इति श्रीनारदीयसंहितायां यात्राध्यायस्त्रयस्त्रिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत यात्रासम्बन्धी कुरा बताइएको तेत्तिसौँ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# चतुस्त्रिंशोऽध्यायः
# प्रवेशाध्यायः

गृहप्रवेश सम्बन्धी कुरा

**आदौ सौम्यायने कार्यं नववास्तुप्रवेशनम् ।**
**राज्ञा यात्रानिवृत्तौ च यद्वा द्वन्द्वप्रवेशनम् ॥१॥**

भावार्थः- सूर्य उत्तरायण हुँदा नयाँ घरमा प्रवेश गर्नु पर्दछ । राजा यात्रा सकी घरमा प्रवेश गर्दा वा वरवधूको गृह प्रवेश उत्तरायणमा नै प्रवेश गर्नू ।

**विधाय पूर्वदिवसे वास्तुपूजां बलिक्रियाम् ।**
**वेदमङ्गलनिर्घोषैः कार्यं वेश्मप्रवेशनम् ॥२॥**

भावार्थः- अघिल्लो दिन वास्तु पूजा बलि, दान आदि कार्य सकेर वैदिक मङ्गल ध्वनिका साथ गृह प्रवेश गर्नु पर्दछ ।



**माघफाल्गुनवैशाखज्येष्ठमासेषु शोभनः ।**
**प्रवेशो मध्यमोज्ञेयः सौम्यकार्तिकमासयोः ॥३॥**

भावार्थः- माघ, फागुन, बैशाख र जेठमा गृहप्रवेश शुभदायक हुन्छ । मङ्सिर र कार्तिकमा गरिने प्रवेशलाई मध्यम भनिएको छ ।

**वस्वीज्यांत्येन्दुवरुणत्वाष्ट्रमित्रस्थिरोडुषु ।**
**शुभः प्रवेशो देवेज्यशुक्रयोर्दृश्यमानयोः ॥**
**व्यर्कारवारतिथिषु रिक्तामावर्जितेषु च ॥४॥**

भावार्थः- धनिष्ठा, पुष्य, रेवती, मृगशिरा, शतभिषा, चित्रा, अनुराधा, तीनै उत्तरा र रोहिणी नक्षत्रमा गृहप्रवेश गर्नु शुभ हुन्छ । बृहस्पति र शुक्र उदाएका बेलामा तथा आइतबार र मङ्गलबार बाहेकका बारमा अनि रिक्ता र औंशी बाहेकका तिथिमा गृहप्रवेश गर्नु शुभ हुन्छ ।

**दिवा वा यदि वा रात्रौ प्रवेशो मङ्गलप्रदः ।**

**चन्द्रतारावलोपेते पूर्वोक्तवर्जितेषु च ॥५॥**

भावार्थः- माथि बताइएका तिथि, महिना र नक्षत्र नभएका बखत चन्द्र तारा बलले युक्त दिनमा वा रातमा सर्वदा प्रवेश गर्नु मङ्गलकारक हुन्छ ।

**स्थिरलग्ने स्थिरांशे च नैधने शुद्धिसंयुते ।**
**त्रिकोणे केन्द्रगत्र्याये सौम्यैस्त्र्यायारिगैः खलैः ॥६॥**

भावार्थः- स्थिर लग्न (२,५,८,११), स्थिर राशिको नवांश, आठौं स्थान शुद्ध हुँदा, केन्द्र-त्रिकोण-तृतीय तथा आयस्थानमा शुभग्रह तथा ३,६ र ११ औं स्थानमा पापग्रह भए प्रवेश शुभ हुन्छ ।

**लग्नात्षष्ठाष्टमस्थेन वर्जितेन हिमांशुना ।**
**कर्त्तुर्वा जन्मभे लग्ने ताभ्यामुपचयेऽपि वा ॥**

भावार्थः- लग्नबाट ६,८ स्थानमा चन्द्रमा बसेको नहोस् तथा कर्ताको जन्मलग्न होस् वा जन्मलग्नबाट ३,४,१०,११ राशि लग्न होस् यस्तोमा गृहप्रवेश शुभ हुन्छ ।



**कृत्वार्कं वामतो विद्वान् श्रृङ्गारश्चाग्रतो विशेत् ॥७॥**

भावार्थः- बामसूर्यलाई विचार गरी श्रृङ्गार, मङ्गल आदिले सहित भई घरमा प्रवेश गर्नु पर्दछ ।

इति श्रीनारदीयसंहितायां प्रवेशाध्यायश्चतुस्त्रिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत गृहप्रवेशसम्बन्धी कुरा बताइएको चौंतिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चत्रिंशोऽध्याय:
### सद्योवृष्टिलक्षणाध्याय:

वर्षा (पानी पर्ने) को भविष्यवाणी

**वर्षा प्रश्ने वारिभेऽब्जे पूर्णे वै लग्नगेऽपि वा ।**
**केन्द्रगे वा शुक्लपक्षे चातिवृष्टिः शुभेक्षिते ॥१॥**

भावार्थ:- वर्षा सम्बन्धी प्रश्नमा-यदि चन्द्रमा जलचर राशिका भई लग्न वा केन्द्रमा बसेका छन्, शुक्ल पक्ष छ र चन्द्रमा वा प्रश्न लग्न शुभ ग्रहले हेरिएको छ भने त राम्रो वर्षा हुन्छ ।

**अल्पवृष्टिः पापदृष्टे प्रावृट्काले चिराद्भवेत् ।**
**चन्द्रवद्भार्गवे सर्वमेवंविधगुणान्विते ॥२॥**

भावार्थ:- वर्षात्का बेला पापग्रहदृष्ट चन्द्रमा हुँदा ढीला गरी अल्पवृष्टि हुन्छ । यसै गरी चन्द्रमा जस्तै शुक्र हुँदा पनि वर्षाको विचार गर्नु पर्दछ ।



**प्रावृषीन्दुः सितात्सप्तराशिगः शुभविक्षितः ।**
**मन्दात्त्रिकोणसप्तस्थो यदि वा वृष्टिकृद् भवेत् ॥३॥**

भावार्थ:- वर्षामा शुक्रबाट सातौं राशिमा शुभग्रहले हेरिएको चन्द्रमा भए वा शनिबाट सातौं वा त्रिकोणमा चन्द्रमा भएमा त वर्षा हुन्छ ।

**सद्योवृष्टिकरः शुक्रो यदा बुधसमीपगः ।**
**तयोर्मध्यगते भानौ तदा वृष्टिविनाशनम् ॥४॥**

भावार्थ:- प्रश्नकालमा शुक्र यदि बुधका नगिचै छ या योग गर्दछ भने चाँडै वृष्टि हुन्छ तथा शुक्रबुधका बीचमा सूर्य भए त वृष्टि-नाश हुन्छ ।

**मघादि पञ्चधिष्ण्यस्थः पूर्वास्वातीत्रये परे ।**
**प्रवर्षणं भृगुः कुर्याद्विपरीते न वर्षति ॥५॥**

भावार्थः- मघा, दुवै फाल्गुनी, हस्ता, चित्रा, पूर्वाषाढा, पूर्वभाद्रपदा, स्वाती, विशाखा र अनुराधा नक्षत्रमा भएको शुक्रले वर्षा गराउँदछ भने यसको उल्टो भए वर्षा हुँदैन ।

**पुरतः पृष्ठतो भानोर्ग्रहा यदि समीपगाः ।**
**तदा वृष्टिं प्रकुर्वन्ति न चैते प्रतिलोमगाः ॥६॥**
**सौम्यमार्गगतः शुक्रो वृष्टिकृन्नतु याम्यगः ।**
**उदयास्तेषु वृष्टिःस्याद्भानोरार्द्राप्रवेशने ॥७॥**

भावार्थः- सूर्य-राशिबाट अगाडीपछाडीका राशिमा नजिकै यदि चन्द्रमा आदि ग्रह रहे वर्षा हुन्छ तथा वक्री भई टाढाका राशिमा भए वर्षा हुँदैन । शुक्र यदि मार्गी भए वर्षा हुन्छ र वक्री भए वर्षा हुँदैन । शुक्रको उदय र अस्त कालमा वर्षा हुन्छ तथा सूर्य आर्द्रा नक्षत्रमा आउँदा पनि वृष्टि हुन्छ ।

**विपत्तिः सस्यहानिः स्यादहन्यार्द्राप्रवेशने ।**
**सन्ध्ययोः सस्यवृद्धिः स्यात्सर्वसंपन्नृणां निशिः ॥८॥**

भावार्थः- दिनमा आर्द्राको प्रवेश भए प्रजाजन विपत्तिमा पर्दछन् र धान्यादिको हानी हुन्छ । सन्ध्यामा प्रवेश भए धान्यादिको वृद्धि र रातमा प्रवेश भए राजाको सम्पत्ति बढ्दछ तथा प्रजा सुखी हुन्छन् ।

**स्तोकवृष्टिरनर्घः स्यादवृष्टिः सस्यसम्पदः ।**
**आर्द्रोदये प्रभिन्ने चेद्भवेदीतिर्न संशयः ॥९॥**

भावार्थः- आर्द्राको प्रवेश कालमा यदि अलिकति पानी परे महँगी बढ्दछ, नपरे अनाजको राम्रो उब्जा हुन्छ तथा यदि आर्द्रा प्रवेश गरेका दिन वायुको प्रवलता भए ईतिभय (कीरा आदि डर) हुन्छ यसमा शङ्का छैन ।

**चन्द्रेज्येऽथवा शुक्रे केन्द्रे त्वीतिर्विनश्यति ।**
**पूर्वाषाढागतो भानुर्जीमूतैः परिवेष्टितः ॥१०॥**

भावार्थः- आर्द्राको प्रवेश कालको लग्नका बेलामा यदि केन्द्रमा चन्द्रमा, बृहस्पति, बुध वा शुक्र भए त ईतिभय हुँदैन । पूर्वाषाढा नक्षत्रमा सूर्य आई बादलले घेरेर बसेमा त (?) ।

**वर्षत्यार्द्रादिमूलान्तं प्रत्यक्षं प्रत्यहन्तथा ।**
**वृष्टिश्च पौष्णभे तस्माद्दशर्क्षेषु न वर्षति ॥११॥**

भावार्थः- आर्द्रादेखि मूल नक्षत्रसम्म समय समयमा कृषि अनुकूल उत्तम वर्षा हुन्छ तथा रेवती नक्षत्रमा सूर्य पस्दा नै यदि पानी परे लगातार रेवती आदि दश नक्षत्रमा वर्षा हुँदैन ।

**सिंहे भिन्ने कुतो वृष्टिरभिन्ने कर्कटे कुतः ।**
**कन्योदये प्रभिन्ने चेत्सर्वथा वृष्टिरुत्तमा ॥१२॥**

भावार्थः- सिंह सङ्क्रान्तिमा वर्षाको बादल भए तथा कर्कट सङ्क्रान्तिमा नभए त्यो वर्ष प्रायः कम पानी पर्दछ । तथा कन्याको उदयकालमा हावाको वेग रहेमा भने वर्षा उत्तम हुन्छ ।



**अहिर्बुध्न्यं पूर्वसस्यं परसस्यञ्च रेवती ।**
**भरणीसर्वसस्यञ्च सर्वनाशाय चाश्विनी ॥१३॥**

भावार्थः- उत्तरभाद्रपदामा सूर्य पुग्ने दिन यदि पानी परे वर्षेबाली, रेवतीमा पुग्दा हिउँदे बाली तथा भरणी र अश्विनीमा पुग्दा सबै बालीमा हानी हुन्छ ।

**गुरोः सप्तमराशिस्थः प्रत्यग्रो भृगुजो यदा ।**
**तदातिवर्षणं भूरि प्रावृट्काले बलोज्झिते ॥१४॥**

भावार्थः- बृहस्पति पछिका सातौं राशिमा यदि शुक्र भए वर्षाकालमा उत्तम वर्षा र फसल पनि उत्तम हुन्छ ।

**आसन्नमर्कशशिनोः परिवेषगतोत्तरा ।**
**विद्युत्प्रपूर्णं मण्डूकास्त्वनावृष्टिर्भवेत्तदा ॥१५॥**

भावार्थः- सूर्य र चन्द्रमाका नजिकै उत्तरतिर मण्डल देखिए वा विजुली चम्किए वा भ्यागुता कराए वर्षाको हानी हुन्छ ।

**यदा प्रत्यङ्गता भेकाः स्वसद्मोपरि संस्थिताः ।**
**पतन्ति दक्षिणस्था वा भवेद्वृष्टिस्तदाचिरात् ॥१६॥**

भावार्थः- आफ्नो स्थानमा बस्दाबस्दै भ्यागुतो जब पश्चिम वा दक्षिण दिशामा उफ्रन लाग्दछ भने त चाँडै नै वर्षा हुन्छ यस्तो भन्नु पर्दछ ।

**नखैर्लिखन्तो मार्जाराश्चैवं निर्लोभसंस्थिताः ।**
**सेतुवंधपरा वालाः सद्यो वै वृष्टि हेतवः ॥१७॥**

भावार्थः- बिरालोले पञ्जाले जमिन खोस्रन थाली लोभ नगरी बसे वा बालकले खेल्दै पुल बनाए त चाँडै पानी पर्छ भनी समझिनु पर्दछ ।



**पिपीलिका शिरश्छन्ना व्यवायः सर्पयोस्तथा ।**
**द्रुमाधिरोहः सर्पाणां प्रतीन्दुर्वृष्टिसूचकाः ॥१८॥**

भावार्थः- कमिला माथि कमिला चढे वा फुल लिएर हिँडे , सर्पले मैथुन गरे वा रुखमाथि चढ्न लागेको देखिए वा चन्द्रमाको दोश्रो आकृति देखिए : यी वृष्टिकारक शुभ लक्षण हुन्छन् ।

**उदयास्तसमये काले विवर्णोर्कोऽथवा शशी ।**
**मधुवर्णोऽतिवायुश्चेदतिवृष्टिर्भवेत्तदा ॥१९॥**

भावार्थः- सूर्य वा चन्द्रमा उदयास्तमा विकृत वा महका रङ्को देखिए वा हावाको वेग धेरै भए अतिवर्षा हुन्छ ।

इति श्रीनारदीयसंहितायां पञ्चत्रिंशत्तमः सद्योवृष्टिलक्षणाध्यायः

✷

नारदीय संहिता अन्तर्गत वर्षासम्बन्धी कुरा बताइएको पैंतिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# षट्त्रिंशत्तमोऽध्यायः

## कूर्मविभागाध्यायः

### शुभअशुभको साइत र फल थाहा पाउने एक चक्र : कूर्मचक्र

प्राङ्मुखस्य तु कूर्मस्य नवाङ्गेषु धरामिमाम् ।
विभज्य नवधा खण्डमण्डलानि प्रदक्षिणम्॥
अन्तर्वेदी च पाञ्चालं तस्येदं नाभिमण्डलम्॥१॥

भावार्थः- यो पृथ्वीलाई पूर्वतिर मुख गरेको कछुवा कल्पना गरी त्यसलाई नौ भाग लगाउनू र दाहिने तिरबाट क्रमैले नवमण्डल बनाउनू । १.यो कछुवाको नाभिमण्डल अन्तर्वेदी अर्थात गङ्गा यमुनाको मध्यभाग पाञ्चाल देश हो जुन कूर्मचक्रको नाभिमण्डल हो ।

प्राच्यां मागधलाटादि देशास्तन्मुखमण्डलम् ।
स्त्रीकलेयकिराताख्या देशास्तद्बाहुमण्डलम्॥२॥



भावार्थः- २.पूर्वमा मगध, लाट आदि देश कूर्मका मुखमण्डल हुन् । ३.स्त्रीक, लेय, किरातदेश कूर्मका दाहिने हात हुन् ।

अवन्तिद्राविणा भिल्लदेशास्तत्पार्श्वमण्डलम् ।
गौडकौङ्कण शाल्वेष्ट पुण्ड्रास्तत्पार्श्वमण्डलम्॥३॥
सिन्धुकाशीमहाराष्ट्रसौराष्ट्राः पुच्छमण्डलम् ।
पुलिन्दभीष्मयवनगुर्जराः पादमण्डलम्॥४॥

भावार्थः- ४.अवन्ति (उज्जैन), द्रविड, भिल्लदेश कुर्मका दाहिने भाग हुन् । ५.गौड, कोङ्कण, शाल्व र पुण्ड्रदेश कूर्मका दाहिने गोडा हुन् । ६.सिन्धु, काशी, महाराष्ट्र सौराष्ट्र कूर्मका पुच्छर हुन् । ७.पुलिन्द, भीष्म, यवन र गुर्जर देश कूर्मका देब्रे गोडा हुन् ।

कुरुकाश्मीरमाद्रेय मत्स्यास्तत्पार्श्वमण्डलम् ।
खशाङ्ग वङ्ग बाह्लीककाम्वोजाः पाणिमण्डलम्॥५॥
कृत्तिकादीनि धिष्ण्यानित्रीणि क्रमान्न्यसेत् ।

**नाभेर्दिक्षु नवाङ्गेषु पापैर्दुष्टं शुभैः शुभम् ॥६॥**

भावार्थः- ८. कुरु, काश्मीर, माद्रेय, मस्य कूर्मका देब्रे भाग हुन् तथा खश, अङ्ग, वङ्ग, बाह्लीक र कम्बोज : यी कूर्मका देब्रे गोडा हुन् । कूर्मचक्रका यी विभाजित नौ मण्डलमा क्रमैले कृत्तिका आदि गरिएका ३-३ नक्षत्र स्थापना गर्नू । जुन अङ्गमा पापग्रह पर्दछन् ती देशकालाई कष्ट र जुन अङ्गमा शुभग्रह पर्दछन् ती देशकालाई सुख हुन्छ ।

इति श्रीनारदीयसंहितायां षट्त्रिंशत्तमः कूर्मविभागाध्यायः

✷

नारदीय संहिता अन्तर्गत कूर्मचक्रसम्बन्धी कुरा बताइएको छत्तिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## सप्तत्रिंशत्तमोऽध्यायः
### उत्पाताध्यायः

देवमूर्तिमा देखिने अपसगुनका सूचनाहरु

देवता यत्र नृत्यन्ति पतन्ति प्रज्वलन्ति च ।
मुहू रुदन्ति गायन्ति प्रस्विद्यन्ति हसन्ति च ॥१॥
वमन्त्यग्निं तथा धूमं स्नेहं रक्तं पयोजलम् ।
अधोमुखाश्च तिष्ठन्ति स्थानात्स्थानं व्रजन्ति च ॥२॥
एवमाद्या हि दृश्यन्ते विकाराः प्रतिमासु च ।

भावार्थः- देवता(मूर्ति) जहाँ नाच्दछन्, खस्दछन्, डढिरहेका देखिन्छन्, पटक पटक रुन्छन्, गाउदँछन्, पसिना निकाल्दछन्, हाँस्दछन्, मुखबाट आगो-धुवाँ-तेल-रगत-दूध वा पानी खस्दछ, अधोमुखी देखिन्छन् तथा एक ठाउँबाट अर्को ठाउँमा जान्छन् भने अर्थात् स्थापना गरिएका मूर्तिमा यस्ता विकार देखिनु भनेको आपत्तिसूचक हुन्छ (शान्ति गर्नू) ।



अन्य अपसगुनका सूचनाहरु

गन्धर्वनगरश्चैव दिवा नक्षत्रदर्शनम् ॥३॥
महोल्कापतनं काष्ठतृणरक्तप्रवर्षणम् ।
गन्धर्वगेहे दिग्धूमं भूमिकम्पं दिवानिशि ॥४॥
अनग्नौ च स्फुलिङ्गाश्च ज्वलनञ्च विनेन्धनम् ।
निशीन्द्रचापमण्डूकशिखरं श्वेतवायसः ॥५॥
दृश्यन्ते विस्फुलिङ्गाश्च गोगजाश्वोष्ट्रगात्रतः ।
जन्तवो द्वित्रिशिरसो जायन्ते वा वियोनिषु ॥६॥
प्रतिसूर्याश्चतसृषुस्युर्दिक्षु युगपद्रवेः ।
जम्बूकग्रामसम्वासः केतूनाञ्च प्रदर्शनम् ॥७॥
काकानामाकुलं रात्रौ कपोतानां दिवा यदि ।
अकाले पुष्पिता, वृक्षा दृश्यन्ते फलिता यदि ॥८॥
कार्यं तच्छेदनन्तत्र ततः शान्तिर्मनीषिभिः ।
एवमाद्या महोत्पाता बहवः स्थाननाशदाः ॥९॥

भावार्थः- आकाशमा सुन्दर नगर र दिनमा तारा देखिनु, उल्कापात हुनु, काठ- घाँस-रगतको वर्षा हुनु, आकाशमा वा दिशाहरुमा बिना कारण धूवाँ देखिनु तथा भूकम्प जानु : यी सबै अशुभ सूचक हुन् । आगो बिनाको झिल्का, ईन्धन बिनाको ज्वाला, रातमा ईन्द्रधनुष, भ्यागुताको पहाड र सेतो काग देखिनु अशुभ सूचक हुन्छ । गाई, हात्ती, घोडा र ऊँट आदि जनावरका शरीरबाट झिल्का निक्लेको देखिए, तीन टाउके जनावर देखिए वा एकथरीबाट अर्कोथरी जनावर जन्मिए अमङ्गल सूचक हुन्छ । २ सूर्य देखिए, एक साथ चारै दिशामा सुर्य देखिए, गाऊँभित्र स्याल लुके वा पुच्छ्रेतारा देखिए अमङ्गल सूचक हुन्छ । दिनमा परेबा र रातमा काग व्याकुल हुनु अशुभ सूचक हुन्छ । यदि असमयमा अमिल्दो ऋतुमा वृक्ष फूलेफले बुद्धिमानले त्यो वृक्ष काटेर उपद्रवलाई शान्ति गराउनू । यसरी धेरै ठूला उत्पातहरु माथि बताइए जसले स्थानलाई नष्ट गर्दछन् ।

उपद्रवको असर

केचिन्मृत्युप्रदाः केचिच्छत्रुभ्यश्च भयप्रदाः ।
मध्याद्भयं पशोर्मृत्युः क्षयोऽकीर्तिः सुखासुखम् ॥१०॥

भावार्थः- माथि बताइएका अपसगुनहरूमध्ये केही मृत्युदायक, केही शत्रुभयदायक, केही अन्य खालका भयदायक, केही पशुमार्ने, केही हानी गर्ने, केही कीर्तिनाशक र केही दुःखदायक हुन्छन् ।

अपसगुनको शान्ति

अनैश्वर्यं चान्नहानिरुत्पातभयमादिशेत् ।
देवालये स्वगेहे वा ईशान्यां पूर्वतोऽपि वा ॥११॥
कुण्डं लक्षणसंयुक्तं कल्पयेन्मेखलायुतम् ।
गृह्योक्त विधिना तत्र स्थापयित्वा हुताशनम् ॥१२॥

भावार्थः- ऐश्वर्यनाश, अन्नहानि, उत्पात तथा भय आदि अमङ्गल हटाउन कुनै मन्दिर वा आफ्नै घरको ईशानकोणमा वा पूर्व दिशामा लक्षणले युक्त मेखलाका साथ कुण्डको निर्माण गर्नू र शास्त्रीय विधिले अग्निको स्थापना गर्नू ।

जुहुयादाज्यभागान्तं पृथगष्टोत्तरं शतम् ।

**यत् इन्द्रभयामहे स्वस्तिदाघोरमन्त्रकैः ॥१३॥**
**समिदाज्यञ्चरुर्व्रीहितिलैर्व्याहृतिभिस्तथा ।**
**कोटिहोमन्तदर्धञ्च लक्षहोममथाऽपि वा ॥१४॥**

भावार्थः- घिउले पहिले आज्यभाग संज्ञक मन्त्रले १०८ आहुति दिनु पर्दछ । त्यसपछि 'यत इन्द्र भयामहे स्वस्तिदा' र 'अघोर ' यी मन्त्रले समिधा, घिउ, चरु, चामल, तिल आदि सहितको हवनीय पदार्थको यथाशक्ति करोड, आधा करोड वा एक लाख होम गर्नु पर्दछ ।

**यथा वित्तानुसारेण तन्नयूनाधिककल्पना ।**
**एकविंशतिरात्रं वा पक्षं पक्षार्द्धमेव वा ॥१५॥**

भावार्थः- पूर्वोक्त विधिले होम गरे पछि शक्ति अनुसार श्रद्धापूर्वक धेरथोर हवन सामग्रीले २१, १५ वा ७ दिनसम्म शान्तिका लागि होम हाल्नु पर्दछ ।

**पञ्चरात्रं त्रिरात्रं वा होमकर्म समाचरेत् ।**
**दक्षिणाञ्च ततो दद्यादाचार्याय कुटुम्बिने ॥१६॥**



भावार्थः- यदि २१, १५ वा ७ दिन पनि सम्भव नभए ५ वा ३ दिन होम गर्नू । होम पछि आचार्यलाई उचित दक्षिणा दिनु पर्दछ । आचार्यको परिवार हुनु आवश्यक छ ।

**गणेशक्षेत्रपालार्कदुर्गाक्षोण्यङ्गदेवताः ।**
**तासां प्रीत्यै जपः कार्यः शेषं पूर्ववदाचरेत् ॥**
**ऋत्विग्भ्यो दक्षिणां दद्यात्षोडशभ्यः स्वशक्तितः ॥१७॥**

भावार्थः- गणेश, क्षेत्रपाल, सूर्य, दुर्गा, भूमि तथा भूमिका अङ्ग देवताको प्रसन्नताका लागि जप गर्नू तथा यिनका मन्त्रले पूर्वोक्त विधिले होम हाल्नू । त्यसपछि कार्यफलको पूर्ण प्राप्तिका लागि १६ ऋत्विजलाई यथाशक्ति दक्षिणा दिनू ।

इति श्रीनारदीयसंहितायां सप्तत्रिंशत्तमोत्पाताध्यायः

✷

नारदीय संहिता अन्तर्गत अपसगुनसम्बन्धी कुरा बताइएको सैंतिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## अष्टत्रिंशोऽध्यायः
### काकमैथुन लक्षणाध्यायः

### काग-मैथुन देखिएको फल र शान्ति

**उत्पातास्त्रिविधा लोके दिवि भौमान्तरिक्षजाः ।**
**तेषां नामानि शान्तिश्च सम्यक् वक्ष्ये पृथक् पृथक् ॥१॥**

भावार्थः- संसारमा स्वर्गीय, अन्तरिक्ष र पृथ्वीजन्य गरी तीन प्रकारका उत्पात हुन्छन् । तिनका नाम र शान्तिका बारेमा बेग्लाबेग्लै बताउँदछु ।

**दिवा वा यदि वा रात्रौ यः पश्येत्काकमैथुनम् ।**
**स नरो मृत्युमाप्नोति यदि वा स्थाननाशनम् ॥२॥**

भावार्थः- दिन वा रातमा यदि कोही व्यक्ति काग-मैथुन देख्दछ भने देख्नेको मृत्यु हुन्छ वा त्यो व्यक्ति स्थानच्यूत (आफ्नो ठाउँ, पद आदिबाट तल झर्नु) हुन्छ ।



**काकघातव्रतञ्चैव विदधीताथवत्सरम् ।**
**पितृदेवद्विजान्भक्त्या प्रत्यहञ्चाभिवादनम् ॥३॥**
**जितेन्द्रियः शुद्धमनाः सत्यधर्मपरायणः ।**
**तद्दोषशमनायेत्थं शान्तिकर्म समाचरेत् ॥४॥**

भावार्थः- एकवर्षसम्म बराबर पितृकर्म गर्दै देवता एवं ब्राह्मणलाई प्रणाम गरी काकघातव्रत गर्नु पर्दछ तथा सत्य धर्म परायण भई शुद्धमनले ब्रह्मचर्यपूर्वक काकमैथुनजन्य दोषको शान्तिका लागि शान्तिकर्म गर्नु पर्दछ ।

**गृहस्यशानकोणेतु होमस्थानं प्रकल्पयेत् ।**
**स्वगृह्योक्तविधानेन तत्र स्थाप्यं हुताशनम् ॥५॥**

भावार्थः- घरको ईशान कोणमा कुण्ड बनाई त्यसमा आफ्नो गृह्यसूत्रको विधिले अग्निको स्थापना गर्नु पर्दछ ।

**मखान्ते समिदाज्यान्नैर्होमश्चाष्टोत्तरं शतम् ।**
**प्रतिमन्त्रं त्र्यम्बकेन चाथ मृत्युञ्जयेन वा ॥६॥**
**व्याहृतिभिर्व्रीहितिलैर्जपाद्यन्तं प्रकल्पयेत् ।**
**पूर्णाहुतिञ्च जुहुयात् कर्ता शुचिरलङ्कृता ॥७॥**

भावार्थः- समिधा, घिउ, तथा अन्न आदिले १०८ आहुति दिनु पर्दछ । 'त्र्यम्बकं यजामहे..' यो मन्त्रले वा महामृत्युञ्जय मन्त्रले व्याहृतिले सहित व्रीहि, तिल आदि हवनीय पदार्थले जपका अन्तमा जपसंख्या अनुसार होम गर्नु तथा पवित्रतापूर्वक अलङ्कृत भई जजमानले पूर्णाहुति गर्नू ।

**स्वर्णश्रृङ्गीं रौप्यखुरीं कृष्णां धेनुं पयस्विनीम् ।**
**वस्त्रालङ्कारसहितां निष्कद्वादश संयुताम् ॥८॥**

भावार्थः- सुनको सिङ, चाँदीको खुरले युक्त कालो दुहुनु गाईलाई वस्त्र र अलङ्कारले सजाई १२ वटा सुनका सिक्काका साथ दान गर्नू ।

**तदर्द्धेन तदर्द्धेन तदर्द्धेनाथवा पुनः ।**

**यथा वित्तानुसारेण तन्न्यूनाधिककल्पना ॥९॥**

भावार्थः- असमर्थ भए त्यसको आधा, आधाको आधा वा त्यसको पनि आधा वा गच्छे अनुसार सुनका मुद्रा श्रद्धाले दान गर्नू ।

**आचार्याय श्रोत्रियाय गाञ्च दद्यात्कुटुम्बिने ।**
**ब्राह्मणेभ्यो विशिष्टेभ्यो यथाशक्ति च दक्षिणाम् ॥१०॥**

भावार्थः- वेदाध्यायी कुटुम्बी आचार्यका लागि गोदान तथा बाँकी विशिष्ट ब्राह्मणलाई यथाशक्ति दक्षिणा दिनू ।

**ब्राह्मणान्भोजयेत्पश्चात् स्वस्तिवाचनपूर्वकम् ।**
**एवं यः कुरुते सम्यक् स तद्दोषात्प्रमुच्यते ॥११॥**

भावार्थः- पछि स्वस्तिवाचनपूर्वक ब्राह्मणलाई भोजन गराउनू । यसरी विधिपूर्वक जो शान्ति गर्दछ उ काकमैथुन दोषबाट मुक्त हुन्छ ।

इति श्रीनारदीयसंहितायां अष्टत्रिंशत्तमः वायसमैथुनलक्षणाध्यायः

✷

नारदीय संहिता अन्तर्गत काग-मैथुन सम्बन्धी कुरा बताइएको अठतिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## एकोनचत्वारिंशत्तमोऽध्यायः
### पल्लीसरटाशुभस्थानशान्तिप्रकरणाध्यायः

माउसुली शरीरमा खस्नु वा छेपारो शरीरमा चढ्नुको फल र शान्ति

**पल्ल्याः प्रपतने पूर्वं फलमुक्तं शुभाशुभम् ।**
**शीर्षे राज्यश्रियोऽवाप्तिर्मौलौत्वैश्वर्यवर्धनम् ॥१॥**

भावार्थः- माउसुली शरीरमा खसे अङ्ग अनुसार त्यसको फरकफरक शुभ-अशुभ फल हुन्छ भनी पहिलेका आचार्यहरूले बताएका छन् । टाउकामा खसे राज्य एवं लक्ष्मी पाइन्छ । निधारमा खसे ऐश्वर्य बढ्दछ ।

**पल्ल्याः प्रपतने चैव सरटस्य प्ररोहणे ।**
**शुभाशुभं विजानीयात्तत्तत्स्थाने विशेषतः ॥२॥**

भावार्थः- माउसुली शरीरमा खसे वा छेपारो शरीरमा चढे खसेको वा चढेको अङ्गका आधारमा फल हुन्छ ।



**सव्ये भुजे जयः प्रोक्तो ह्यपसव्ये महद्भयम् ।**
**कुक्षौ दक्षिणभागस्य धनलाभस्तथैव च ॥३॥**

भावार्थः- देब्रे हातमा खसे जय (विजय वा भलो), दाहिनी हातमा खसे ठूलो डर र दाहिने कोखमा खसे धनलाभ हुन्छ ।

**वामकुक्षौ तु निधनं गदितं पूर्वसूरिभिः ।**
**सव्यहस्ते मित्रलाभोवाम(दक्ष)हस्ते तु निःस्वता ॥४॥**

भावार्थः- पहिलेका आचार्यहरुले देब्रे कोखमा खसे मृत्यु, बायाँ हातमा मित्रलाभ र दाहिने हातमा खसे दरिद्रता हुन्छ भनेका छन् ।

**उदरे सव्यभागे तु सुपुत्रावाप्ति रुच्यते ।**
**वामभागे महारोगः कट्यां सव्ये महद्यशः ॥५॥**

भावार्थः- पेटको दाहिनेतिर खसे सुन्दर पुत्रप्राप्ति, पेटको देब्रेतिर खसे महारोग तथा दाहिने कमरमा खसे महायश हुन्छ भनेका छन् ।

**वामकट्यान्तु निधनं मुनिभिस्तत्त्वदर्शिभिः ।**
**जान्वोरेवं वीजानीयात्सव्यपादे शुभावहम् ॥६॥**

भावार्थः- तत्वदर्शी मुनिहरुले देब्रे कमरमा खसे मृत्यु हुन्छ भनेका छन् । दुवै घुँडामा खसे पनि मृत्यु हुन्छ भनेका छन् । दाहिने गोडामा खसे शुभ हुन्छ ।

**वामपादे तु गमनमिति प्राहुर्महर्षयः ।**
**स्त्रीणान्तु सरटश्चैव व्यस्तमेतत्फलं वदेत् ॥७॥**

भावार्थः- देब्रे गोडामा खसे गमन हुन्छ । यस्तो महर्षीहरुले भनेका छन् । छेपारो शरीरमा चढेको फल पनि यसरी नै जान्नू । स्त्रीलाई यसको उल्टो फल प्राप्त हुन्छ ।

**फलं प्रोहणे चैव सरटस्य प्रचारतः ।**
**सर्वाङ्गेषु शुभम् विद्याच्छान्तिं कुर्यात्स्वशक्तितः ॥८॥**

भावार्थः- छेपारो जहाँसम्म चढेको हो त्यो अन्तिम भागको नै शुभ अशुभ फल विचार गर्नु पर्दछ । अशुभ फल हटाउन शान्ति गराउनु पर्दछ ।

**शुभस्थाने शुभावाप्तिरशुभे दोषशान्तये ।**
**तत्स्वरुपं सुवर्णेन रुद्ररुपन्तथैव च ॥९॥**

भावार्थः- शुभ स्थानसम्म चढ्दा शुभ फल हुन्छ । अशुभ फल शान्तिका लागि सुनको छेपारो बनाई त्यसलाई रुद्ररुपले पूजा गर्नू ।

**मृत्युञ्जयेन मन्त्रेण वस्त्रादिभिरथार्चयेत् ।**
**अग्निं तत्र प्रतिष्ठाप्य जुहूयात्तिलपायसैः ॥१०॥**

भावार्थः- मृत्युञ्जय मन्त्रले वस्त्र आदि चढाई मूर्तिलाई पूजा गर्नू र अग्निको स्थापना गरी तिल र खीरले होम गर्नू ।

**आचार्यो वारुणैः सूक्तैः कुर्यात्तत्राभिषेचनम् ।**
**आज्यावलोकनं कृत्वा शक्त्या ब्राह्मणभोजनम् ॥११॥**

भावार्थः- यहाँनिर आचार्यहरूले वरुणसूक्तले अभिषेक गर्नू र जजमानले घिउमा आफ्नो मुख हेरी शक्ति अनुसार ब्राह्मण भोजन गराउनू ।

**गणेशक्षेत्रपालार्कदुर्गाक्षोण्यङ्गदेवताः ।**
**तासां प्रीत्यै जपः कार्यः शेषं पूर्ववदाचरेत् ॥**
**ऋत्विग्भ्यो दक्षिणां दद्यात्षोडशभ्यः स्वशक्तितः ॥१२॥**

भावार्थः- गणेश, क्षेत्रपाल, सूर्य, दुर्गा, भूमि, अङ्गदेवतालाई खुसी पार्न तिनका मन्त्र जप्नू र पहिलेभैँ हवन आदि सकेर शक्ति अनुसार ब्राह्मण भोजन गराउनू ।

इति श्रीनारदीयसंहितायामेकोनचत्वारिंशत्तमः पल्लीसरटाशुभस्थानशान्तिप्रकरणाध्यायः

✷

नारदीय संहिता अन्तर्गत शरीरमा माउसुली खसेको र छेपारो चढेको फल र शान्ति सम्बन्धी कुरा बताइएको उनन्चालिसौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चत्वारिंशत्तमोऽध्यायः

### कपोतपिङ्गलादिशान्तिरध्यायः

घरमा परेवा बसेको वा पसेको फल र शान्तिकर्म

**आरोहेत गृहं यस्य कपोतो वा प्रवेशयेत्।**
**स्थानहानिर्भवेतस्य यद्वानर्थपरम्परा ॥१॥**

भावार्थः- जसको घरमा परेवा बस्छन् वा भित्र छिर्दछन् उसलाई हानी र कष्ट हुन्छ ।

**दोषाय धनिनां गेहे दरिद्राणां शिवाय च ।**
**तच्छान्तिस्तु प्रकर्त्तव्या जपहोमविधानतः ॥२॥**

परेवा बस्नु वा पस्नु धनीका लागि दोषकारक तथा गरिबका लागि कल्याणकारी हुन्छ । त्यसैले धनीले विधिपूर्वक जपहोम आदिबाट शान्ति गराउनू ।

**ब्राह्मणान्वरयेत्तत्र स्वस्तिवाचनपूर्वकम् ।**

**षोडशद्वादशाष्टौ वा श्रौतस्मार्तक्रियापरान् ॥३॥**

भावार्थः- शान्तिका लागि स्वस्तिवाचन सहित श्रौत र स्मार्त क्रियामा निष्ठावान् १६, १२ वा ८ ब्राह्मणलाई वरण गर्नू ।

**'देवाः कपोत' इत्यादि ऋग्भिः स्यात्पञ्चभिर्जपः ।**
**कुण्डं कृत्वा प्रयत्नेन स्वगृह्योक्त विधानतः ॥४॥**

भावार्थः- 'देवाः कपोत' आदि गरिएका ५ वेदमन्त्रको जप गराउनू तथा आफ्नो गृह्यसूत्र अनुसार प्रयत्नपूर्वक कुण्ड बनाई अग्निको स्थापना गर्नू ।

**ईशान्यां स्थापयेद्वह्निं मुखान्तेऽष्टोत्तरं शतम् ।**
**प्रत्येकं समिदाज्यान्नैः प्रतिप्रणवपूर्वकम् ॥५॥**

भावार्थः- ईशान कोणमा अग्निको स्थापना गरी ॐकारले सहित समिधा, घिउ तथा अन्नले प्रत्येक देवताका लागि १०८ आहुति दिनू ।

**यत इन्द्रभयामहे स्वस्तीत्येतेन त्र्यम्बकैः ।**
**त्रिभिर्मन्त्रैश्च जुहुयात्तिलान्व्याहृतिभिः सह ॥६॥**

भावार्थः- 'यत इन्द्रभयामहे', 'स्वस्तिनः इन्द्रो' र 'त्र्यम्बकं' यी तीन मन्त्रले व्याहृतिपूर्वक तिलले होम गर्नू ।

**कुर्यादिव ततो भक्त्या कर्त्ता पूर्णाहुतिं स्वयम् ।**
**विप्रेभ्यो दक्षिणां दद्याद्दोषशान्तिं ततो जयेत् ॥७॥**

भावार्थः- त्यसपछि जजमान आफैंले भक्तिपूर्वक पूर्णाहुति गरी ब्राह्मणलाई दक्षिणा दिनू । यसो गर्नाले उपरोक्त दोषको शान्ति हुन्छ ।

**ब्राह्मणान्भोजयेत्पश्चात्स्वयं भुञ्जीत बन्धुभिः ।**
**एवं यः कुरुते भक्त्या तस्माद्दोषात्प्रमुच्यते ॥८॥**

भावार्थः- ब्राह्मणलाई भोजन गराए पछि आफ्ना बन्धुवान्धवका साथ आफूले खानू । यसरी भक्तिले जसले गर्दछ उ त्यस दोषबाट मुक्त हुन्छ ।



**पिङ्गलायाः स्वरेप्येवं मधुबाल्मीकयोरपि ।**
**सम्पूर्णमङ्गले हानिः शून्यं सद्मनि मङ्गलम् ॥९॥**

भावार्थः- पिङ्गला चरा, मधु चरा र बाल्मीक चराको स्वर सबै खालका मङ्गल नाश गर्ने हुन्छ भने खाली घरमा यिनको स्वर भए मङ्गल गर्ने हुन्छ ।

विभिन्न अपसगुनका स्वरको स्थान अनुसारको फल

**प्राकारेषु पुरद्वारे प्रासादाद्येषु वीथिषु ।**
**तत्फलं ग्रामपस्यैव सीमा सीमाधिपस्य च ॥**
**शान्तिकर्माखिलं कार्यं पूर्वोक्तेन क्रमेण तु ॥१०॥**

भावार्थः- किल्ला, महल, ग्रामद्वार, राजभवन वा बाटोका अपसगुनका स्वर गाउँका मालिक तथा सीमाका स्वर सीमाधिपतिका लागि अशुभ हुन्छन् । यस्ता स्वर भए पूर्वोक्त विधिले शान्ति गर्नू ।

॥ इति श्रीनारदीयसंहितायां चत्वारिंशत्तमो कपोतपिङ्गलादिशान्तिरध्यायः ॥

✷

॥ नारदीय संहिता अन्तर्गत परेबा घरमा बसेको वा पसेको फल र शान्तिसम्बन्धी कुरा बताइएको चालिसौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ॥

✷

# एकचत्वारिंशत्तमोऽध्यायः

शिथिलजननशान्तिरध्यायः

केही अपशगुन र शान्तिका उपाय

**उत्पाता ह्यखिला नृणामगम्याः शुभसूचकाः ।**
**तथापि सद्यः फलदं शिथिलीजनं महत् ॥१॥**

भावार्थः- शुभसूचक सबै उत्पात (आकस्मिक दुर्घटनाका सूचक) मानव जीवनमा पाउन दुर्लभ छ तर पनि स्थानच्यूत (पथभ्रष्ट) वा कुनै वस्तु एक्कासी खस्नु वा त्यसमा हलचल हुनु जस्ता अपसगुन भने चाँडै फल दिने हुन्छन् ।

**शिथिलीजनं ग्रामे सेतौ वा देवतालये ।**
**तत्फलं ग्रामपस्यैव सीम्नि सीमाधिपस्य च ॥२॥**

भावार्थः- शिथिलीजन गाऊँ, पुल वा देवालयमा भए त्यसको फल ग्रामाधिपतिलाई र सीमामा भए सीमाधिपतिलाई हुन्छ ।



**शिथिलीजनने हानिः सर्वस्थानेषु दिक्षु च ।**
**तद्दोषशमनायैव शान्तिकर्म समाचरेत् ॥३॥**

भावार्थः- सबै ठाऊँ र सबै दिशामा जहाँ शिथिलीजन उत्पात हुन्छ त्यहाँ हानि हुन्छ त्यसैले त्यो दोष शान्तिको उपाय गर्नु पर्दछ ।

शिथिलीजनन आदि अपशकुनहरुको दोष निवारण

**स्वर्णेन मृत्युप्रतिमां कृत्वा वित्तानुसारतः ।**
**रक्तवर्णं चर्मदण्डधरं महिषवाहनम् ॥४॥**

भावार्थः- गच्छे अनुसार यमराजको स्वर्णप्रतिमा बनाउनू जसको छाला र दण्ड रातो तथा बाहन भैंसी होस् ।

**नववस्त्रञ्च सम्वेष्ट्य तण्डुलोपरि पूजयेत् ।**
**तल्लिङ्गेन च मन्त्रेण नैवेद्यन्तु यथाविधि ॥५॥**

भावार्थः- थाली आदिमा चामल भरी नयाँ वस्त्रले प्रतिमालाई बेरी स्थापना गर्नू र यमराजका मन्त्रले पञ्च वा षोडशोपचार विधिले नैवेद्य आदिले पूजा गर्नू ।

**पूर्णकुम्भं तदीशान्यां रक्तवस्त्रेण वेष्टितम् ।**
**पञ्चत्वक्पल्लवैर्युक्तं जलं मन्त्रैः समर्पयेत् ॥६॥**

भावार्थः- यममूर्तिको ईशानतिर रातो कपडाले बेरिएको पूर्णकलशमा पञ्चत्वक् र पञ्चपल्लव हाली मन्त्र पढ्दै जल भर्नू ।

**अग्निसंस्थापनं प्राच्यां स्वगृह्योक्तविधानतः ।**
**प्रत्येकमष्टोत्तरशतमघोरेणैव होमयेत् ॥७॥**

भावार्थः- स्वगृह्यसूत्र अनुसार पूर्वमा अग्नि स्थापना गरी प्रत्येक अघोर मन्त्रले १०८ होम हाल्नू ।

**मन्त्रेण समिदाज्यान्नैः शेषं पूर्ववदाचरेत् ।**
**द्विजाय प्रतिमां दद्यात्सर्वदोषोपनुत्तये ॥८॥**

भावार्थः- अघोर मन्त्रले समिधा, घिउ र तिलान्नको होम हाल्नू । तर्पण, मार्जन, दान आदि कर्म पूर्व विधिले गर्नू । यसरी पूजा सकी विसर्जन पछि सबै दोषको शान्तिका लागि प्रतिमा ब्राह्मणलाई दान दिनू ।

**जलमन्त्रेण सम्प्रोक्ष्य तत्स्थानं तीर्थवारिभिः ।**
**एवं यः कुरुते सम्यक्सतु दोषात्प्रमुच्यते ॥९॥**

भावार्थः- वरुणका मन्त्रले त्यो पूजास्थललाई तथा शिथिलाजन स्थानलाई तीर्थजल वा कलशजलले प्रोक्षण विधिले सेचन गर्नू । यसरी शान्तिकर्म गर्नेको सबै दोष मुक्त हुन्छ ।

इति श्रीनारदीयसंहितायामेकचत्वारिंशत्तमः शिथिलजननशान्तिरध्यायः

✷

नारदीय संहिता अन्तर्गत स्थानभ्रष्टको फल र शान्तिसम्बन्धी कुरा बताइएको एकचालिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## द्विचत्वारिंशत्तमोऽध्यायः

### निमित्तशान्तिरध्यायः

#### कपाल झरेको फल

**श्रीरग्निबन्धुनाशश्च वित्तहानिर्महद्यशः ।**
**बन्धुलाभः पुत्रहानिः स्त्रीचिन्तामहतोगदः ॥१॥**
**पूर्वादीनि फलान्येषामिन्द्रलुप्तञ्च मस्तके ।**
**पञ्चत्वक्पल्लवैश्चैव पञ्चामृतफलोदकैः ॥२॥**
**अभ्यङ्गं मन्त्रितैर्मन्त्रैः स्नानदोषं विमुञ्चति ।**
**एवमेवाग्निदाहेऽपि मस्तके मध्यदूषिते ॥३॥**
**दन्तच्छेदे काकहते सरटापत्तनेऽपि च ।**
**आशिषो वाचनं कृत्वा ब्राह्मणान्भोजयेच्छुचिः ॥४॥**

भावार्थः- यदि अचानक कपाल कुनै स्थानबाट झरे वा नाशिए शिरको पूर्व आदि दिशा अनुसार व्रक्रमैले तथा मध्यभागले व्रक्रमशः पूर्वबाट लक्ष्मी प्राप्ति, आग्नेयबाट अग्नि-भय, दक्षिणबाट बन्धुनाश, नैऋत्यबाट धनहानी, पश्चिमबाट महान यश, वायव्यबाट बन्धु लाभ, उत्तरबाट पुत्र हानी, ईशानबाट स्त्री चिन्ता तथा मध्यभागबाट ठूलो रोग : यी फल जान्नू । अशुभ फल शान्तिका लागि पञ्चत्वक्, पञ्चपल्लव, पञ्चामृत तथा फल एवं जल आदिले मन्त्रद्वारा स्नान तथा लेप आदि लगाउनु दोष कट्दछ । यो उपचार अग्निदाह, दन्तच्छेद, कौवाले टोक्दा, छेपारो शरीरमा चढ्दा तथा माउसुली खस्दा पनि गर्नू । यसमा स्वस्तिवाचनपूर्वक ब्राह्मणबाट आशिर्वाद लिई तिनलाई भोजन गराउनु पर्दछ ।

#### शरीरका अङ्ग फरफराएको फल

**लाभदः स्त्रीजनानां त्वशुभदो व्यत्ययो व्ययः ।**
**दक्षिणे स्फुरणं लाभं बामे स्फुरणमन्यथा ॥५॥**

भावार्थः- पुरुषलाई शुभ हुने शकुन वा अङ्ग फरफराउने कार्य स्त्रीका लागि अशुभ हुन्छ भनी समझिनु पर्दछ । पुरुषका दाहिने र स्त्रीका देब्रे अङ्ग फरफराउनु शुभ हुन्छ ।

इति श्रीनारदीयसंहितायां निमित्तशान्तिरध्यायः द्विचत्वारिंशत्तमः

नारदीय संहिता अन्तर्गत कपाल झर्ने आदि र शान्तिका कुरा बताइएको बयालिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

## त्रिचत्वारिंशदध्यायः

### उल्का लक्षणाध्यायः

#### उल्काका प्रकारहरु

**स्वर्गाच्युतानां रुपाणि यान्युल्कास्तानि वै भुवि ।**
**धिष्ण्योल्काविद्युदशनितारा: पञ्चविधा:स्मृता: ॥१॥**

भावार्थ:- स्वर्गबाट खस्ने उल्काहरु यस पृथ्वीमा धिष्ण्या, उल्का, विद्युत, अशनि र तारा गरी पाँच नामले प्रसिद्ध छन् ।

#### उल्का अनुसार फल दिने समय

**सम्यक्पञ्चविधानाञ्च वक्ष्यते लक्षणं फलम् ।**
**याचयन्ति त्रिभिः पक्षैर्धिष्ण्योल्काशनिसंज्ञिता: ॥२॥**

भावार्थ:- पाँच थरी उल्काको लक्षण र त्यसको फल बताउँदछु । यी धिष्ण्या, उल्का, विद्युत, अशनि आदि उल्काले ४५ दिनमा आफ्नो शुभ-अशुभ फल दिन्छन् ।

**विद्युत्षड्भिरहोभिश्च तारास्तद्वत्फलप्रदा: ।**
**फलपाककरी तारा धिष्ण्याख्यार्द्धफलप्रदा ॥३॥**

भावार्थ:- विद्युत ६ दिनमा, तथा तारापात पनि आफ्नो फल ६ दिनमै दिन्छ । तारापातले पूरा फल दिन्छ तथा धिष्ण्याले आधा फल दिन्छ ।

**उल्काविद्युदशन्याख्या: सम्पूर्णफलदा नृणाम् ।**
**अश्वेभोष्टपशुनृषु वृक्षक्षोणीषु च क्रमात् ॥४॥**
**विदारयन्ति पतितं स्वनेन महताशनिः ।**
**जनयन्ति च सन्त्रासं विद्युत् व्योम्निरिवस्फुटम्४ ॥५॥**

भावार्थ:- उल्का, विद्युत र अशनिले मानिसलाई पूरै फल दिन्छन् । हात्ती, घोडा, ऊँट, पशु, मानिस, वृक्षको लहर : यी सबैमा क्रमैले परेर छियाछिया पार्दछन् तथा तेजिलो कडा आवाजका

हुन्छन् । यी अशनिका लक्षण हुन् । यी खस्दा आकाशमा विजुली धेरै चम्किन्छ र डरलाग्दो हुन्छ ।

**वक्राविशालज्वलिता पतन्ती वनराजिषु ।**
**धिष्ण्यान्त्यपुच्छा पतति ज्वलिताङ्गारसन्निभा ॥६॥**

भावार्थः- वक्राकार धेरै ठूलो र बल्दै वनमा झर्दै आगोको फिलिङ्गोका समान अन्तमा पुच्छर देखिने यस्तो धिष्ण्या नामको उल्का हुन्छ ।

**हस्तद्वयप्रमाणा सा दृश्यते च समीपतः ।**
**ताराब्जतनुवच्छुक्ला हस्तदीर्घाम्बुजारुणा ॥७॥**

भावार्थः- जुन दुई हात नापोको र नगिचै चन्द्रमाको जस्तो सेतो वर्णको हुन्छ त्यसको नाम तारा हो । तथा एक हात लामो रक्तकमलको रङको ...।

**उर्ध्वं वाप्यथवा तिर्थगधो वा गगनान्तरे ।**

**उल्काशीरो विशाला तु पतन्ति वर्द्धते तनुम् ॥८॥**

भावार्थः- आकाशमा माथि वा थल तेर्सो विशाल टाउको हुने तथा खस्दा बढ्दै गएको देखिने खालको उल्का हुन्छ ।

उल्काका विभिन्न प्रकार र त्यस अनुसारको फल

**दीर्घपुच्छा भवेत्तस्याः भेदाः स्युर्वहवस्तथा ।**
**पीडाश्वोष्ट्राहिगोमायुखरगोगजदंष्ट्रिकाः ॥९॥**

भावार्थः- उल्का लामो पुच्छरको हुन्छ तथा त्यसका अनेकौं भेद हुन्छन् । जब उल्का ऊँट, सर्प, स्याल, गधा, गाई, हात्ती वा डरलाग्दा दाँत हुने देखिन्छ तब जनता पिडित हुन्छन् ।

**कपिगोधाधूमनिभा विविधा पापदा नृणाम् ।**
**अश्वेभचन्द्ररजतवउषहंसध्वजोपमाः ॥१०॥**

भावार्थः- बाँदर, गोही, तथा धुवाँजस्तो देखिने खालका उल्का मानिसका लागि अनेक पाप फलदायक हुन्छन् तथा घोडा, हात्ती, चन्द्रमा, चाँदी, साँढे, हाँस र ध्वजाका समान तथा... ।

**वज्रशङ्खशुक्तिकाब्जरुपाः शिवसुखप्रदाः ।**
**पतन्तीह स्वरा वह्नौ राजराष्ट्रक्षयाय च ॥११॥**

भावार्थः- अथवा हीरा, शङ्ख, सीपी र कमलका स्वरुपका उल्का परे मङ्गल तथा सुखदायक हुन्छ । यदि अग्निमा उल्कापात भए राजाको तथा राष्ट्रको नाश हुन्छ ।

**यद्यम्बरे निपतति लोकस्याप्यति विभ्रमः ।**
**यद्यर्केन्दू संस्पृशति तत्र भूपप्रकम्पनम् ॥१२॥**

भावार्थः- यदि आकाशमै रहे (वा बिलाए) मानिसमा अत्यन्त भ्रम हुन्छ । यदि सूर्य र चन्द्रलाई छोए भने त राजालाई भयभीत पारिदिन्छन् ।

**परचक्रागमभयं जनानां क्षुज्जलाद्भयम् ।**
**अर्केन्द्वोरपसव्योल्का पौरेतरविनाशदा ॥१३॥**

भावार्थः- यसबेला अर्कै राजा आउने डर, अकाल र भोकमरीले जनवर्ग त्रस्त हुन्छन् । सूर्यचन्द्रका देब्रेतिर भई उल्का गए शहर बाहिरकालाई कष्ट हुने हुन्छ ।

**उदयास्तमयेऽर्केन्द्वोः परतोल्का शुभप्रदा ।**
**सितरक्ता पीतसिता सोल्का नेष्ठा द्विजातिभिः ॥१४॥**
**सितोदितोभये पार्श्वे पुच्छे दिक्षु विदिक्षु च ।**
**पतितोल्कादिगृक्षाणि विप्रादीनामनिष्टदा ॥१५॥**

भावार्थः- सूर्य वा चन्द्रमा उदाएपछि सन्धिमा उल्का परे त्यसलाई शुभ जान्नू । सेतो, रातो वा पहेँल्च्यो सेतो रङको उल्का परे द्विजातिका लागि राम्रो हुँदैन । सेतो उल्काको माख्लो भागमा पुच्छर भएर दिशा विदिशामा उल्का खसे त्यो नक्षत्र पनि ब्राह्मण आदिका लागि कष्टदायक हुन्छ ।

**तारा कुन्दनिभा स्निग्धा भूभुजान्तु शुभप्रदा ।**
**नीला श्यामारणा चाग्निवर्णोक्ता सा शुभप्रदा ॥१६॥**

भावार्थः- कुन्द फूलका समान सेतो चिल्लो तारा राजाका लागि शुभ फलदायक तथा नीला, काला, अरुण र अग्नि वर्णका तारा अशुभ फलदायक हुन्छन् ।

**सन्ध्यायां वह्नि पीडा च दलिता राजनाशिनी ।**
**नक्षत्रग्रहणे देवस्तद्वर्णानामनिष्टदा ॥१७॥**

भावार्थः- साँझमा खस्ने वा फुट्ने तारा अग्निभय दिने हुन्छ । यदि ती टुक्राटुक्रा भए राजालाई नष्ट गर्ने हुन्छन् तथा जुन नक्षत्रमा छन् त्यसका मालिक देवता या देवगण मनुष्यका लागि कष्टदायक हुन्छन् ।

विभिन्न नक्षत्रमा हुने उल्का पतन र त्यस अनुसारको फल

**स्थिरधिष्ण्येषु पतिता स्त्रीणाञ्चोक्ता भयप्रदा ।**
**क्षिप्रभेषु विशां पीडा भूपतीनाञ्चरेषु च ॥१८॥**

भावार्थः- स्थिर नक्षत्रमा तारा खसे स्त्रीका लागि कष्टप्रद, क्षिप्र नक्षत्रमा वैश्यलाई तथा चर नक्षत्रमा खसे राजालाई पीडादायक हुन्छ ।

**मृदुभेषु द्विजातीनां दारुणं दारुणेषु च ।**
**उग्रभेषु च शूद्राणां परेषां मिश्रभेषु च ॥१९॥**

भावार्थः- मृदु नक्षत्रमा ब्राह्मणलाई, दारुण नक्षत्रमा दुष्टजनलाई, उग्र नक्षत्रमा शूद्रलाई तथा मिश्र नक्षत्रमा खसेको ताराले अन्त्यजलाई पीडा हुन्छ ।

विभिन्न स्थानमा हुने उल्का पतन र त्यस अनुसारको फल

**राजराष्ट्रस्वनाशाय प्रासादप्रतिमासु च ।**
**गृहेषु स्वामिनां पीडा नृपाणां पर्वतेषु च ॥२०॥**

भावार्थः- तारा राजमहल र मन्दिरमा खसे देशलाई नष्ट गर्ने, घरमा खसे घर स्वामीलाई तथा पर्वतमा खसे राजालाई पीडादायक हुन्छ ।

**दीक्षितानां दिगीशानां कर्षकाणां स्थलेषु च ।**
**प्रकारे परिखायां वा द्वारि तत्पौरमध्यमे ॥२१॥**

भावार्थः- जमिनमा खसेको तारा दीक्षित, दिग्गज र कृषकलाई पिडादायक हुन्छ । किल्ला, कोट, गहीरा खाडल, शहरको मुख्य ढोका वा शहरको बीचमा खसेको तारा पनि कष्टदायक नै हुन्छ ।

**परचक्रागमभयं राज्यं पौरजनक्षयः ।**
**गोष्ठे गोस्वामिनां पीडा शिल्पिकानाञ्जलेषु च ॥२२॥**

भावार्थः- साथै राज्यमा अर्को राजा आउँदछ र शहरका बासिन्दाको नाश हुन्छ । गौशालामा खसे त्यसका मालिकलाई तथा जलमा खसे शिल्पकारलाई कष्ट हुन्छ ।

**विभिन्न आकारका उल्का पतन र त्यस अनुसारको फल**

**राजहन्त्री तन्तुनिभा इन्द्रध्वजसमाऽथवा ।**
**प्रतीपगा राजपत्नीं तिर्यग्गा च चमूपतिम् ॥२३॥**

भावार्थः- धागो वा इन्द्रधनुष आकारको तारा खसे राजालाई, उल्टो खसे राजपत्नीलाई तथा तेर्सो खसे सेनापतिलाई नष्ट पार्दछ ।



**अधोमुखी नृपं हन्ति ब्राह्मणानूर्ध्वगा तथा ।**
**वृक्षोपमा पुच्छनिभा जनसङ्क्षोभकारिणी ॥२४॥**

भावार्थः- घोप्टो परेकोले राजालाई र ऊर्ध्वगामी ताराले ब्राह्मणलाई नष्ट पार्दछ । रुख र पुच्छरसमानका ताराले जनवर्गलाई भोको र त्रासदीपूर्ण पार्दछ ।

**प्रसर्पिणी या सर्प्पवत्सा गणानांस्यादनिष्टदा ।**
**वर्तुलोल्का पुरं हन्ति छत्राकारा पुरोहितम् ॥२५॥**

भावार्थः- सर्पगतिको उल्का झरे आफूसँग आश्रित रहेका व्यक्तिलाई कष्ट दिन्छ । गोलो भए नगरलाई तथा छाताकार भए पुरोहित्याइँ गर्नेलाई मार्दछ ।

**वंशगुल्मलताकारा राष्ट्रविद्राविणी तथा ।**
**सूकरव्यालसदृशा खण्डाकारा च पापदा ॥**
**इन्द्रचापनिभाराज्यं मूर्छिता हन्ति तोयदम् ॥२६॥**

भावार्थः- बाँस, झाडी वा लहराका आकारका राष्ट्रलाई विनाश गर्ने, सुँगुर- सर्पाकारका र खण्डितले पापाचार बढाउने, इन्द्रेणी जस्ताले राज्य नष्ट पार्ने र कान्तिहीन ताराले बादल वा जलजीवीलाई नष्ट पार्दछन् ।

इति श्रीनारदीयसंहितायां उल्का लक्षणाध्यायः त्रिचत्वारिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत उल्का वर्षा सम्बन्धी कुरा बताइएको त्रिचालिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुश्चत्वारिंशत्तमोऽध्यायः

### परिवेशलक्षणाध्यायः

परिवेष वा मण्डलको परिचय

**किरणा वायुनिहता उच्छ्रिता मण्डलीकृताः ।**
**नानावर्णाकृतयस्ते परिवेषाः शशीनयोः ॥१॥**

भावार्थः- हावाले हानेर चन्द्रमा र सूर्यको किरण माथि उठी मण्डलाकार हुन्छन् । यिनको अनेक रङ्ग र आकार छन् तथा यिनलाई चन्द्रमा र सूर्यको परिवेष (मण्डल) भनिन्छ ।

परिवेषका रङ्ग, आकार र त्यस अनुसारको फल

**ते रक्तनीलपाण्डूरकपोताभ्राश्च कापिलाः ।**
**सपीतशुक्रवर्णाश्च प्रागादिदिक्षु वृष्टिदाः ॥२॥**
**मुहुर्मुहुः प्रलीयन्ते न सम्पूर्णफलप्रदाः ।**
**शुभास्तु कपिलाः स्निग्धाः क्षीरतैलाम्बुसन्निभाः ॥३॥**

भावार्थः- ती परिवेष राता, नीला, गुलाफी, परेवा तथा बादल जस्तो खैरो, पहेँलो तथा हरियो रङ्गका क्रमैले पूर्व आदि गरिएका आठ दिशामा वर्षा गराउने हुन्छन् । यदि यी पटकपटक बन्ने बिग्रने गरिरहन्छन् भने यिनको पूरा फल हुँदैन । कैला वर्णका, चिल्ला तथा दूध-तेल-जल समान देखिने परिवेष शुभ हुन्छन् ।

**चापश्रृङ्गाटकरथक्षतजाभारुणाः शुभाः ।**
**अनेकवृक्षावर्णाश्च परिवेषा नृपान्तकृत् ॥४॥**

भावार्थः- धनुष, चौबाटो, रथ तथा रातो वर्णको परिवेश शुभदायक हुन्छ । अनेकौं वृक्षसमूह जस्तो देखिने परिवेषले राजालाई नष्ट गर्ने हुन्छ ।

**अहर्निशं प्रतिदिनं चन्द्रर्कावरुणो यदा ।**
**परिविष्टो नृपवधं कुरुतो लोहितौ यदा ॥५॥**

भावार्थः- प्रतिदिन दिनरात क्रमशः सूर्यचन्द्र रातो रङ्गको भएर परिविष्ट भए अर्थात मण्डलमा रहे भने त राजाको हत्या र भूमि रक्तरञ्जित हुन्छ ।

परिवेषका संख्या बीचमा पर्ने ग्रह र त्यस अनुसारको फल

**द्विमण्डलश्चमूनाथं नृपघ्नोऽथत्रिमण्डलम् ।**
**परिवेषगतः सौरिः क्षुद्रधान्य विनाशकृत्॥६॥**

भावार्थः- दुई परिवेष भए सेनापतिलाई र तीन भए राजालाई नष्ट पार्दछ । मण्डल अन्तर्गत शनि समाविष्ट भए त्यो वर्ष मोटा अन्नको नाश हुन्छ ।

**रणकृद् भूमिजो जीवः सर्वेषामभयप्रदः ।**
**ज्ञः सस्यहानिदः शुक्रो दुर्भिक्षकलहप्रदः ॥७॥**

भावार्थः- मङ्गल मण्डलमा आए युद्ध हुनेछ । बृहस्पति आए सबैलाई अभय पार्लान् । बुध भए कृषी नष्ट होला तथा शुक्र भए दुर्भिक्ष र पारस्परिक कलह हुनेछ ।



**परिवेषगतः केतुर्दुर्भिक्षाकलहप्रदः ।**
**पीडा नृपवधं राहुर्गर्भच्छेदं करोति च ॥८॥**

भावार्थः- केतु सूर्य या चन्द्रमाको परिवेषमा आए दुर्भिक्ष र कलह गराउने हुन्छ तथा राहु आए पीडा, राजाको वध र गर्भपात अत्यधिक गराउने हुन्छ ।

**द्वौ ग्रहौ परिवेषस्थौ क्षितीशकलहप्रदौ ।**
**कुर्वन्ति कलहानर्घं परिवेषगतास्त्रयः ॥९॥**

भावार्थः- दुई वटा ग्रह परिवेष अन्तर्गत भए राजाहरुका बिचमा युद्ध हुन्छ । ३ ग्रह भए जन कलह होला र अन्न महँगो होला ।

**चत्वारः परिवेषस्था नृपस्य मरणप्रदाः ।**
**परिवेषगताः पञ्च बलप्रवलदा ग्रहाः ॥१०॥**

भावार्थः- चारग्रह परिवेषमा भए राजाको मृत्यु हुन्छ तथा यदि ५ ग्रह भए बलदायक र शुभ फलदायक हुन्छ ।

**एवं वक्रग्रहास्तेषामेवं फलनिरुपणम् ।**
**नृपहानिः कुजादीनां परिवेषे पृथक् पृथक् ॥११॥**

भावार्थः- यसरी नै जुन वक्री ग्रह हुन्छन् त्यसको फल पनि सम्झिनू । बेग्लाबेग्लै मङ्गल आदि ग्रह परिवेषमा जानाले राजालाई हानी हुन्छ । अर्थात पहिले जुन फल बताइएको छ त्यही फल समझिनु ग्रह वक्री मार्गी जे सुकै होस् ।

**तिथि, नक्षत्रमा परिवेष र त्यस अनुसारको फल**

**परिवेषोऽपि धिष्ण्यानां फलमेवं द्वयोस्त्रिषु ।**
**परिवेषो द्विजातीनां नेष्टः प्रतिपदादिषु ॥१२॥**

भावार्थः- यसरी नै परिवेषमा २ वा ३ नक्षत्र हुँदा पनि फल जान्नू । परेवा आदि तिथिमा परिवेष हुँदा क्रमैले ब्राह्मणदि वर्णलाई कष्टकारक हुन्छ ।

**पञ्चम्यादिषु तिसृषु ह्यशुभो नृपतेस्तथा ।**

**अष्टम्यां युवराजस्य परिवेषोऽप्यभीष्टदः ॥१३॥**

भावार्थः- परेवादेखि चतुर्थीसम्मको परिवेष ब्राह्मणका लागि अशुभ हुन्छ । पञ्चमी, षष्ठी, र सप्तमीको परिवेष राजा तथा क्षत्रियका लागि अशुभ हुन्छ । अष्टमीको परिवेष युवराजका लागि शुभ र अरुका लागि अशुभ हुन्छ ।

**ततस्तिसृषु तिथिषु नृपाणामशुभप्रदाः ।**
**पुरोहितस्य द्वादश्यां विनाशाय भवेदसौ ॥१४॥**
**सैन्यक्षोभस्त्रयोदश्यां नृपरोधमथापि वा ।**
**राजपत्न्यश्चतुर्दश्यां परिवेषो गदप्रदः ॥१५॥**

भावार्थः- नवमी, दशमी र एकादशीमा परिवेष भए राजाका लागि अशुभ, द्वादशीको परिवेष राजाको पुरोहितको नाश, त्रयोदशीको सेनालाई कष्ट तथा राज्यमा अवरोध दिने हुन्छ भने चतुर्दशीकोले रानीलाई कष्ट वा रोग हुन्छ ।

**परिवेष पञ्चदश्यां क्षितीशानामनिष्टदः ।**
**परिवेषस्यमध्ये वा वाह्ये रेखा भवेद्यदि ॥१६॥**

**स्थायिनां मध्यमानेष्टा यायिनां पार्श्वसंस्थिता ।**
**प्रावृड्ऋतौ च शरदि परिवेषो जलप्रदः ॥**
**प्रायेणान्येषु ऋतुषु तदुक्त फलदायिनः ॥१७॥**

भावार्थः- पूर्णिमाको परिवेष राजाहरुका लागि अनिष्टकारक हुन्छ । परिवेषको बीचमा रेखा भए त स्थायी राजाका लागि सामान्य फल दिने हुन्छ । बाहिर रेखा भए आक्रमण गर्ने राजाका लागि अशुभ हुन्छ । वर्षा र शरद ऋतुको परिवेष जलप्रद र अरु ऋतुको परिवेष सामान्य फल दिने हुन्छ ।

इति श्रीनारदीयसंहितायां परिवेषलक्षणाध्यायः चतुश्चत्वारिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत परिवेष सम्बन्धी कुरा बताइएको चौवालिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्धारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चचत्वारिंशोऽध्यायः

### इन्द्रचापलक्षणाध्यायः

#### इन्द्रधनु

नानावर्णांशवो भानोः साभ्रवायुविघट्टिताः ।
यद्व्योम्नि चापसंस्थानमिन्द्रचापं प्रदृश्यते ॥१॥
अथवा शेषनागेन्द्र दीर्घनिश्वाससम्भवम् ।

भावार्थः- सूर्यका अनेक रङ्गका किरण वायु र बादलका योगबाट अनेक प्रकारका रङ्गले रङ्गिन भई आकाशमा धनुषको आकारमा देखिन्छ, जसलाई इन्द्रधनुष भनिन्छ । अथवा शेषनागले ठूलो सास फेर्दा त्यो विषका प्रभावले इन्द्रधनुष बन्दछ ।

#### इन्द्रधनुष लाग्ने दिशा, रङ र स्थान अनुसारको फल

विदिक्षुजं दिक्षुजञ्च ताद्दिङ्नृपविनाशनम् ॥२॥
पीतपाटलनीलैश्च वह्नि शस्त्रास्त्रभीतिदम् ।
वृक्षजं व्याधिदञ्चापं भूमिजंसस्यनाशनम् ॥३॥
अवृष्टिदं जलोदद्भूतं वाल्मीके युद्धभीतिदम् ।
अवृष्टौ वृष्टिदश्चैन्द्रचांदिशि वृष्ट्यामवृष्टिदम् ॥४॥
सदैववृष्टिदं पश्चाद्दिशोरितरयोस्तथा ।
रात्र्यामिन्द्रधनुः प्राच्यां नृपहानिभवेद्यदि ॥५॥
याम्यां सेनापतिं हन्ति पश्चिमे नायकोत्तमम् ।
मन्त्रिणं सौम्यदिग्भागे सचिवं कोणसम्भवम् ॥६॥
रात्र्यामिन्द्रधनुः शुक्लवर्णाढ्यं विप्रपूर्वकम् ।
हन्ति यद्दिग्भवं स्पष्टं तद्दिगीशनृपोत्तमम् ॥७॥
अवनीगाढमच्छिन्नं प्रतिकूलधनुद्वयम् ।
नृपान्तकृद्यदि भवेदानुकूल्यं न तच्छुभम् ॥८॥

भावार्थः- त्यो जुन दिशा वा कुनामा देखिन्छ त्यो देशका राजाको विनाश हुन्छ । पहेँलो, गुलाफी, तथा नीलो रङ्गको इन्द्रेणी अग्निभय तथा युद्धभय गराउने हुन्छ । इन्द्रेणी पानीमा देखिए

सुक्खाको सूचक, धमिराको गोलाबाट उत्पन्न भए युद्धको डर पैदा गराउने, पूर्वतिर देखिए बिना मौसमको वर्षा गराउने र वर्षाकालमा देखिए सुक्खाले गर्दा अकाल पर्ने हुन्छ । पश्चिम वा अरु दिशामा (पूर्व बाहेक) देखिए सधैं वृष्टि हुन्छ । रातमा पूर्वमा इन्द्रेणी देखिए राजाको नाश हुन्छ । दक्षिणको इन्द्रेणीले सेनापतिलाई, पश्चिमकोले सरदारलाई, उत्तरकोले मन्त्रीलाई तथा उपदिशाकोले पनि मन्त्रीलाई कष्ट दिने हुन्छ । रातमा पूर्वमा सेतो इन्द्रेणी देखिए ब्राह्मणलाई कष्ट दिन्छ अर्थात सेतोले ब्राह्मणलाई, रातोले क्षत्रियलाई पहेँलोले वैश्यलाई र कालोले शुद्रलाई कष्ट दिने हुन्छ । जुन दिशामा प्रष्ट इन्द्रेणी देखिन्छ त्यस दिशाका राजालाई नाश गर्दछ । सुन्दर र पूर्ण इन्द्रेणी भूमीमाथि शुभ फलदायक हुन्छ । यदि दुई वटा इन्द्रधनुष देखिए अशुभ हुन्छ । राजाको नाश हुन्छ र अनुकूल फल हुँदैन ।

इति श्रीनारदीयसंहितायां इन्द्रचाप लक्षणाध्यायः पञ्चचत्वारिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत इन्द्रेणी सम्बन्धी कुरा बताइएको पैंतालिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# षट्चत्वारिंशोऽध्यायः

## गन्धर्वनगर दर्शनाध्यायः

### गन्धर्वनगर

**गन्धर्वनगरं दिक्षु दृश्यतेवनिष्टदं क्रमात् ।**
**भूभुजां वा चमूनाथसेनापतिपुरोधसाम् ॥१॥**
**सित, रक्त, पीत कृष्णं विप्रादीनामनिष्टदम् ।**
**रात्रौ गन्धर्वनगरं धराधीशविनाशनम् ॥२॥**
**इन्द्रचापाग्निधूमाभं सर्वेषामशुभप्रदम् ।**
**चित्रवर्णं चित्ररुपं प्राकारध्वजतोरणम् ॥३॥**
**दृश्यते चेन्महायुद्धमन्योन्यं धरणीभुजाम् ॥४॥**

भावार्थः- पूर्व आदि दिशामा यदि गन्धर्वनगर देखिन्छ भने राजा, सेनापति, मन्त्री र राज पुरोहितलाई क्रमशः नष्ट पार्दछ । सेतो, रातो, पहेँलो र कालो रङ्गको गन्धर्वनगर क्रमैले चार वर्णलाई अनिष्टसूचक हुन्छ, रातमा देखिए राजाको नाश हुन्छ । गन्धर्वनगर यदि इन्द्रेणी, अग्नि वा धूमजस्तै देखिए सबैका लागि अनिष्टसूचक हुन्छ । चित्रवर्ण, चित्ररुप, किल्ला, ध्वजा वा तोरणका आकारको देखिए राजाहरुका बीचमा युद्ध हुन्छ ।



नोटः- सहर गाउँ आदिको त्यस्तो आभास जुन आकाश वा जमिनमा देखिन्छ । जब गर्मीको दिनमा मरुभूमि या समुद्रमा वायुका तहको घनत्व गर्मीको कारणले असमान हुन जान्छ, त्यस वेला प्रकाशको गतिको विच्छेदबाट अर्को सहर, गाउँ, रूख, ढुङ्गा आदिको प्रतिबिम्ब उल्टेर पृथ्वीमा पर्न जान्छ, जसबाट कहिले टाढाको गाउँ, सहर या उल्टो मानिस नजिकमा तिरमिर तिरमिर भएर देखिन आउँदछ । यो दृष्टिदोष वायुको असमान तहको कारणले गर्दा हुने गर्दछ । यसलाई गन्धर्वनगर भनिन्छ ।

इति श्रीनारदीयसंहितायां गन्धर्वनगर दर्शनाध्यायः षट्चत्वारिंशत्तमः

*

नारदीय संहिता अन्तर्गत गन्धर्वनगर सम्बन्धी कुरा बताइएको छयालिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

# सप्तचत्वारिंशोऽध्यायः

## प्रतिसूर्यलक्षणाध्यायः

### प्रतिसूर्य देखिएको फल

**प्रतिसूर्यनिभः स्निग्धः सूर्यः पार्श्वे शुभप्रदः ।**
**वैडूर्यसदृशस्वच्छः शुक्लोवाऽपि सुभिक्षाकृत् ॥१॥**
**पीताभो व्याधितः कृष्णो मृत्युदो युद्धदारुणः ।**
**माला चेत्प्रतिसूर्याणां शश्वत् चौर भयप्रदा ॥२॥**
**जलदोदक् प्रतिसूर्यो भानोर्याम्येनिलप्रदः ।**
**उभयस्थोम्बुभयदो नृपहोपर्यधो नृहा ॥३॥**
**पराभवन्ति तीक्ष्णांशो प्रतिसूर्याः समन्ततः ।**
**जगद्विनाशमाप्नोति तथा शीतद्युतेरपि ॥४॥**

भावार्थः- स्निग्ध रङ्गका विकार रहित प्रतिसूर्य अगाडीपछाडी देखिए शुभ हुन्छ । पहेँलो प्रतिसूर्य रोगदायक तथा कालो मृत्युकारक एवं दारुण युद्धकारक हुन्छ । यदि प्रतिसूर्य मालाकार देखिए निरन्तर चोरको डर हुन्छ । सूर्यभन्दा उत्तरतिर प्रतिसूर्य देखिए वर्षा हुन्छ । दक्षिणतिर देखिए वायुको वेग हुन्छ । दुई तिरै भए जलको डर हुन्छ । सूर्यको माथि नै प्रतिसूर्य भए राजाको नाश हुन्छ । तल भए जनताको नाश हून्छ । सूर्य विम्बका चारैतिर प्रतिसूर्य भएर सूर्यलाई नै तेजहीन पारे संसारकै नाश हुन्छ । यसै गरी चन्द्रमाको फल पनि जान्नू ।

नोटः यस्तो एउटा उत्पात वा कुलक्षण जसमा सूर्यका नजिकै वा सामुन्ने अर्को सूर्य देखा पर्दछ । यसलाई प्रतिसूर्य देखिनु भनिन्छ ।

इति श्रीनारदीयसंहितायां प्रतिसूर्यलक्षणाध्यायः सप्तचत्वारिंशत्तमः

✷

नारदीय संहिता अन्तर्गत प्रतिसूर्य सम्बन्धी कुरा बताइएको सतचालिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# अष्टचत्वारिंशोऽध्यायः

## निर्घातलक्षणाध्यायः

### निर्घात र त्यसको फल

वायुनाभिहतो वायुर्गगनात्पतितः क्षितौ ।
तदादीप्तः खग्रसतः स निर्घातोति दोषकृत् ॥१॥
निर्घातोऽर्कोदये नेष्टः क्षितीशानां विनाशदः ।
आयामात्प्राक्पौरजनशुद्राणां चैव हानिदः ॥२॥
आमध्याह्ने तु विप्राणां नेष्टो राजोपजीविनाम् ।
तृतीययामे वैश्यानां जलजानामनिष्टदः ॥३॥
चतुर्थे चार्थनाशाय सन्ध्यायां हन्तिसङ्करान् ।
आद्ये यामे सस्यहानिः द्वितीये तु पिशाचकान् ॥४॥
हन्त्यर्द्धरात्रे तुरगांस्तृतीये शिल्पिलेखकान् ।
चतुर्थयामे निर्घातः पतन् हन्ति तदाजनान् ॥५॥

भीमजर्जरशब्दः स तत्र तत्र दिगीश्वरम् ॥६॥

भावार्थः- वायुद्वारा परस्पर प्रताडित वायु आकाशबाट जमिनमा जब खस्दछ तब आफ्नो गुरुवेगका कारणले गर्दा बल्दछ, त्यसलाई निर्घात भन्दछन् र यो अत्यन्त दोषकारक हुन्छ । सूर्योदयका समयको निर्घात अशुभ सूचक हुन्छ र यसमा राजाहरुको नाश हुन्छ । सूर्योदयबाट ३ घण्टाभित्र भए नागरिक र शूद्रलाई कष्ट हुन्छ । दोश्रो प्रहरसम्ममा देखिए ब्राह्मणलाई र राज कर्मचारीलाई कष्ट हुन्छ । तेश्रो प्रहरमा देखिए व्यापारी र जलचर जीवलाई कष्ट हुन्छ । चौथो प्रहरको निर्घातले धननाश, साँझकोले वर्णसङ्करलाई हानी, रातको प्रथम प्रहरकोले धान्यको हानी तथा दोश्रो प्रहरकोले पिशाचको नाश हुन्छ । आधारातमा निर्घात भए घोडालाई, तेश्रो प्रहरकोले लेखकलाई र शिल्पकर्मीलाई कष्ट दिन्छ भने चौथो प्रहरमा खसेको निर्घातले जनतालाई मार्दछ । यो निर्घात जहाँजहाँ भयङ्कर तथा जर्जर शब्द गर्दछ त्यो त्यो दिशाका राजालाई कष्टदायक हुन्छ ।

✤ इति श्रीनारदीयसंहितायां निर्घातलक्षणाध्यायोऽष्टचत्वारिंशत्तमः ✤

✷

✤ नारदीय संहिता अन्तर्गत निर्घात सम्बन्धी कुरा बताइएको अठचालिसौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ✤

✷

# एकोनपञ्चाशत्तमोऽध्यायः

## दिग्दाहलक्षणाध्यायः

### दिग्दाह र त्यसको फल

**दिग्दाहः पीतवर्णश्चेत्क्षितीशानां भयप्रदः ।**
**देशनाशायाग्निवर्णोऽरुणवर्णोऽनिल प्रदः ॥१॥**
**धूम्रः सश्य विनाशाय कृष्णः शस्त्रभयप्रदः ।**
**प्राग्दाहः क्षत्रियाणाञ्च नरेशानामनिष्टदः ॥२॥**
**आग्नेय्यां युवराजस्य शिल्पिनामशुभप्रदः ।**
**पीडां व्रजन्ति याम्यायां मूकवैश्यनराधमाः ॥३॥**
**नैऋत्यां दिशिचौराश्च पुनर्भूप्रमदां नृणाम् ।**
**प्रतीच्यां कृषिकर्तारो वायव्यां पशुजातयः ॥४॥**
**सौम्ये विप्रादि चैशान्यां वैश्यानां खण्डिनोऽखिलाः ।**
**दिग्दाहः स्वर्णवर्णाभो लोकानां मङ्गलप्रदः ॥५॥**



भावार्थः- पहेँलो भई आकाश डढे राजालाई डर दिने, अग्निवर्णको भए देशनाशक तथा रातो वर्णको भए हावाहुरी चल्नाले कष्ट हुन्छ । धूम्रवर्णको दिग्दाहले बालीनाली नष्ट गर्दछ । कालो रङ्गको दिग्दाहले हतियारको डर गराउँछ । पूर्व दिशामा हुने दिग्दाह क्षत्री तथा राजाका लागि अशुभ फल दिने हुन्छ । आग्नेयको दिग्दाह युवराज र शिल्पकारलाई अशुभ सूचक हुन्छ । दक्षिण दिशामा दिग्दाह भए लाटा, व्यापारी तथा नीचकर्म गर्नेलाई पीडा हुन्छ । नैऋत्य कोणकोले चोर तथा विवाह गर्नेलाई, पश्चिमकोले कृषकलाई, वायव्यकोले पशुलाई, उत्तरकोले ब्राह्मणलाई तथा ईशानकोले वैश्य आदि सबै जीवलाई कष्ट दिन्छ । यदि दिग्दाह सुनौलो रङ्गको भए त संसारका लागि मङ्गलकारक हुन्छ ।

नोट : एउटा विशेष किसिमको ज्वाला लप्का सहित सूर्य उदाउँदा वा अस्ताउँदा देखिन्छ, त्यसलाई आचार्यहरुले दिग्दाह भनेका छन् । सामान्य अर्थमा आकाश डढेको जस्तो राता देखिनुलाई दिग्दाह भनिएको छ ।

इति श्रीनारदीयसंहितायां दिग्दाहलक्षणाध्यायः एकोनपञ्चाशत्तमः

✷

नारदीय संहिता अन्तर्गत दिग्दाह सम्बन्धी कुरा बताइएको उनन्चासौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# पञ्चाशत्तमोऽध्यायः

## रजोलक्षणाध्यायः

### वायुमण्डलको धूलो र त्यसको फल

**सितेन रजसाछन्नादिग्ग्रामवनपर्वताः ।**
**यथा तथा भवन्त्येते निधनं यान्ति भूमिपाः ॥१॥**
**रजः समुद्भवो यस्यां दिशि तस्यां विनाशनम् ।**
**तत्र तत्रापि जन्तूनां हानिदः शस्त्रकोपतः ॥२॥**
**मन्त्रिजनपदानां च व्याधिदं चासितं रजः ।**
**अर्कोदये विजृम्भन्ति गगनं स्थगयन्ति च ॥३॥**
**दिनद्वयञ्च त्रिदिनमत्युग्रभयदं रजः ।**
**रजो भवेदेकरात्रं नृपं हन्ति निरन्तरम् ॥४॥**
**परचक्रागमं न स्याद्द्विरात्रं सततं यदि ।**
**क्षामडामरमातङ्कस्त्रिरात्रं सततं यदि ॥५॥**
**ईतिदुर्भिक्षमतुलं यदि रात्रचतुष्टयम् ।**
**निरन्तरं पञ्चरात्रं महाराजविनाशनम् ॥६॥**
**ऋतावन्यत्र शिशिरात्सम्पूर्ण फलदं रजः ।।**

भावार्थः- दिशा, गाऊँ, वन तथा पर्वत यदि सेतो धुलोले ढाकेको छ भने राजाको मृत्यु हुन्छ । जुन दिशामा आँधि उठ्दछ त्यस दिशामा रहने प्राणीहरुका लागि हतियारको डर हुने हुन्छ । कालो रङ्गको धूलो मन्त्री तथा जनपदका लागि व्याधिकारक हुन्छ । सूर्योदयकालमा धूलो उठेर यदि आकाशमा फैलिन्छ भने दुई वा तीन दिनसम्म ठूलो हुरीको प्रकोप रहन्छ । एक रातसम्म आकाशमा धूलो बसिरहे राजाको नाश हुन्छ । दुई रातसम्म आकाशमा अनवरत धूलो बसिरहे अन्य राजाको आगमन हुँदैन । तीन रातसम्म बसे दुष्ट तथा लुटेराको प्रजामा डर व्याप्त हुन्छ एवं जनता रोगले कष्टमा पर्दछन् । चार रातसम्म आकाशमा धूलो रहे ईति भय र दुर्भिक्ष हुन्छ । पाँच रात रहे महाराजको विनाश हुन्छ । शिशिर ऋतु बाहेकका समयमा आँधि फलदायक हुन्छ अर्थात शिशिर ऋतुमा आँधी चलेको कुनै फल हुँदैन ।

इति श्रीनारदीयसंहितायां रजोलक्षणाध्यायः पञ्चाशत्तमः

*

नारदीय संहिता अन्तर्गत धुलो सम्बन्धी कुरा बताइएको पचासौं अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

*

## एकपञ्चाशत्तमोऽध्यायः

### भूकम्पक्षणाध्यायः

### भूकम्पको कारण

भूभारखिन्ननागेन्द्रदीर्घनिःश्वाससम्भवः ।
भूकम्पः सोऽपि जगतामशुभाय भवेत्तदा१ ॥१॥

भावार्थः- भूमिको बोझले थाकेका भगवान शेषनागले जब लामो श्वास फेर्दछन् तब भूकम्प जान्छ ।

### भूकम्पको फल

यामक्रमेण भूकम्पो द्विजातीनामनिष्टदः ।
अनिष्टदो क्षितीशानां सन्ध्ययोरुभयोरपि ॥२॥
अर्यमाद्यानिचत्वारि दस्रेन्द्वदिति भानि च ।
वायव्यमण्डलं त्वेतदस्मिन्कम्पो भवेद्यदि ॥३॥
नृपसस्य-वणिग्वेश्याशिल्पवृष्टिविनाशदः ।
पुष्यद्विदैवभरणी पितृभाग्यानलाऽजपात्१ ॥४॥
आग्नेयमण्डलं त्वेतदस्मिन्कम्पोभवेद्यदि ।
नृपवृष्टयर्घनाशाय हन्ति शाम्बरटङ्कणान् ॥५॥
अभिजिद्धातृ-वैश्वेन्द्रवसुवैष्णवमैत्रभम् ।
वासवं मण्डलं त्वेतदस्मिन् कम्पो भवेद्यदि ॥६॥
राजनाशाय कोपाय हन्ति माहेयदर्दुरान् ।
मूलाहिर्बुध्न्यवरुणाः पौष्णमार्द्राहिभानि च ॥७॥
वारुणं मण्डलं त्वेतदस्मिन् कम्पो भवेद्यदि ।
राजानाशकरोहन्ति पौण्ड्रचीनपुलिन्दकान् ॥८॥



भावार्थः- प्रहर अनुसार ब्राह्मण आदि वर्णका लागि भूकम्प शुभ फलदायक हुन्छ । बिहानबेलुकी सन्ध्यामा भूकम्प गए राजालाई कष्ट हुन्छ । उत्तराफाल्गुनीबाट ४ नक्षत्र, अश्विनी, मृगशिरा र पुनर्वसु यि नक्षत्रलाई 'वायव्यमण्डल' भनिन्छ । यसमा भूकम्प गए राजा, बालीनाली, व्यापारी, वेश्या, शिल्पकार र वर्षाको विनाश हुन्छ । पुष्य, विशाखा, भरणी, मघा, पूर्वफाल्गुनी, कृत्तिका, पूर्वभाद्रपदा यि नक्षत्रलाई 'अग्निमण्डल' मा पर्दछन् । यसमा भूकम्प

गए राजाको नाश, अवृष्टि र महँगी हुन्छ तथा शाम्बर? र सुहाग आदि वस्तु महँगा हुन्छन् । अभिजित्, रोहिणी, उत्तराषाढा, ज्येष्ठा, धनिष्ठा, श्रवण र अनुराधा यि 'वासवमण्डल' हुन् । यिनमा भूकम्प गए राजाको नाश हुन्छ तथा राजाहरुका बिचमा परस्परमा शत्रुता बढ्दछ । त्यस्तै माहेय र दर्दुर देशको नाश हुन्छ । मूल, उत्तरभाद्रपदा, शतभिषा, रेवती, आर्द्रा र अश्लेषा यि नक्षत्र 'वरुणमण्डल' का हुन् । यिनमा भूकम्प भए राजाको नाश हुन्छ तथा पौण्ड्र, चीन र पुलिन्द देशको नाश हुन्छ ।

इति श्रीनारदीयसंहितायां भूकम्पलक्षणाध्यायः एकपञ्चाशतम्

✷

नारदीय संहिता अन्तर्गत भूकम्प सम्बन्धी कुरा बताइएको एकाउन्नौ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

# द्विपञ्चाशत्तमोऽध्यायः

## नक्षत्रगुणाध्यायः

### अश्विनी नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**सुरूपः सुभगो रूक्षो मतिमान्भूषणप्रियः ।**
**अङ्गनावल्लभः शूरो यो जातश्चाश्विभेनरः ॥१॥**

भावार्थः- अश्विनी नक्षत्रमा जन्मने व्यक्ति सुन्दर, ऐश्वर्यशाली, रुक्षवर्ण, बुद्धिमान्, आभूषण प्रिय, स्त्रिको प्रिय तथा बहादुर हुन्छ ।

### भरणी नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**कामोपचारकुशलः सत्यवादी दृढव्रतः ।**
**आरोगः सुभगो जातो भरण्यां लघुभुक्सुखी ॥२॥**

भावार्थः- भरणी नक्षत्रमा जन्मने व्यक्ति कामशास्त्रमा निपुण, सत्यवादी, दृढव्रती, निरोगी, सुन्दर, ऐश्वर्यले युक्त, अल्पाहारी र सुखी हुन्छ ।

### कृत्तिका नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**तेजस्वी मतिमान्दाता बहुभुक्प्रमदाप्रियः ।**
**गम्भीरः कुशलो मानी वह्निनक्षात्रजः शुचिः ॥३॥**

भावार्थः- कृत्तिका नक्षत्रमा जन्मने व्यक्ति तेजस्वी, बुद्धिमान, दाता, दीर्घभोजी, स्त्रीलाई धेरै माया गर्ने, गम्भीर, चतुर तथा मान्नीय हुन्छ ।

### रोहिणी नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**सुरूपः स्थिरधीर्मानी भोगवान्सुरतप्रियः ।**
**प्रियवाक्चतुरो दक्षस्तेजस्वी ब्रह्मधिष्ण्यजः ॥४॥**

भावार्थः- रोहिणी नक्षत्रमा जन्मने व्यक्ति सुन्दर, स्थिर बुद्धि भएको, मानी, भोगी, कामी, प्रिय बोल्ने, चतुर, दक्ष र तेजस्वी हुन्छ ।

मृगशिरा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**उत्साही चपलो भीरुर्धनी सामप्रियः शुचिः ।**
**आगमज्ञः प्रभुर्विद्वानिन्दुनक्षत्रजः सदा ॥५॥**

भावार्थः- मृगशिरा नक्षत्रमा जन्मने व्यक्ति चञ्चल, उत्साही, डरछेरुवा, धनी, साम(गान)प्रिय, पवित्र, शास्त्रज्ञ, प्रभु र विद्वान हुन्छ ।

आर्द्रा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**अविचारपरः क्रूरः क्रयविक्रयनैपुणः ।**
**गविहिंस्रश्चण्डकोपी कृतघ्नः शिवधिष्ण्यजः ॥६॥**

भावार्थः- आर्द्रा नक्षत्रमा जन्मने व्यक्ति अविचारी, क्रूर, व्यापारमा निपुण, व्यवहारमा निपुण, हिंसा गर्ने खालको, रिसाहा र कृतघ्न हुन्छ ।

पुनर्वसु नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**दुर्मेधा वा दर्शनीयः परस्त्रीकार्यनैपुणः ।**
**सहिष्णुरत्यसन्तुष्टः शीघ्रगोऽदितिधिष्ण्यजः ॥७॥**

भावार्थः- पुनर्वसु नक्षत्रमा जन्मने व्यक्ति दुष्ट बुद्धिको, दर्शनीय, परस्त्रीकार्यमा दक्ष, सहनशील, असन्तोषी र छिटोछिटो हिँड्ने हुन्छ ।

पुष्य नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**पण्डितः सुमनः शूरः कृपालुर्धार्मिकोधनी ।**
**कलाभिज्ञः सत्यवादीकामीपुष्यर्क्षजो लघुः ॥८॥**

भावार्थः- पुष्य नक्षत्रमा जन्मने व्यक्ति पण्डित, ऐश्वर्यवान, पराक्रमी, दयालु, धार्मिक, धनी, कलाकार, सत्यवादी र सरल स्वभावको हुन्छ ।

अश्लेषा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**श्रेष्ठो धूर्तः क्रूरशुरौ परदारतः शठः ।**
**अवक्रो व्यसनी दान्तः सार्पनक्षत्रजो नरः ॥९॥**

भावार्थः- अश्लेषा नक्षत्रमा जन्मने व्यक्ति श्रेष्ठ, धूर्त, क्रूर, शूरवीर, परस्त्रीगामी, मूर्ख, व्यसनी वा जितेन्द्रीय हुन्छ ।

मघा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**शूरः स्थूलहनुः कुक्षो कोपवक्तासहः प्रभुः ।**
**गुरुदेर्वाचने सक्तस्तेजस्वी पितृधिष्ण्यजः ॥१०॥**

भावार्थः- मघा नक्षत्रमा जन्मने व्यक्ति शूरवीर, ठूलो च्यापु भएको, ठूलो पेट भएको, क्रोधपूर्ण वचन बोल्ने, असहिष्णु, समर्थ, तेजस्वी तथा देवता र गुरुको आराधनामा लागिपर्ने हुन्छ ।



पूर्वाफाल्गुनी नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**द्युतिमानटनो दाता नृपशास्त्रविशारदः ।**
**कार्याकार्यविचारज्ञो भाग्यनक्षत्रजः पटुः ॥११॥**

भावार्थः- पूर्वाफाल्गुनी नक्षत्रमा जन्मने व्यक्ति सुन्दर, घुमक्कड, दाता, राजनीतिज्ञ, गर्न हुने नहुने सोच्ने र अति चतूर हुन्छ ।

उत्तराफाल्गुनी नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**जितशत्रुः सुखी भोगी प्रमदामर्दने कविः ।**
**कलाभिज्ञः सत्यरतः शुचिः स्यादर्यमर्क्षजः ॥१२॥**

भावार्थः- उत्तराफाल्गुनी नक्षत्रमा जन्मने व्यक्ति शत्रु जित्ने, सुखी, भोगी, स्त्री भोग्नमा निपुण, कलाकार, सत्यवादी र पवित्र हृदय भएको हुन्छ ।

हस्ता नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**मेधावीतस्करोत्साही परकार्यरतो भटः ।**
**परदेशस्थितः शूरः स्त्रीलाभः सूर्यधिष्ण्यजः ॥१३॥**

भावार्थः- हस्ता नक्षत्रमा जन्मने व्यक्ति वुद्धिमान, चोर, उत्साही, पर कार्यमा रत, परदेशमा बस्ने, पराक्रमी र स्त्रीबाट लाभ पाउने हुन्छ ।

चित्रा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**चित्रमाल्याम्बरधरः कामशास्त्रविशारदः ।**
**द्युतिमान्धनवान्भोगी पण्डितस्त्वाष्ट्रधिष्ण्यजः ॥१४॥**



भावार्थः- चित्रामा जन्मने व्यक्ति राम्रा कपडा र माला लगाउने, कामशास्त्रमा विज्ञ, शोभा युक्त, तेजस्वी, धनी, भोगी र पण्डित हुन्छ ।

स्वाती नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**धार्मिकः प्रियवाक् शूरः क्रयविक्रयनैपुणः ।**
**कामी बहुसुतो दान्तो विद्यावान् मारुतर्क्षजः ॥१५॥**

भावार्थः- स्वातीमा जन्मने व्यक्ति धार्मिक, मिठो बोल्ने, पराक्रमी, किनबेचमा निपुण, कामी, धेरै सन्तान हुने, जितेन्द्रीय र विद्वान हुन्छ ।

विशाखा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**अन्यायोपरतः श्लक्ष्णो मायापटुरनुद्यमः ।**
**जितेन्द्रियोऽर्थवाँलुब्धो विशाखर्क्षसमुद्भवः ॥१६॥**

भावार्थः- विशाखा नक्षत्रमा जन्मने व्यक्ति अन्यायी, चतुर, मायावी, उद्यमहीन, जितेन्द्रिय, धनी र लोभी हुन्छ ।

अनुराधा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**नृपकार्यतः शूरो विदेशस्थाङ्गनापतिः ।**
**सुरुपच्छन्नपापश्च पिङ्गलो मैत्रधिष्ण्यजः ॥१७॥**

भावार्थः- अनुराधामा जन्मने व्यक्ति राजकार्यमा निपुण, पराक्रमी, परदेशवासी, स्त्रीहरुको प्रेमी, सुन्दर, लुकेर पाप गर्ने तथा कैलो रङ्गको हुन्छ ।

ज्येष्ठा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**बहुव्यपरः क्लेशसहः कामी दुरासदः ।**
**क्रूरचेष्टो मृषाभाषी धनवान्निन्द्रधिष्ण्यजः ॥१८॥**

भावार्थः- ज्येष्ठा नक्षत्रमा जन्मने व्यक्ति खर्चालु, कष्ट सहने, कामी, समयमा भेट्ने, क्रूर कार्यमा लाग्ने, भूटो र धनी हुन्छ ।



मूल नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**हिंस्रोमानी च भोगी च परकार्यप्रकाशकः ।**
**मिथ्योपचारस्त्रीलोलः श्लक्ष्णो नैऋतधिष्ण्यजः ॥१९॥**

भावार्थः- मूल नक्षत्रमा जन्मने व्यक्ति हिंसक, अभिमानी, भोगी, परन्निदक, भूटो, स्त्रीचपल र चतुर हुन्छ ।

पूर्वाषाढा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**सुकलत्रः कामचारः कुशलो दृढसौहृदः ।**
**क्लेशभाग्वीर्यवान्मानी जलनक्षत्रसम्भवः ॥२०॥**

भावार्थः- पूर्वाषाढा नक्षत्रमा जन्मने व्यक्ति सुन्दर पत्नी हुने, कामी, चतुर, श्रेष्ठ मित्रता गाँस्ने, दुःख सहने, बलियो र अभिमानी हुन्छ ।

उत्तराषाढा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**नीतिज्ञो धार्मिकः शूरो बहुमित्रो विनीतवान् ।**
**सुकलत्रः सुपुत्राढ्यश्चोत्तराषाढसम्भवः ॥२१॥**

भावार्थः- उत्तराषाढा नक्षत्रमा जन्मने व्यक्ति नीतिज्ञ, धार्मिक, शूर, नम्र, मित्र भएको, सुन्दर पत्नी भएको र सुन्दर अनुकूल पुत्र भएको हुन्छ ।

श्रवण नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**उदरे च दृढः श्रीमान्बहुवक्ता धनान्वितः ।**
**काव्योक्त सुरताभिज्ञो धार्मिकः श्रवणर्क्षजः ॥२२॥**

भावार्थः- श्रवण नक्षत्रमा जन्मने व्यक्ति लामो पेट भएको, श्रीमान, वक्ता, धनी, शास्त्र अनुसार रति गर्ने र धार्मिक हुन्छ ।

धनिष्ठा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**धार्मिको व्यसनीलुब्धो नृत्यगीताङ्गनाप्रियः ।**
**सामैकसाध्यस्तेजस्वी वीर्यवान्वसुधिष्ण्यजः ॥२३॥**

भावार्थः- धनिष्ठामा जन्मने व्यक्ति धार्मिक, व्यसनी, लोभी, नृत्य-गीत र राम्री स्त्रीको प्रिय, सामद्वारा कार्य गर्ने, तेजस्वी र बलवान हुन्छ ।

शतभिषा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**दुर्गन्धो व्यसनीक्रूरो क्षयवृद्धियुतः शठः ।**
**परदाररतः शूरः शततारर्क्षसम्भवः ॥२४॥**

भावार्थः- शतभिषा नक्षत्रमा जन्मने व्यक्ति दुर्गन्धी, व्यसनी, क्रूर, क्षयवृद्धिका रोगले ग्रस्त, मूर्ख, परस्त्रीगामी र पराक्रमी हुन्छ ।

पूर्वभाद्रपदा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**उद्विग्नः स्त्रीजितः सौम्यः परन्निदापरायणः ।**
**दाम्भिको दुःसहः शूरश्चाजपादधिष्ण्यसम्भवः ॥२५॥**

भावार्थः- पूर्वभाद्रपदा नक्षत्रमा जन्मने व्यक्ति उद्विग्नमन भएको, जोइटिङ्ग्रे, सौम्य, परनिन्दामा लाग्ने, पाखण्डी, दुःसाहसी र शूर हुन्छ ।

उत्तरभाद्रपदा नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**प्रजावान्धार्मिकोवक्ता जितशत्रुः सुखी विभुः ।**
**दृढव्रतः सदाकामी अहिर्वुध्न्यर्क्षसम्भवः ॥२६॥**

भावार्थः- उत्तरभाद्रपदा नक्षत्रमा जन्मने व्यक्ति सन्तानवान, धार्मिक, वक्ता, शत्रुहन्ता, सुखी, समर्थ र दृढव्रती एवं कामी हुन्छ ।



रेवती नक्षत्रमा जन्मिएका व्यक्तिको लक्षण

**रूपबान्धनवान्भोगी पण्डितश्च जलार्थभुक् ।**
**कामी च दुर्वृतः शूरः पौष्णजः परदेशगः ॥२७॥**

भावार्थः- रेवतीमा जन्मने व्यक्ति रुपवान, धनी, भोगी, पण्डित, जलबाट पाइने धनको भोक्ता, कामी, शूर, परदेशी तथा दुष्ट आचरणको हुन्छ ।

इति श्रीनारदीयसंहितायां नक्षत्रगुणाध्यायो द्विपञ्चाशत्तमः

✷

नारदीय संहिता अन्तर्गत नक्षत्रका गुण सम्बन्धी कुरा बताइएको बाउन्नौ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## त्रिपञ्चाशत्तमोऽध्यायः
### मिश्रप्रकरणम्, मलमासाद्यनेकलक्षणाध्यायः

अधिमास र क्षयमास

असङ्क्रान्तिर्द्विसङ्क्रान्तिः संसर्पाहस्पती समौ ।
मासौ तु वहवश्चान्द्रास्त्वधिमासः परः क्षयः ॥१॥

भावार्थः- सङ्क्रान्ति नभएको र दुई सङ्क्रान्ति परेका अवस्तालाई क्रमैले 'संसर्प' र 'अहस्पति' भनी बताइएको छ । यी चान्द्रमासका भेद हुन् जसलाई अधिमास र क्षयमास पनि भनिन्छ ।

ग्रहको भूमि

हिमाद्रिगङ्गयोर्मध्ये सुरार्चितवसुन्धरा ।
गोदावरीकृष्णवेण्योर्मध्ये काव्यवसुन्धरा ॥२॥
विन्ध्यगोदावरीमध्ये भूमिः सूर्यसुतस्य च ।
विन्ध्याद्रिगङ्गयोर्मध्ये या भूमिः सा बुधस्य च ॥३॥
या वेणीलङ्कयोर्मध्ये धरात्मजवसुन्धरा ।
समुद्रयन्त्रितक्षोणीनाथौ सूर्यहिमद्युति ॥४॥

भावार्थः- हिमालय र गङ्गाको बीचमा रहेको भूभागलाई बृहस्पतिको तथा गोदावरी र कृष्णवेणीको बीचमा रहेको भूभागलाई शुक्रको भूमि भनिएको छ । विन्ध्याचल र गोदावरीको बीचको भूभागलाई शनिको तथा विन्ध्य पर्वत र गङ्गाको बीचको भूमिलाई बुधको भूमि भनिएको छ । वेणी नदी र लङ्काको बीचको भूभाग मङ्गलको तथा समुद्रले ढाकिएको भूमिको मालिक सूर्य र चन्द्रमा हुन् भनिएको छ ।

दीपावली र तेल-स्नान

इषमासि चतुर्दश्यामिन्दुक्षयतिथावपि ।
ऊर्जादौ स्वातिसंयुक्ते तदादीपावली भवेत् ॥५॥
तैले लक्ष्मीर्जले गङ्गा दीपावल्यां तिथौ भवेत् ।
अलक्ष्मी परिहारार्थमभ्यङ्गस्नानमाचरेत् ॥६॥
इन्दुक्षये च सङ्क्रान्तौ वारे पाते दिनक्षये ।

**तत्राभ्यङ्गे ह्यदोषाय प्रातः पापानुपत्तये ॥७॥**

भावार्थः- आश्विन कृष्ण चतुर्दशी वा औंसीमा तथा कार्तिक कृष्णपक्षमा स्वाती नक्षत्रले युक्त भएका दिन जब दिपावली हुन्छ तब त्यो दिपावलीका दिन जलमा गङ्गाजीको र तेलमा लक्ष्मीको वास हुन्छ । त्यसैले दरिद्रता र दुःख नाश गर्नका लागि शरीरमा तेल लगाएर नुहाउनु पर्दछ । औंसी तथा सङ्क्रान्तिका दिन, व्यतिपातका दिन, र तिथिक्षयका दिन बिहान यदि तेल लगाएर नुहाउने हो भने सबै पाप नष्ट हुन्छ ।

### भाद्रकृष्ण अष्टमीको व्रत र दान

**मासिभाद्रपदे कृष्णे रोहिणीसहिताष्टमी ।**
**जयन्तीनाम सा तत्र रात्रौ जातो जनार्दनः ॥८॥**
**उपोष्य जन्मचिह्नानि कुर्याजागरणञ्च यः ।**
**अर्द्धरात्रयुताष्टम्यां सोश्वमेधफलं लभेत् ॥९॥**

भावार्थः- भाद्र कृष्ण अष्टमी रोहिणीले युक्त भए त्यसलाई 'जयन्ती' भनिन्छ । यसमा श्रीकृष्णको जन्म भएको थियो । भगवानको जन्मतिथिको व्रत गरेर शक्ति अनुसार जागराम बस्नू । जसले अर्द्धरात्रीकालिक अष्टमीको व्रत बस्दछन् तिनलाई अश्वमेध यज्ञ गरेको फल प्राप्त हुन्छ ।

### श्रावण र भाद्रका दान व्रत

**रोहिणी सहिताष्टम्यां श्रावणे मासि वा तयोः ।**
**श्रावणे मासि वा कुर्यात् रोहिणी सहितातयोः ॥१०॥**
**मासि भाद्रपदे शुक्ले पक्षे ज्येष्ठर्क्षसंयुते ।**
**रात्रौ तस्मिन्दिने कुर्याज्ज्येष्ठायाः परिपूजनम् ॥११॥**

भावार्थः- रोहिणी युक्त अष्टमी भए श्रावणमा पनि सो 'जयन्ती' नामले चिनिन्छ । त्यसैले अर्द्धरात्रिव्यापिनी अष्टमीमा रोहिणी भए श्रावणमा पनि व्रत गर्नू । भाद्रशुक्ल अष्टमीमा यदि ज्येष्ठा नक्षत्र परे रातमा परे रात र दिनमा परे दिनमा ज्येष्ठा नक्षत्रको पूजा गर्नू ।

### शिवरात्री व्रत

**अर्द्धरात्रयुता यत्र माघकृष्णचतुर्दशी ।**
**शिवरात्रिव्रतं तत्र सोऽश्वमेधफलं लभेत्॥१२॥**

भावार्थः- माघकृष्ण चतुर्दशीका अर्द्धरात्री व्यापिनी भए त्यो दिन शिवरात्रीको व्रत गर्नाले अश्वमेध यज्ञ गरेको फल हुन्छ ।

व्रतमा तिथि ग्रहण

**नक्तव्रतेषु सा ग्राह्या प्रदोषव्यापिनी तिथिः ।**
**पूजाव्रतेषु सर्वेषु मध्याह्नव्यापिनीस्मृता ॥१३॥**

भावार्थः- रातमा गरिने व्रतमा प्रदोष व्यापिनी तथा अन्यत्र मध्याह्न व्यापिनी तिथिलाई लिनु पर्दछ ।

व्रतमा खाने समयको हिसाब

**एक भुक्तोपवासेषु या विंशघटिकात्मिका ।**
**पिष्टान्नप्राशनेष्वेव लवणाम्लविवर्जिता ॥१४॥**



भावार्थः- व्रतमा १ समय खाने भन्ने विधान छ त्यो भनेको २० घडी सम्मको हो । पीठो, नुन आदि खाने खालका व्रतमा पनि तिथिको २० घडी लिनू ।

आषाढको दान व्रत

**आषाढ सितपञ्चम्यामसम्प्राश्य उपोषितः ।**
**अर्चयेत्षड्मुखं देवमृणरोगविमुक्तये ॥१५॥**

भावार्थः- आषाढ शुक्ल पञ्चमीमा नखाई व्रत गरी ऋण तथा सबै रोगको विनाशको लागि षडानन देवताको अर्चना गर्नू ।

साउनका व्रत

**तथैव श्रावणे शुक्लपञ्चम्यां नागपूजनम् ।**
**पयः प्रदानं सर्पेभ्यो भयरोगविमुक्तये ॥१६॥**

भावार्थः- श्रावण शुक्ल पञ्चमीमा नाग देवताको पूजा गर्नू । भय तथा रोगबाट मुक्त हुन सर्पलाई दूध पियाउनू ।

भदौका व्रत

**मासिभाद्रपदे शुक्लचतुर्थ्यां गणनायकम् ।**
**पूजयेन्मोदकाहारैः सर्वविघ्नोपशान्तये ॥१७॥**

भावार्थः- भाद्रशुक्ल चतुर्थीमा सबै किसिमका विघ्न शान्त पार्न लड्डु आदि नैवेद्य चढाएर गणनायकको पूजा गर्नु पर्दछ ।

माघशुक्ल सप्तमी

**माघशुक्ले च सप्तम्यां योर्चयेद्भास्करं नरः ।**
**आरोग्यं श्रियमाप्नोति घृतपायसभक्षणैः ॥१८॥**



भावार्थः- माघशुक्ल सप्तमीमा जसले भगवान सूर्यको पूजा गरी घिउ तथा खीर चढाएर खान्छ उसले आरोग्यता र लक्ष्मी प्राप्त गर्दछ ।

वैशाखको दान व्रत

**व्यजनोपानहौ छत्रं दधिचान्नकपात्रिकाम् ।**
**वैशाखे विप्रमुखेभ्यो धर्मप्रीत्यै प्रयच्छति ॥१९॥**
**कनकान्दोलिका छत्रचामरैःस्वर्णभूषितैः ।**
**सह दिव्यान्नपानाभ्यां दत्वा स्वर्गमवाप्नुयात् ॥२०॥**

भावार्थः- जो मानिस बैशाख महिनामा पङ्खा, जुत्ता, छाता, दही, अन्न, भाँडाकुँडा आदि धार्मिक दृष्टिले मुख्य ब्राह्मणलाई दान दिन्छ तथा सुन, पालकी, छाता, चमर, सुनका गहना र उत्तम अन्न दान गर्दछ उसले स्वर्गलोकको सुख प्राप्त गर्दछ ।

### आश्विनका व्रत

**अश्वयुङ्मासि वैशाख्यामुपोष्य वृषमुत्सृजेत् ।**
**शिवप्रीत्यै भक्तियुतः स नरः स्वर्गभाग्भवेत् ॥२१॥**

भावार्थः- आश्विनशुक्ल नवमीमा भक्तिपूर्वक जसले लक्ष्मी, सरस्वती तथा शस्त्रको पूजा गर्दछ त्यो पुरुष विजयी तथा धनवान हुन्छ ।

### पूर्णिमा व्रत

**कार्तिक्यामथ वैशाख्यामुपोष्य वृषमुत्सृजेत् ।**
**शिवप्रीत्यै भक्तियुतः स नरः स्वर्गभाग्भवेत् ॥२२॥**

भावार्थः- कार्तिक वा वैशाख पूर्णिमामा विधिपूर्वक व्रत बसी जसले शिवजीलाई खुसी पार्न भक्तिपूर्वक वृषोत्सर्ग गर्दछ उ स्वर्गको भागी हुन्छ ।

### शून्य राशि



**घटान्त्योक्षनृयुग्मेष कन्याकीटतुलाधनुः ।**
**कुलीरमृगसिंहाश्च चैत्राद्याः शून्यराशयः ॥२३॥**

भावार्थः- चैत्रादि महिनामा क्रमशः कुम्भ, मीन, वृष, मिथुन, मेष, कन्या, वृश्चिक, तुला, धनु, कर्कट, मकर र सिंह-यी शून्य राशि हुन् । यिनमा कुनै शुभ कार्य नगर्नू ।

| नाम/महिना | | चैत्र | बैशाख | जेठ | असार | साउन | भदौ | असौज | कार्तिक | मंसिर | पुष | माघ | फागुन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| शून्य तिथि | शुक्ल पक्ष | ९।८ | १२ | १३ | ७ | ३।२ | १।२ | १०।११ | १४ | ७।८ | ४।५ | ६ | ३ |
| | कृष्ण पक्ष | ९।८ | १२ | १४ | ६ | ३।२ | १।२ | १०।११ | ५ | ७।८ | ४।५ | ५ | ४ |
| शून्य नक्षत्र | | रोहिणी अश्विनी | चित्रा स्वाती | उ.षा. पुष्य | पू.षा. धनि. | उ.षा. श्रवण | शत. रेवती | पूर्व भाद्रप. | कृत्तिका मघा | चित्रा विशाखा | आर्द्रा अश्विनी हस्ता | श्रवण मूल | भरणी ज्येष्ठा |
| शून्य राशि | | कुम्भ | मीन | वृष | मिथुन | मेष | कन्या | वृश्चिक | तुला | धनु | कर्कट | मकर | सिंह |

### शून्य लग्न

**तुलामृगौ प्रतिपदि तृतीयायां मृगार्कजौ ।**

**पञ्चम्यां बुध (मृग) राशीद्वौ सप्तम्यां चापचन्द्रभे ॥२४॥**
**नवम्यां हरिकीटौ द्वावेकादश्यां गुरोर्गृहे ।**
**त्रयोदश्यामथ(झष)वृषौद्द दिनदग्धाश्चराशयः ॥२५॥**

भावार्थः- परेवामा तुला र मकर, तृतीयामा सिंह र मकर, पञ्चमीमा मिथुन र कन्या तथा सप्तमीमा धनु र कर्कट यि शून्य लग्न हुन् । यिनमा शुभकार्य वर्जित छ । नवमीमा सिंह र वृश्चिक, एकादशीमा धनु र मीन, त्रयोदशीमा मीन र वृष यि शून्य राशि (लग्न हुन् । यिनमा शुभ कार्य नगर्नू ।

| तिथि | परेवा | तृतीया | पञ्चमी | सप्तमी | नवमी | एकादशी | त्रयोदशी |
|---|---|---|---|---|---|---|---|
| शून्य लग्न | तुला,मकर | सिंह,मकर | मिथुन,कन्या | धनु,कर्कट | कर्कट,सिंह | धनु,मीन | वृष,मीन |

### मासदग्ध र दिनदग्ध राशि

**मासदग्धाह्वयान् राशीन् दिनदग्धाँश्चवर्जयेत् ।**

भावार्थः- मासदग्ध र दिनदग्ध राशिहरुलाई शुभकार्यमा त्याग गर्नू ।



### मासशून्य तिथि

**अष्टमीनवमीचैत्रे पक्षयोरुभयोरपि ॥२६॥**
**एकादशीमासशून्यस्तिथयः पञ्चकीर्तिताः ।**
**वैशाखे द्वादशी शून्यापक्षयोरुभयोरपि ॥२७॥**

भावार्थः- चैत्रमहिनाका दुवै पक्षका अष्टमी र नवमी तथा वैशाखका दुवै पक्षका द्वादशी र एकादशी-यी मासशून्य तिथि हुन् भनी बताइएको छ ।

### शून्य तिथि

**ज्येष्ठे त्रयोदशीशुक्ला, कृष्णपक्षे चतुर्दशी ।**
**आषाढे कृष्णपक्षेऽपि षष्ठी शुक्लेऽथ सप्तमी ॥२८॥**
**श्रावणेऽपि द्वितीया च तृतीयापक्षयोर्द्वयोः ।**
**प्रौष्ठपदे सिते कृष्णे द्वितीया प्रथमा तथा ॥२९॥**

भावार्थः- जेठशुक्ल त्रयोदशी र जेठकृष्ण चतुर्दशी, आषाढकृष्ण षष्ठी र आषाढशुक्ल सप्तमी, श्रावणकृष्ण द्वितीया र श्रावण शुक्ल तृतीया तथा भाद्रशुक्ल द्वितीया र भाद्रकृष्ण परेवा : यी शून्य तिथि हुन् ।

सिते कृष्णेऽप्याश्वयुजि दशम्यैकादशी तथा (परे) ।
पक्षे चतुर्थी तिथयः पञ्चम्यासहितास्तथा ॥
कार्तिके च सिते पक्षे चतुर्दशी शराऽसिते ॥३०॥
मार्गेऽद्रिनाग संज्ञेऽपि पक्षयोरुभयोरपि ।
पौषे पक्षद्वये चैव चतुर्थी पञ्चमी तथा ॥३१॥
कार्तिकेमास्यमावास्यासिते पक्षे चतुर्दशी ।
पौषमासे पूर्णमासी अमावास्या तथैव च ॥३१॥
माघे तु पञ्चमी षष्ठी शुक्ले कृष्णे यथाक्रमम् ।
तृतीया च चतुर्थी च फाल्गुने सित कृष्णयोः ॥३२॥
उभयोः पक्षयोर्माघे सप्तमीचाष्टमीसिते ।
नवमीद्वादशी चैव तिथयः षट् प्रकीर्तिताः ॥३३॥



भावार्थः- आश्विन शुक्ल दशमी तथा आश्विन कृष्ण एकादशी तथा कार्तिकशुक्ल चतुर्दशी तथा कार्तिककृष्ण पञ्चमी शून्य तिथि हुन् । मंसिरका दुबैपक्षका सप्तमी र अष्टमी तथा पुसका दुवै पक्षका चतुर्थी र पञ्चमी शून्य तिथि हुन् । कार्तिककृष्ण औंसी र कार्तिकशुक्ल चतुर्दशी तथा पौषका पूर्णिमा र औंसी शून्य तिथि हुन् । माघशुक्ल पञ्चमी र माघकृष्ण षष्ठी, फाल्गुनशुक्ल तृतीया र फाल्गुनकृष्ण चतुर्थी शून्य तिथि हुन् । माघशुक्ल सप्तमी र अष्टमी तथा कृष्ण पक्षका नवमी र द्वादशी शुन्य तिथि हुन् ।

**मूलको जन्म**

यो ज्येष्ठामूलयोरन्तरालं प्रहरजः शिशुः ।
अभुक्तमूलजः सार्पमघानक्षत्रयोरपि ॥३६॥
अभुक्तमूलजं२ पुत्रं पुत्रीं वापि परित्यजेत् ।
अथवाष्टाब्दकं तातस्तन्मुखं नावलोकयेत् ॥३३॥
मूलाद्यपादजोहन्ति पितरन्तु द्वितीयजः ।
मातरन्तु तृतीयोर्थं सर्वस्वन्तु चतुर्थजः ॥३४॥

**दिवाजातस्तुपितरं रात्रौ तु जननीं तथा ।**
**आत्मानं सन्ध्ययोर्हन्ति नास्तिगण्डोनिरामयः ॥३५॥**

भावार्थः- ज्येष्ठा तथा मूल एवं अश्लेषा तथा मघाको बीचको १ प्रहरमा जन्म लिने बालकलाई अभुक्तमूलमा जन्मिएको भनिन्छ । अभूक्त मूलमा जन्मिएका छोराछोरीको परित्याग गर्नुपर्दछ वा बाबुले आठ वर्षसम्म जातकको मुख हेर्न हुँदैन । मूलको पहिलो चरणमा जन्मने बालकले पितालाई, दोश्रो चरणमा जन्मनेले मातालाई, तेश्रो चरणमा जन्मनेले धन तथा चौथो चरणमा जन्मनेले सर्वस्व विनाश गर्दछ । मूलमा दिनमा जन्मे पितालाई, रातमा जन्मे मातालाई र दुवै सन्ध्यामा जन्मे स्वयं आफैं नष्ट हुन्छ । यसैले यो मूल दोष रहित हुँदैन ।

**गण्डान्तको शान्ती**

**विधेयं शान्तिकं तत्र गण्डे दोषापनुत्तये ।**
**अरिष्टं शतशो याति सुकृते शान्तिकर्मणि ॥३७॥**
**तस्माच्छान्तिं प्रकुर्वीत प्रयत्नाद्विधिपूर्वकम् ।**
**वत्सरात्पितरं हन्ति मातरन्तु त्रिवर्षतः ॥३८॥**
**धनं वर्षद्वयेचैव श्वसुरं नववर्षके ।**
**जातं वालं वत्सरेण वर्षैः पञ्चभिरग्रजम् ॥३९॥**
**श्यालकं चाष्टभिर्वर्षैरनुक्ताह्नन्ति सप्तभिः ॥४०॥**

भावार्थः- गण्डान्तदोष हटाउन शान्ति गर्नुपर्दछ । शान्ति गराउनाले अरिष्ट नाश हुन्छ । त्यसैले प्रयत्नपूर्वक विधिपूर्वक शान्ति गर्नू । शान्ति नहुँदा १ वर्षमा पिता तथा ३ वर्षमा माताको मृत्यु हुन्छ वा मरेसरह दुःख हुन्छ । २ वर्षमा धन नाश गर्दछ, नौ वर्षमा ससुरालाई र आफैं १ वर्षमा नष्ट हुन्छ । ५ वर्षमा जेठो दाजुलाई, ८ वर्षमा सालालाई तथा अन्य नातेदारलाई ७ वर्षमा पीडा दिने हुन्छ ।

इति श्रीनारदीयसंहितायां मिश्रप्रकरणे मलमासाद्यनेकलक्षणाध्यायस्त्रिपञ्चाशत्तमः

✷

नारदीय संहिता अन्तर्गत मिश्रप्रकरण नामक त्रिपन्नौ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## चतुःपञ्चाशत्तमोऽध्यायः

### अश्वशान्ति

**अश्वशान्तिं प्रवक्ष्यामि तेषां दोषानुपत्तये ।**
**भानुवारे च सङ्क्रान्तावयने विषुवद्वये ॥१॥**

भावार्थः- घोडासम्बन्धी दोष हटाउन अब अश्वशान्तिसम्बन्धी विधिका बारेमा बताउँदछु । यस्तो शान्ति आइतबार, सङ्क्रान्तिका दिन वा जुन दिन दिनरात बराबर हुन्छ त्यो दिन गर्नु पर्दछ ।

**दिनक्षये व्यतीपाते द्वादश्यामश्विभेऽपि वा ।**
**अथवा भाष्करे स्वातीसंयुक्ते च विशेषतः ॥२॥**

भावार्थः- तिथिक्षय, व्यतिपात योग, द्वादशी तिथि, अश्विनी नक्षत्र वा विशेषतः आइतबारका दिन स्वाती नक्षत्र परेका दिनमा अश्वशान्ति गर्नु पर्दछ ।

**ईशान्यां त्वष्टभिर्हस्तैश्चतुर्भिर्वाथ मण्डपम् ।**

**चतुर्द्वारवितानस्रक्तोरणाद्यैरलङ्कृतम् ॥३॥**

भावार्थः- यसरी तिथि आदि शुभ मुहूर्त थाहा पाइसकेपछि ईशान दिशामा आठ वा चार हात बराबरको चार ढोका भएको पालसहितको चँदुवा बनाई त्यसलाई माला, तोरण आदिले सजाई मण्डप बनाउनु पर्दछ ।

**तन्मध्ये वेदिकातस्य पञ्चविंशांशमानतः ।**
**मण्डपस्य वहिःकुण्डं प्राच्यां हस्तप्रमाणतः ॥४॥**

भावार्थः- त्यस मण्डपको पच्चीसौं भाग बराबर हुनेगरी बीचमा वेदीको निर्माण गर्नू । मण्डप बाहिर पूर्वतिर एक हात नापोको कुण्ड बनाउनू ।

**वरयेच्छ्रोत्रियान् विप्रान् स्वस्तिवाचनपूर्वकम् ।**
**सूर्यपुत्रं हयारूढं पञ्चवक्त्रं त्रियम्बकम् ॥५॥**

भावार्थः- स्वस्तिवाचन गर्दै वैदिक ब्राह्मणहरूलाई वरण गर्नू । घोडामा चढेका पाँचमुख र तीन आँखा भएका सूर्यपुत्रलाई सम्झनू ।

शुक्लवर्णवसाखड्गं रैवन्तं द्विभुजं स्मरेत् ।
सूर्यपुत्र नमस्तेऽस्तु नमस्ते पञ्चवक्त्रक ॥६॥
नमोगन्धर्वदेवाय रैवन्ताय नमोनमः ।
मन्त्रेणानेन रैवन्तं वस्त्रगन्धाक्षातादिभिः ॥७॥
विधिवद्वेदिकामध्ये तण्डुलोपरि पूजयेत् ।

भावार्थः- सेता वर्णका हातमा ढाल र तरबार बोकेका दुई हात भएका रेवन्त देवतालाई सम्झनू । "सूर्यपुत्र..नमः" मन्त्र पढ्दै वेदीको बीच भागमा वस्त्र, चन्दन, अक्षता आदिले रैवन्त देवताको पूजा गर्नू ।

कार्यास्तत्रगणाः पञ्चरौद्रशाक्राश्च वैष्णवाः ॥८॥
सगाणपति सौराश्च रैवन्तस्य समन्ततः ।
ऋग्वेदादिचतुर्वेदान्यजेद्वारेषु पूर्वतः ॥९॥



भावार्थः- मण्डपमा रैवन्तका चारैतिर रुद्र, इन्द्र विष्णु, गणेश र सूर्यका गणलाई तथा मण्डपका चारै ढोकामा क्रमशः पूर्वबाट ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेदलाई पूजा गर्नू ।

रक्तवर्णान् पूर्णकुम्भान् वस्त्रगन्धाद्यलङ्कृतान् ।
पञ्चत्वक्पल्लवोपेतान् पञ्चामृत समन्वितान् ॥१०॥

भावार्थः- रातो रङका पूर्णकलशलाई वस्त्र, चन्दन आदिले सजाएर पञ्चपल्लव, पञ्चवल्कल र पञ्चामृत चढाई पूजा गरेर स्थापना गर्नू ।

द्वारेषु स्थाप्य तल्लिङ्गैर्मन्त्रैर्विप्रान् प्रपूजयेत् ।
एवं तु पूजामाचार्यः कृत्वा गृह्यविधानतः ॥११॥

भावार्थः- चारै ढोकामा जलपूर्ण कलश स्थापना गरिसकेपछि पूर्वबाट क्रमशः स्थापित वेद मन्त्रले चार ब्राह्मणलाई बेग्लाबेग्लै पूजा गर्नू । यसरी आफ्नो कुल मर्यादा अनुसार आचार्य पूजा गरेपछि...।

**स्थापयेत्तु व्याहृतिभिस्तस्मिन्कुण्डे हुताशनम् ।**
**ततस्तदाज्यभागान्ते मुख्याहुतिमतन्द्रितः ॥१२॥**

भावार्थः- मण्डपका सबै देवता र ब्राह्मणलाई विधिपूर्वक पूजा गर्नू अनि व्याहृति पढी कुण्डमा अग्निस्थापना गर्नू । यसपछि सावधान भएर आज्य भाग आहुति गरी त्यसपछि मुख्य आहुति हाल्नू ।

**अग्नयेस्वाहेति हुत्वा घृतेनादौ प्रयत्नतः ।**
**एवन्तु पूजामन्त्रेण ह्याद्यन्तु प्रणवेन च ॥१३॥**
**पलाशसमिदाज्यान्नैः शतमष्टोत्तरं हुनेत् ।**
**प्रत्येकं जुहुयात्भक्त्या तिलान् व्याहृतिभिस्ततः ॥१४॥**

भावार्थः- अग्नये स्वाहा मन्त्रले यत्नपूर्वक घिउको आहुति हाल्नू । त्यसपछि पलाँसका समिधा, घिउ र अन्नले १०८ आहुति हाल्नू । अनि प्रत्येक मन्त्रले व्याहृति मार्फत तिलको हवन गर्नू ।



**एकरात्रं त्रिरात्रं वा नवरात्रमथाापि वा ।**
**अनेन विधिना कुर्याद्यथाशक्त्या जितेन्द्रियः ॥१५॥**

भावार्थः- यसरी जितेन्द्रिय भई एक, तीन वा नौ रातसम्म यथाशक्ति हवन गर्नू ।

**जपादि पूर्वकं सम्यक् कर्ता पूर्णाहुतिं हुनेत् ।**
**ततो मङ्गलघोषैश्च नैवेद्यञ्च समर्पयेत् ॥१६॥**

भावार्थः- जजमानले राम्ररी जप आदि काम सकेपछि पूर्णाहुति दिनू र मङ्गलध्वनी सँगै नैवेद पनि चढाउनू ।

**ततस्ते हुतशेषेण सम्यक् कुम्भोदकैर्द्विजाः ।**
**प्रादक्षिण्य व्रजन्तोऽश्वाञ्जयन्त वलिमुत्तमम् ॥१७॥**

भावार्थः- यसपछि चार दिशाका ढोकामा पूजिएका चार ब्राह्मणले आआफ्ना कलश लिई पानीका धारा खसाल्दै दाहिनेतिरबाट घोडालाई घुम्नू र हवन गरी बचेको आहुती जयन्लाई बलि दिनू ।

**जीमूतस्येत्यनूवाकाञ्चतुर्दिक्षुविनिःक्षिपेत् ।**
**आचार्याय ततो दद्याद्दक्षिणां निष्कपञ्चकम् ॥१८॥**

भावार्थः- "जीमूतस्य.." अनुवाक् पढ्दै चारै दिशामा बलि दिनु पर्दछ । यसपछि बीस तोला सुन आचार्यलाई दक्षिणामा दिनू ।

**तदर्द्धं वा तदर्द्धं वा यथाशक्त्यनुसारतः ।**
**ऋत्विग्भ्यो दक्षिणां दद्याद्धेनुं वस्त्रं धनादिकम् ॥१९॥**

भावार्थः- पाँच निष्क, त्यसको आधा, त्यसको पनि आधा अथवा गच्छे अनुसार अन्य ब्राह्मणहरूलाई दक्षिणा दिनू । दक्षिणासँगै गाई वस्त्र, धन आदि पनि दान दिनू ।

**ब्राह्मणान् भोजयेत् पश्चाच्छान्तिवाचनपूर्वकम् ।**
**एवं यः कुरुते सम्यगश्वशान्तिमनुत्तमाम् ॥२०॥**

भावार्थः- यसपछि स्वस्तिवाचन गर्दै ब्राह्मणहरूलाई खाना खुवाउनू । यसरी विधिपूर्वक उत्तम अश्वशान्ति जसले गर्दछ ....।



**सोऽश्वाभिवृद्धिं लभते वीरलक्ष्मीं न संशयः ।**
**यज्ञेनानेन सन्तुष्टाः धातृविष्णु महेश्वराः ॥२१॥**
**आदित्याद्याग्रहाः सर्वे शीताः स्युः पितरोगणाः ।**
**लोकपालाश्च सन्तुष्टाः पिशाचाः डाकिनीगणाः ॥२२॥**
**भूतप्रेताश्च गन्धर्वा यक्षराक्षसपन्नगाः ॥२३॥**

भावार्थः- उ घोडाले समृद्ध हुन्छ र उसले शूरवीरका धन प्राप्त गर्दछ, यसमा कुनै शङ्का छैन । यसरी विधिपूर्वक गरिएको यज्ञले ब्रह्मा, विष्णु र शिव प्रसन्न हुन्छन् । सूर्य आदि नौ ग्रह, पितृगण, लोकपाल, पिशाच, डाकिनी, भूत, प्रेत, गन्धर्व, यक्ष, राक्षस र पन्नग पनि प्रसन्न हुन्छन् ।

इति श्रीनारदीयसंहितायां मिश्रप्रकरणेचाश्वशान्त्याध्यायश्चतुःपञ्चाशत्तमः

✷

नारदीय संहिता अन्तर्गत अश्वशान्ति नामक चौवन्नौ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो

✷

## पञ्चपञ्चाशत्तमोऽध्यायः

### श्राद्धलक्षणाध्यायः

#### पुत्लादाह

चतुर्दशी तिथिर्नन्दा भद्रा शुक्रारवासरौ ।
सितेज्ययोरस्तमयं द्व्यङ्घ्रिभं विषमाङ्घ्रिभम् ॥१॥
शुक्लपक्षाञ्च सन्त्यज्य पुनर्दहनमुत्तमम् ।
वसूत्तरार्द्धतः पञ्चनक्षत्रेषु त्रिजन्मसु ॥२॥
पौष्णब्रह्मर्क्षयोः पौनर्दहनं कुलनाशनम् ।
दिनोत्तरार्द्धे तत्कर्तुश्चन्द्रतारावलान्विते ॥३॥
पापग्रहे बलयुते शुक्रलग्नांश वर्जिते ।
तत्पुनर्दहनञ्चोक्तं ...।

भावार्थः- चतुर्दशी-नन्दा र भद्रा तिथि, शुक्र र मङ्गलबार, शुक्र र बृहस्पतिको अस्तकाल, द्विचरण र विषम चरण नक्षत्र तथा शुक्लपक्षलाई छाडी पुत्लादाह गर्नु उत्तम भनिएको छ । धनिष्ठा नक्षत्रको उत्तरार्द्धबाट पाँच नक्षत्र, त्रिपुष्कर योग, रेवती र रोहिणी नक्षत्रमा पुत्लादाह गर्नाले कुलको विनाश हुन्छ । तर, मध्याह्नोत्तर कालमा तथा कर्ताको चन्द्रबल, ताराबल आदि ठीक हुँदा पुत्लादहन गर्नु उत्तम हुन्छ । पापग्रह बलिया हुँदा र लग्नमा शुक्र नहुँदा पुत्लादहन गर्नु भनिएको छ ।



#### सपिण्डीकरण आदि

सपिण्डीकरणं कार्यं वत्सरे वार्द्धवत्सरे ।
त्रिमासे वा त्रिपक्षे वा मासि वा द्वादशेऽह्नि वा ॥५॥

भावार्थः- एक वर्षमा, ५ महिनामा, तीन महिनामा, ४५ दिनमा, एक महिनामा वा १२ दिनमा सपिण्डी गर्नु हितकर हुन्छ ।

एष्वेव कालेष्वेतानि ह्येकोद्दिष्टानि षोडश ।
कृत्तिकासु च नन्दायां भृगोर्वारे त्रिजन्मसु ॥६॥
पिण्डदानन्न कर्त्तव्यं कुलक्षयकरं यतः ।
त्रिजन्मसु त्रिपाद्भेषु नन्दायां भृगुवासरे ॥७॥

धातृपौष्णभयोः श्राद्धं न कर्त्तव्यं कुलक्षयात् ।
नन्दासु च भृगोर्वारे कृत्तिकायां त्रिजन्मसु ॥८॥
रोहिण्याञ्च मघायाञ्च कुर्यान्नापरपाक्षिकम् ।
सकृन्महालयेकाम्यं न्यूनश्राद्धेऽखिलेषु च ॥९॥
अतीत विषये चैव ह्येतत्सर्वं विचिन्तयेत् ।
नभस्यमासे सम्प्राप्ते कृष्णपक्षे समागते ॥१०॥
तत्र श्राद्धं प्रकुर्वीत सकृद्वाचेदशक्तिमान् ।
विशिष्टदिवसे कर्त्तुश्चन्द्रतारावलान्विते ॥११॥
नन्दाश्च तिथयो निन्द्या भूतायां शस्त्रघातिनाम् ।
द्वितीया मध्यमाज्ञेया तृतीया भरणीयुता ॥१२॥
पूज्या यदि चतुर्थी वा श्रीपदा पितृकर्मणि ।
आनन्दयोगः पञ्चम्यां याम्यर्क्षस्थे निशाकरे ॥१३॥
भोजयेद्यः पितॄँस्तत्र पुत्रपौत्रधनं लभेत् ।
यशस्करी सप्तमी स्यादष्टमी भोगदायिनी ॥१४॥
श्राद्धकर्तुश्च नवमी सर्वकामफलप्रदा ।

सूर्ये कन्यागते चन्द्रे रौद्रनक्षत्रगे यदा ॥१५॥
सप्तम्याञ्च तथाष्टम्यां नवम्याञ्च तिथौ तथा ।
योगोऽयं पितृकल्याणः पितृन्यस्मिन्प्रपूजयेत् ॥१६॥
इह सम्पदमाप्नोति पश्चात्स्वर्गमवाप्यते ।
दशम्यां पुष्यनक्षत्रे सुयोगोऽमृत संज्ञकः ॥१७॥
अर्चयेद्यः पितृंस्तत्र नित्यं तृप्तास्तु तस्य ते ।
सर्व सम्पत्प्रदाः कर्तुर्द्वादशी तिथिरुत्तमा ॥१८॥
त्रयोदश्यां चतुर्दश्यां हानिर्धनकलत्रयोः ।
अनन्तपुण्यफलदा गजच्छाया त्रयोदशी ॥१९॥
श्रार्द्धकर्मण्यमावास्या पक्षश्राद्धफलप्रदा ।
पौष्णद्वये च पुष्यचतुष्टये हस्तत्रये मैत्रचतुष्टये च ॥
सौम्यद्वये च श्रवणत्रये च श्राद्धप्रदाता बहुपुत्रवान्स्यात् ॥२०॥

भावार्थः- उपरोक्त समयमा नै १६ श्राद्ध गर्नु पर्दछ । कृत्तिका नक्षत्रमा, नन्दा तिथिमा र शुक्रबार तथा त्रिपुष्कर योगमा पिण्डदान नगर्नू । पिण्डदान माथि भनिएका निषेधित कालमा नगर्नू किन की कुलक्षय हुन्छ । त्रिपुष्कर योग, पुनर्वसु-विशाखा-पूर्वभाद्रपदा नक्षत्र र शुक्रबार; रोहिणी

तथा रेवतीमा श्राद्ध नगर्नू किनकि कुलक्षय हुन्छ । नन्दा, शुक्रबार, कृत्तिका नक्षात्र, त्रिपुष्कर योग, रोहिणी तथा मघामा सपिण्डी आदि श्राद्ध नगर्नू तर महालय श्राद्ध गर्न हुन्छ । साधारण कामनाले गरिने श्राद्धमा माथिका कुरा विचार गर्नु जरुरी छ । भाद्र कृष्णपक्ष आएपछि निर्धन हुँदा पनि मानिसले श्राद्ध अवस्य गर्नू । श्राद्धकर्ताले चन्द्र ताराबल हेरेर विशिष्ट समयमा श्राद्ध गर्नू । नन्दा तिथि (१,६,११) श्राद्धमा वर्जित छ । हतियारबाट मारिनेको श्राद्ध चतुर्दशीमा गर्नु उत्तम हुन्छ । द्वितीया मध्यम तथा भरणीयुक्त तृतीया वा चतुर्थी पूज्य हुन्छ तथा पितृकर्ममा लक्ष्मीप्रद हुन्छ । पञ्चमीमा चन्द्रमा यदि भरणी नक्षत्रका भए आनन्द योग हुन्छ । यसमा जो पितृश्राद्ध गर्दछन् तिनले छोरानाती तथा धनधान्य प्राप्त गर्दछन् । श्राद्धकर्ममा यश दिने तथा अष्टमी भोग दिने हुन्छ । नवमी तिथि श्राद्ध गर्नेलाई सर्वसिद्धि दिने हुन्छ । कन्या राशिमा सूर्य गएको बेलामा यदि चन्द्र आर्द्रा नक्षत्रमा आए तथा त्यसै दिन सप्तमी, अष्टमी वा नवमी तिथि परे त्यसलाई पितृकल्याण नामक योग भनिन्छ । यसमा शक्ति अनुसार पितृको पूजा, श्राद्ध आदि कर्म गरी गर्नु पर्दछ । माथि बताइएका योगमा पितृको पूजा गर्नेले यस लोकमा सम्पत्ति प्राप्त गर्दछ र पछि स्वर्ग प्राप्त गर्दछ । दशमी तिथिमा यदि पुष्य नक्षत्रको योग छ भने अमृतयोग हुन्छ । यसमा पितृको अर्चना गर्नेका पितृ सदा तृप्त रहन्छन् । श्राद्धगर्नेका लागि द्वादशी तिथि सर्वोत्तम सम्पत्ति दायिनी हुन्छ । त्रयोदशी र चतुर्दशीमा श्राद्ध गर्नाले धन तथा स्त्रीको हानी हुन्छ । तर त्रयोदशीमा गजच्छाया योग परे अनन्त पुण्यदायक हुन्छ । श्राद्धकर्ममा औंसी पक्षभरीको फलदायक हुन्छ । रेवती, अश्विनी, पुष्य, अश्लेषा, मघा, पूर्वाफाल्गुनी, हस्ता, चित्रा, स्वाती, अनुराधा, ज्येष्ठा, मूल, पूर्वाषाढा, मृगशिरा, आर्द्रा, श्रवण, धनिष्ठा र शतभिषा : यी नक्षत्रमा श्राद्ध गर्ने मानिस धेरै पुत्र भएको हुनेछ ।

❧ इति श्रीनारदीयसंहितायां श्राद्धलक्षणाध्यायः पञ्चपञ्चाशत्तमः ☙

❧✷☙

❧ नारदीय संहिता अन्तर्गत श्राद्धलक्षण नामक पचपन्नौ अध्यायको
मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद पूर्ण भयो ☙

❧✷☙

❧ समाप्तोऽयं ग्रन्थः ☙

❧✷☙

❧ वाग्मती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.सं., वडा नं.३, चारघर टोलमा जन्म भई सोही अञ्चल, काठमाडौं जिल्ला, गोकर्णेश्वर न.पा., वडा नं.७ मा बसोबास गर्ने मोहन प्रसाद सापकोटाद्वारा गरिएको नारदीय संहिताको नेपाली भावानुवाद पूर्ण भयो ☙

❧✷☙

सबैको सधैं कल्याण होस् !